## चतुश्चत्वारिंशोऽध्यायः　　{ ४४ अध्याय }

कीर्तिरुवाच

दुण्ढिराजावतारोऽयं ख्यातस्ते शक्तिसम्भवः ।
दुरासदवधार्थाय त्रिलोकीपालनाय च ।।१।।

एकः पादःस्थितस्तुण्डनगरे चैकपादतः ।
स्थितो दैत्यं समाक्रान्त्य वाराणस्यामिति श्रुतम् ।।२।।

उभाभ्यामपि पादाभ्यामुभयत्र स्थितिः कथम् ।
एवं मे संशयं ब्रह्मन् ! नुद त्वं सर्वविद् यतः ।।३।।

मुनिरुवाच

किमसाध्यं विश्वरूपे विश्वकर्तरि विश्वपे ।
विश्वव्यापिनि विश्वेशे दुण्ढिराजे च शासति ।।४।।

विश्वान्तर्यामिणि परे विश्वसंहारकारिणि ।
सप्तपातालचरणे स्वर्गव्यापिशिरोरुहे ।।५।।

सर्वतः पाणिचरणे सर्वतः श्रोत्रचक्षुषि ।
मनसश्च श्रुतीनाञ्च ब्रह्मादीनाञ्च योगिनाम् ।।६।।

अगम्ये तत्त्वतो वायुपृथिवीजलरूपिणि ।
यस्य रोमाञ्चरन्ध्रेषु ब्रह्माण्डानां हि कोटयः ।।७।।

भ्रमन्ति पवनोद्भूताः पतङ्गा इव व्योमनि ।
संशयो वा वितर्को वा तस्मिन् मातर्न विद्यते ।।८।।

अनेकरूपिणि विभौ प्रभुः कर्तुं चराचरम् ।
यदिच्छया भवेद् राज्ञि ! सुधा विषस्वरूपिणी ।।९।।

अमृतं विषरूपञ्च तत्र किं किं न सम्भवेत् ।
अवतारस्य देवस्य विचित्रा गतिरुच्यते ।।१०।।

कियन्तो ह्यवतारा वै कदा कुत्रेति निश्चितुम् ।
न शक्यते सुरैः सर्वैः सशेषैरपि सर्वदा ।।११।।

अतस्त्यक्त्वा तु सन्देहं कथां शृणु मयेरिताम् ।
यां श्रुत्वा सर्वधर्मज्ञे ! मुच्यते पापसञ्चयात् ।।१२।।

**कीर्तिले भनिन्** – भगवती पार्वतीबाट उत्पन्न भएका ढुण्ढिराजको यो अवतार दुरासद दैत्यको नियन्त्रण र स्वर्ग, मर्त्य एवं पातालको रक्षाका लागि भएको थियो भन्ने कुरा प्रसिद्ध छ।।१।। भगवान् श्रीगणेश तुण्ड नगरमा एउटा खुट्टाले टेकेर उँभिनुभएको छ भन्ने र वाराणसीमा अर्को खुट्टाले टेकी दैत्यलाई च्यापेर रहनुभएको भन्ने पनि सुनिएको छ। कसरी यो सम्भव हुनसक्छ ? मलाई बताउनुहोस्।।२-३।।

**मुनिले भने** – हे कीर्ति ! विश्वव्यापी रूप धारण गर्नुहुने, विश्वका स्रष्टा, विश्वका पालक, विश्वमा व्याप्त भएर रहनुहुने, विश्वका स्वामी ढुण्ढिराज भगवान्ले आफ्नो शक्तिद्वारा जगत्मा शासन गरिरहनु भएको अवस्थामा असम्भव भन्ने शब्द नै हुँदैन।।४।। विश्वमा अन्तर्यामी बनेर रहनुहुने, संसारका सबै वस्तुभन्दा पर रहनुभएका, सत्यस्वरूप, विश्वको संहार गर्ने, सातै पातालमा पाउ राख्नुहुने, स्वर्गसम्म शिर पुर्‍याउनुहुने, सर्वत्र आफ्ना खुट्टा र हातद्वारा दुनियाँको रक्षा गर्नुहुने, अनन्त कान र अनन्त नेत्र धारण गर्नुहुने, मन, वाणी, वेद, ब्रह्मा आदि देवता र योगीहरूद्वारा पनि यथार्थ रूपमा अगम्य, वायु, पृथिवी र जलरूपमा सर्वत्र व्याप्त भएर रहनुहुने, जसका रौंका प्वाल-प्वालहरूमा रहेका कोटिकोटि ब्रह्माण्डहरू हावाले उडाइएका चराहरू आकाशमा भौँतारिएझैं भौँतारिन्छन् ती परमात्मा श्रीगणेशको शक्ति र सामर्थ्यका विषयमा संशय र वितर्क गरेर पार पाउन सकिँदैन ।।५-८।। अनेक रूप धारण गर्नुहुने र अन्तर्यामी भगवान् श्रीगणेशले संसारलाई बनाउनुहुन्छ। उहाँले चाहेमा अमृत पनि विषरूपमा परिणत हुन्छ र विष पनि अमृतरूपमा परिणत हुन्छ। उहाँको इच्छा भएमा के कुरा हुन सक्दैन ? भगवान् श्रीगणेशका अवतारहरूका विचित्र रूपहरू छन्। कति अवतार भए ? कहाँ भए ? कसरी भए ? यी कुराहरूको निश्चय गर्न पनि देवता, शेषनाग र अरू शक्तिशाली मानिसहरू समर्थ छैनन्।।९-११।। त्यस कारण सन्देहलाई हटाई श्रद्धा अँगालेर तपाईँले श्रीगणेशका विषयमा सुन्नुहोस्। श्रीगणेशको

सूर्यवंशोद्भवो राजा दिवोदासोऽभवत् पुरा ।
वदान्यश्च महामानी मान्यो भूमण्डलेऽखिले ।।१३।।

वक्ता बृहस्पतिसम: सर्वज्ञ: सर्वदा शिव: ।
वेदशास्त्रपुराणानां ज्ञानी विज्ञजनप्रिय: ।।१४।।

कामिनीमोहनतनुर्जितेन्द्रियतया स्थित: ।
उपकारपरो नित्यं परद्रोहपराङ्मुख: ।।१५।।

निस्पृह: परवित्तेषु स्थूललक्ष्य: पराक्रमी ।
तपसा तस्य तुष्टेन ब्रह्मणा राज्यमुत्तमम् ।।१६।।

काश्यां वृष्टिविहीनायां दत्तं लोकोपकारिणा ।
सर्वदेवबहिष्कारात् सोऽपि जग्राह बुद्धिमान् ।।१७।।

स्वयमेवाभवत् सोऽथ रविरिन्द्रो हुताशन: ।
मरुच्चन्द्रश्च धर्मेण पालयामास तां पुरीम् ।।१८।।

तपसा तस्य सञ्जाता वृष्टिर्लोका इतस्तत: ।
अविमुक्तं समायाता: प्रशशंसुर्नृपञ्च तम् ।।१९।।

तस्य पत्नी सुशीला सा नाम्ना नाम पतिव्रता ।
धर्मशीला दानपरा पतिवाक्यपरायणा ।।२०।।

आचारं व्यवहारं वा प्रायश्चित्तमसौ नृप: ।
पण्डितै: कारयामास राजदण्डं न चाददे ।।२१।।

शिवेन मरुत: सर्वे मन्दारगिरिमन्वयु: ।
नापमृत्युर्न शोको वा नैव दु:खं हि कस्यचित् ।।२२।।

उत्पातास्त्रिविधा नासँस्तस्मिन् राज्यं प्रशासति ।
हाहाकार: शमं यातोऽनावृष्टिविहितो महान् ।।२३।।

चरित्रको चर्चा गर्दा पापबाट मुक्त भइन्छ।।१२।। पहिले सूर्यवंशमा दिवोदास नामक राजा भए । ती उदार दाता र अत्यन्त स्वाभिमानी पनि थिए । ती आफ्नो उदात्त चरित्रका कारण सम्पूर्ण पृथिवीमण्डलमा विख्यात थिए। ती वक्ताहरूमा बृहस्पतिसमान थिए । ती सर्वज्ञ थिए, सर्वदा मनमा अरूको कल्याणको चिन्तन गरिरहन्थे। ती वेद, शास्त्र र पुराणहरूका ज्ञाता थिए एवं विद्वान्हरूका प्यारा पनि थिए।।१३-१४।। दिवोदासको शरीरको बनोट र सौन्दर्य हेरेर सुन्दरीहरू मुग्ध हुन्थे, तर उनी भने वासनादेखि पर रहेका जितेन्द्रिय पुरुष थिए। उनी मन, वचन, कर्मबाट उपकार गर्न तत्पर, अरूसँग कुनै कारणबाट पनि द्रोह नगर्ने उत्तम पुरुष थिए।।१५।। दिवोदास अरूको धन-सम्पत्तिमा इच्छा नराख्ने, धेरै दान दिने, उदारचित्त र लोकको उपकार गर्ने पराक्रमी राजा थिए। तिनले तपस्या गरेर ब्रह्माजीलाई खुसी बनाए र ब्रह्माजीले पनि तिनलाई सबै देवताले बहिष्कार गरेका कारण वर्षा नहुँदा खडेरीले ग्रस्त भएको काशीको राज्य प्रदान गरे। त्यस अवस्थामा उपकारी राजा दिवोदासले सम्पूर्ण देवताहरूको काम आफै गर्ने विचार गरे। तिनले आफै सूर्य, इन्द्र, अग्नि, हावा र चन्द्रमा बनेर तिनको काम जिम्मा लिई धर्मपूर्वक काशी राज्यको पालन गरे।।१६-१८।। तिनको तपस्याबाट चारैतिर वृष्टि भयो र मानिसहरू खुसी भएर अविमुक्त क्षेत्र अर्थात् काशीमा आए र दिवोदासको प्रशंसा गरे।।१९।। दिवोदासकी पत्नीको नाम सुशीला थियो। ती पतिव्रता, धर्मपरायण, दाननिपुण र पतिकी आज्ञापालिका थिइन्।।२०।। राजा दिवोदासले राज्यको आचार, व्यवहार र प्रायश्चित पण्डितहरूबाट गराउँथे। आफूले राजदण्ड कहिल्यै पनि धारण गरेनन्।)२१(।२१।। तिनका कल्याणकारी कार्यले गर्दा प्रसन्न भएका देवताहरू भगवान् शिवजीका साथ मन्दार पर्वतमा गए। काशीराज्यमा कसैले पनि अपमृत्यु, शोक र दु:ख व्यहोर्नुपरेको थिएन।।२२।। दिवोदासको शासनकालमा कुनै पनि मानिसमा आधिभौतिक, आधिदैविक र आध्यात्मिक तापहरू थिएनन्। अनावृष्टिका कारण पैदा भएको हाहाकार शान्त भएको थियो ।।२३।। पशु, पक्षी,

पशुपक्षिमनुष्याणां सस्यानि च बहून्यपि ।
यदायत्तं प्राणिमात्रं जातानि वृष्टियोगतः ।।२४।।

स्वाहास्वधावषट्काराः सर्व आसन् यथा पुरा ।
ते च देवाः सुखं प्राप्ता येऽप्रार्थयन् नृपं पुरा ।।२५।।

यं तुष्टुवुः सुराः सर्वे ब्रह्मवाक्यप्रणोदिताः ।
सोऽपि नाना स्तुतिं चक्रे देवानां दर्शनाद् भृशम् ।।२६।।

मानिसहरू इच्छानुसार अन्न-जल पाएर प्रसन्न थिए। सम्पूर्ण प्राणीका प्राण अन्नमा अडेका हुन्छन्, त्यो अन्न काशीराज्यमा प्रचुर मात्रामा पैदा हुन थाल्यो। प्राणी मात्र दिवोदासको अधीनमा रहेर शान्तिको अनुभव गरिरहेका थिए। घर-घरमा स्वाहाकार, स्वधाकार र वषट्कार पूर्ववत् चलिरहेका थिए । जुन देवताले पहिले दुःख पाएर राजा दिवोदासलाई राज्य गर्न प्रार्थना गरेका थिए, तिनले पनि सुख र शान्ति महसुस गरे। ब्रह्माजीको वाक्यबाट अभिप्रेरित देवताहरूले राजा दिवोदासको स्तुति र प्रशंसा गरे। दिवोदासले पनि देवताहरूलाई सुखी र शान्त देखेर परम सन्तोषको अनुभव गरी तिनको स्वागत, सत्कार र स्तुति गरे।।२४-२६।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे बालचरिते दिवोदासोपाख्यानं नाम चतुश्चत्वारिंशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'दिवोदासको उपाख्यान' शीर्षकान्वित चवालीसौं अध्याय पूर्ण भयो ।।४४।।

ॐ

## पञ्चचत्वारिंशोऽध्याय: { ४५ अध्याय }

### कीर्तिरुवाच

कथं मुने सर्वदेवा: प्रयाता मन्दरं गिरिम् ।
शिवेन च कथं त्यक्ता रम्या वाराणसी पुरी ।।१।।

एतन्मे शंस देवर्षे ! संशयोऽत्र महामुने ।

### मुनिरुवाच

द्वादशाब्दमनावृष्टौ नष्टे स्थावरजङ्गमे ।।२।।

स्वाहास्वधावषट्कारविहीने च धरातले ।
ब्रह्मवाक्यप्रणुन्नैस्तु देवै: सम्प्रार्थितो हर: ।।३।।

महादेव ! जगन्नाथ ! करुणालय ! शङ्कर !
अध्यास्य मन्दरगिरिं मरीचिस्तु तपस्यति ।।४।।

अब्दानामयुतं देव ! वरं दातुं प्रयाहि तम् ।

### मुनिरुवाच

एवं सम्प्रार्थितो देवैर्महेश: करुणालय: ।।५।।

सर्वै: सुरगणै: सार्द्धमग्निचन्द्रार्यमादिभि: ।
वरं दातुं स सम्प्राप्तो मरीचिं तं महामुनिम् ।।६।।

अस्थिमात्रावशिष्टञ्च ददर्श स सदाशिव: ।
तस्मिन् क्षणे नागतश्चेत् स तु प्राणान् समुत्सृजेत् ।।७।।

तदुत्कटेन तपसा प्रीतोऽसौ गिरिजापति: ।
निजं स्वरूपं दत्त्वा च विमानेन निजं पदम् ।।८।।

प्रापयामास सहसा गणैर्वादित्रनिस्वनै: ।
सर्वैर्देवगणै: शम्भुस्तस्थौ गिरिवरे शुभे ।।९।।

दिवोदासस्य नापश्यत् किञ्चिद् रन्ध्रं सदाशिव: ।
देवान् सम्प्रेषयामास द्रष्टुं तद् रन्ध्रमादृत: ।।१०।।

यो यो देवो याति काशीं तस्य रन्ध्रं न पश्यति ।
स्वनाम्ना परिसंस्थाप्य लिङ्गं तत्रैव तस्थिवान् ।।११।।

**कीर्तिले भनिन्** - हे महामुनि ! सबै देवताहरू भगवान् शिवजीका साथ मन्दराचलमा गए भन्ने कुरा तपाईंले सुनाउनुभयो। शिवजीले किन वाराणसी छाड्नुभयो ? ।।१।। यसमा मलाई सन्देह लागेको छ। मेरो सन्देह निराकरण गर्नुहोस्।

**मुनिले भने** - वाराणसीमा बाह्र वर्षसम्म अनावृष्टि भएपछि चराचर सबै नष्ट भए। पृथिवीतलमा चल्ने स्वाहाकार, स्वधाकार र वषट्कार चलेनन्। त्यस अवस्थामा ब्रह्माजीद्वारा अभिप्रेरित देवताहरूले भगवान् शिवजीको प्रार्थना गरे।।२-३।। देवताहरूले भने - हे महादेव ! हे जगत्का स्वामी ! हे करुणासागर ! हे शङ्कर ! मन्दराचलमा बसेर मरीचि ऋषिले तपस्या गरिरहनु भएको छ।।४।। उहाँको तपस्याका दश हजार वर्ष बितिसके। हजुर उहाँलाई वरदान दिन जानुहोस्।

**मुनिले भने** - यसरी देवताहरूद्वारा प्रार्थना गरिएपछि करुणासागर भगवान् शङ्कर अग्नि, चन्द्रमा, अर्यमा आदि देवताहरूका साथमा वरदान दिन महामुनि मरीचिको नजिकमा जानुभयो । मरीचि मुनिको शरीरमा हाडमात्र बाँकी थियो। त्यस्तो अवस्थामा पनि तेजैतेजबाट आराधना गरिरहेका मरीचिलाई भगवान् शिवजी दर्शन दिन जानुभयो ।।५-६।। त्यसबेला भगवान् शिवजी नपुग्नुभएको भए मरीचिको प्राण रहने थिएन। तिनको उत्कट तपस्याबाट प्रसन्न हुनुभएका भगवान् शङ्करले तिनलाई आफ्नै रूप प्रदान गर्नुभयो। त्यसपछि विमानमा सवार गराई शिवगण, देवतागण र बाजागाजाका साथ आदरपूर्वक कैलासमा पुर्‍याउनुभयो। मन्दराचल छाडेर मरीचि ऋषि कैलास गएपछि रित्तो भएको मन्दराचलमा भगवान् शङ्कर देवताहरूका साथमा विराजमान हुनुभयो।।७-९।। भगवान् शिवजीले दिवोदासको राज्यमा राज्यसञ्चालन गर्दा कसैले केही गल्ती गरेको थाहा पाउनु भएन। भगवान् शिवजीले एक दिन देवताहरूलाई दिवोदासले कतै गल्ती गर्छन् कि हेर्नुहोस् भनी पठाउनु भयो। देवताहरू पालैपालोसँग काशी जान लागे। जुन जुन देवता त्यहाँ गए पनि तिनले दिवोदासले कतै कुनै गल्ती गरेको फेला पारेनन्। ती देवताहरू काशी गएर आफ्नो नामबाट

दिवोदासस्य राज्ये तु सर्वे वर्णाः स्वधर्मिणः ।
आश्रमस्था द्विजाः सर्वे यथोक्ताचारसंयुताः ।।१२।।

गुरुशुश्रूषवः शिष्याः स्त्रिय आसन् पतिव्रताः ।
धर्मशीला दानपरा व्रतोपवासतत्पराः ।।१३।।

यतयश्च त्रिषवणा व्रतिनो होममौनिनः ।
स्नानं सन्ध्यां जपं होमं स्वाध्यायं देवतार्चनम् ।।१४।।

आतिथ्यं वैश्वदेवञ्च स्वयमेव प्रकुर्वते ।
गृहस्थाः सर्व एवाष्टौ कर्माणि भक्तितोऽनघाः ।।१५।।

अतो विवर्धते धर्मो वृष्टिश्चानुत्तमाऽभवत् ।
स्वर्गे देवा मुमुदिरे पितरश्च स्वधाभुजः ।।१६।।

न बन्ध्या न च वाऽपुष्पा विधवा न मृतप्रजा ।
नावृष्टिर्नातिवृष्टिश्च स्वचक्रं न परं तथा ।।१७।।

शुकाश्च शलभा नासन् मूषका वा कदाचन ।
एवञ्च सर्वसस्यानां निष्पत्तिः समपद्यत ।।१८।।

विश्वेश्वरं माधवञ्च ढुण्ढिं भैरवमेव च ।
दण्डपाणिं गुहं गङ्गामदृष्ट्वा वाऽनिमज्ज्य वा ।।१९।।

मणिकर्णीं भवानीं वा यो भुङ्क्ते दण्ड्य एव सः ।
इति डिण्डीरवं नित्यमकरोन्नृपसत्तमः ।।२०।।

न पापलेशस्तत्रासीदेवं नृपवरे स्थिते ।
विना रन्ध्रं न तद्राज्यं जिघृक्षति सदाशिवः ।।२१।।

शिवलिङ्गको स्थापना गरी त्यहीं बस्न थाले।।१०-११।। दिवोदासको राज्यमा सबै वर्णका मानिसहरू आफ्नो धर्मको पालन गरिरहेका थिए। आश्रमवासी मुनिहरू पनि आ-आफ्नो आचारविचारमा कट्टरतापूर्वक लागेका थिए। शिष्यहरूले गुरुको सेवा गरिरहेका थिए। पतिव्रता भएर गृहलक्ष्मीका रूपमा विराजमान नारीहरू धर्मपरायण, दाननिरत र व्रत-उपवासमा तत्पर थिए।।१२-१३।। दिवोदासको राज्यमा निवास गर्ने संन्यासीहरू दिनको तीन पटक नुहाएर भगवान्‌को आराधना गरिरहेका थिए। व्रत गर्ने, होम गर्ने र मौनधारण गर्ने मानिसहरूले स्नान, सन्ध्या, जप, होम, देवताको पूजा, अतिथि सेवा र वैश्वदेवलगायतका कर्म स्वतःस्फूर्त रूपमा गरिरहेका थिए । निष्पाप गृहस्थहरू पनि स्नान, सन्ध्या, जप, होम, स्वाध्याय, देवार्चन, अतिथिसेवा र वैश्वदेवनामक आठ कर्महरू भक्तिपूर्वक गरिरहेका थिए। त्यसकारण काशीमा धर्मको वृद्धि भयो र उत्तम वर्षा पनि भयो। काशीमा दिवोदासले धर्मको स्थापना गरेपछि स्वर्गमा रहेका देवताहरू खुसी भए र पितृहरूले श्राद्ध र तर्पण पाएर आनन्द माने।।१४-१६।। काशीमा कुनै पनि नारी बन्ध्या थिएनन्, रजस्वला नहुने नारी कुनै थिएनन् र कहीं पनि विधवाको उपस्थिति थिएन । यसका साथै जसका बच्चाहरू जन्मदै मर्दै गर्छन्, त्यस्ता मृतवत्सा नारीहरू पनि थिएनन्। कहीं पनि खडेरी र अतिवृष्टि थिएन। गृहयुद्धको विकराल रूप पनि थिएन र परचक्रीहरूको आक्रमण पनि थिएन।।१७।। काशीराज्यमा खेतीपातीमा सुगा एवं सलहले दुःख दिएका थिएनन् र मूसाको आतङ्क पनि थिएन। त्यहाँ सबै प्रकारका अन्नहरूको राम्रोसँग उत्पादन भइरहेको थियो।।१८।। राजा दिवोदासले दमाहा बजाएर दिनदिनै यसरी उर्दी दिने गर्थे – 'भगवान् विश्वनाथ, भगवान् नारायण, भगवान् ढुण्ढिराज श्रीगणेश, भगवान् दण्डपाणि भैरव, भगवान् स्कन्द, भगवती गङ्गा, भगवती मणिकर्णिका र भगवती भवानीको दर्शन र गङ्गामा स्नान नगरीकन जसले भोजन गर्दछ त्यो मानिस दण्डनीय हुनेछ।' यस किसिमबाट उर्दी दिएर जनतालाई सत्कर्ममा जागरूक एवं प्रवृत्त गराउने राजा दिवोदासको उपस्थितिका कारण काशीमा कसैले थोरै पनि पाप गरेको थिएन। दिवोदासको राज्यमा पाप नभएसम्म मन्दराचलमा बस्नुभएका

वाराणसीवियोगेन परितप्तस्ततोऽभवत् ।
प्रेषयामास विघ्नाय ततोऽष्टावपि भैरवान् ।।२२।।

उवाच तान् कारयन्तु राज्येऽस्याणु तु किल्विषम् ।
आदास्ये तत एतस्मात् काशीराज्यं न संशय: ।।२३।।

जग्मुस्ते त्वरया भद्रे ! आज्ञां प्राप्य सदाशिवात् ।
दृष्ट्वा वाराणसीं ते तु विश्रान्ता: स्नानकर्मणा ।।२४।।

अदृष्ट्वा तस्य दुरितं काशीवासं प्रचक्रिरे ।
शिवश्चिन्तापरश्चासीदनागच्छत्सु तेषु तत् ।।२५।।

ततोऽप्रेषयदादित्यान् रन्ध्रं द्रष्टुं नृपस्य ह ।
तेऽपि तत्पुण्यमालोक्य स्थिता: काश्यां मुदान्विता:।।२६।।

न कार्यञ्च हरस्यापि न त्याज्येयं पुरीति च ।
ततश्चतुष्षष्टिमिता अप्रेषयत योगिनी: ।।२७।।

अणुमात्रमदृष्ट्वैनो दिवोदासस्य ता अपि ।
स्थिता वाराणसीं प्राप्य यजन्त्य: शिवमव्ययम् ।।२८।।

तत: सम्प्रेषयामास दुर्गां दु:खविनाशिनीम् ।
अदृष्ट्वा तदघं साऽपि तस्थौ ग्रामाद् बहि: किल ।।२९।।

ध्यानेनातोषयद् देवं सर्वकामैश्च मानवान् ।
दिक्पालानथ शम्भुश्च प्रेषयामास सत्वरम् ।।३०।।

गता वाराणसीं ते तु नेक्षेरँस्तदघं लघु ।
स्वस्वनाम्ना प्रतिष्ठाप्य लिङ्गानि न्यवसन्मुदा ।।३१।।

ऋषय: प्रेषिता: पश्चादुत्सुकेन शिवेन ह ।
गतास्ते त्वरया हृष्टा: शिवेनापि प्रणोदिता: ।।३२।।

शङ्कर काशीमा फर्कन चाहनु हुन्नथ्यो ।।१९-२१।। दिवोदासले कत्ति पनि गल्ती गरेका थिएनन् । यो देखेर मन्दराचलमा रहनुभएका भगवान् शिवजीलाई वाराणसीको विरहले छटपटी भयो। त्यसपछि उहाँले आफ्ना भैरवहरूलाई डाकेर वाराणसीमा विघ्न गर्न अह्राउँदै भन्नुभयो- 'हे भैरव हो! तिमीहरूले काशीराज्यमा गएर अणु परिमाणमात्र भए पनि पापकर्म भएको दृश्य खडा गर । त्यसपछि मात्र मैले दिवोदासबाट काशीराज्यलाई खोस्न अवसर पाउनेछु। यसमा कुनै सन्देह छैन ।।२२-२३।।' सदाशिवको आज्ञा पाएर भैरवहरू पनि तत्कालै काशी पुगे। त्यहाँ गई गङ्गामा नुहाएर नगरदर्शन गरी मानिसहरूको आचारविचारलाई नियालेर हेर्दा पनि कतै कुनै पापकर्म देखेनन्। पापकर्म नदेखेपछि ती भैरवहरू काशीमै बस्न थाले । मन्दराचलमा रहनुभएका शिवजीलाई भैरवहरू नफर्कंदा चिन्ताले सतायो ।।२४-२५।। त्यसपछि शिवजीले द्वादश आदित्यलाई राजा दिवोदासको राज्यमा कुनै छिद्र र पाप प्रकट गर भनी अह्राउनु भयो। त्यहाँ गएका ती द्वादश आदित्य पनि दिवोदासको पुण्य देखेर शिवजीले अह्राएको काम गर्ने कुनै परिस्थिति छैन, काशी नगरी पनि त्याग गर्न योग्य छैन भनी सहर्ष काशीमा बसे । त्यसपछि शिवजीले चौसट्ठी योगिनीहरूलाई दिवोदासको छिद्रान्वेषण गर्न पठाउनुभयो ।।२६-२७।। योगिनीहरूले पनि दिवोदासको राज्यमा अणुमात्र पनि पाप देखेनन् र वाराणसीमै रहेर शिवजीको ध्यान गर्न लागे।।२८।। त्यसपछि भगवान् शिवजीले दु:खनाशिनी भगवती दुर्गालाई वाराणसी पठाउनुभयो। दुर्गाले पनि त्यहाँ कुनै किसिमको पाप देख्नुभएन र उहाँ पनि वाराणसीदेखि बाहिर गाउँमा बस्नुभयो।।२९।। वाराणसीको बाहिरी सीमामा रहेकी भगवतीले ध्यानद्वारा भगवान् शङ्करलाई प्रसन्न तुल्याउनुभयो र सबै मानिसहरूका इच्छा पूर्ण गरेर तिनीहरूलाई प्रसन्न तुल्याउँदै विराजमान हुनुभयो। त्यसपछि भगवान् शिवजीले छिट्टै दिक्पालहरूलाई वाराणसी पठाउनुभयो। तिनले पनि त्यहाँ गएर सानो पाप पनि देखेनन्। त्यसकारण दिक्पालहरूले आ-आफ्नो नामबाट शिवलिङ्ग बनाएर प्रतिष्ठा गरी त्यहीं नै निवास गरे।।३०-३१।। दिक्पालहरू पनि फर्केर नआएपछि नआउनुको कारण थाहा पाउन उत्सुक हुनुभएका शिवजीले ऋषिहरूलाई वाराणसी पठाउनुभयो। भगवान्

गत्वा तीर्थविधिं कृत्वा स्थित्वा वाराणसीमनु ।
आशीर्वादाय गच्छन्तः पश्यन्तस्तस्य चेष्टितम् ।।३३।।

भक्त्या तान् पूजयामास सर्वान् स धनवस्त्रकैः ।
नान्वगृह्णँस्तद्धनं ते नैनोऽपि ददृशुर्लघु ।।३४।।

स्वस्वनाम्ना परिस्थाप्य तेपुस्ते परमं तपः ।
ततः सर्वेऽमरास्तेन प्रेषिताः कार्यसिद्धये ।।३५।।

तेऽपि नो ददृशुस्तस्य दुष्कर्म धर्मचारिणः ।
नायाति कोऽपि काश्यान्तु यो यः सम्प्रेष्यते मया ।।३६।।

ततश्चिन्तापरो रुद्रो निश्चयं नाध्यगच्छत ।
मनसा चिन्तयामास कदा द्रक्ष्ये च तां पुरीम् ।।३७।।

दिवोदासस्य राज्ये च यदा पापं भविष्यति ।
तदैव प्राप्या काशी च नान्यथा च मया क्वचित् ।।३८।।

विना ढुण्ढिं माधवञ्च सर्वे देवा निरर्थकाः ।
नायान्ति च स्थितास्तत्र काश्यां ध्यानपरायणाः ।।३९।।

शिवजीद्वारा पठाइएका ती ऋषिहरू शीघ्रतापूर्वक वाराणसी पुगेर प्रसन्न भए। त्यहाँ गएर ती ऋषिहरूले तीर्थमा गर्नुपर्ने विधिअनुसार स्नान गरी प्रसन्नतापूर्वक निवास गरे । ती ऋषिहरू एक दिन दिवोदासको दरबारमा आशीर्वाद दिन गए र तिनले राजा दिवोदासका क्रियाकलापको निरीक्षण पनि गरे । दिवोदासले ऋषिहरूलाई सम्मानपूर्वक धन एवं वस्त्र दिएर पूजा गरे, तर ऋषिहरूले राजाले दिएका धन एवं वस्त्र स्वीकार गरेनन् । ऋषिहरूले राजाको क्रियाकलापमा अणुमात्र पनि पाप देखेनन्। तिनले पनि आ-आफ्नो नामबाट शिवलिङ्गको स्थापना गरी शिवजीलाई प्रसन्न तुल्याएर परम तपस्या गरे । त्यसपछि शिवजीले आफ्नो कार्यसिद्धिका निमित्त देवताहरूलाई काशी पठाउनुभयो।।३२-३५।। ती देवताहरूले पनि धर्मात्मा राजा दिवोदासको चरित्र र व्यवहारमा कतै खोट देखेनन् र त्यहीं बस्न थाले। शिवजीले मनमनै भन्नुभयो- 'मैले जसलाई काशी पठाइरहेको छु, तीमध्ये कुनै पनि फर्केर यहाँ आउँदैन।' यस्तो के भयो भनी तर्क गरी अब के गर्ने भन्ने विषयमा निर्णय गर्न सक्नुभएन। मनमा कहिले वाराणसी पुरी देख्नेछु भन्ने चिन्ता गरिरहनु भयो । जुन बेला दिवोदासको राज्यमा पापको उदय हुन्छ त्यस बेलामात्र म काशी पुग्नेछु, अन्यथा मैले काशीको दर्शन गर्न पाउनेछैन। ज-जसलाई पठाएँ, ती सबै व्यर्थ भए। मेरा लागि काम लाग्ने ढुण्ढिराज श्रीगणेश र नारायणमात्र हुनुहुन्छ। अरू सबै देवताहरू अर्थहीन छन्, किनकि तिनलाई मैले जुन उद्देश्यले पठाएको थिएँ त्यो पूरा नगरी काशीमा ध्यान गरेर बसिरहेका छन् र मन्दराचलमा फर्किने विचारसमेत छाडिसकेका छन् ।।३६-३९।।'

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे बालचरिते दिवोदासोपाख्याने शिवचिन्तावर्णनं नाम पञ्चचत्वारिंशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'शिवचिन्तावर्णन' शीर्षकान्वित पैंतालीसौं अध्याय पूर्ण भयो ।।४५।।

ॐ

# षट्चत्वारिंशोऽध्याय: { ४६ अध्याय }

मुनिरुवाच

अविमुक्तवियोगेन परितप्त: शिवस्तदा ।
सर्वार्थवशगं ढुण्ढिं नत्वाऽप्रार्थयदातुर: ।।१।।

शिव उवाच

पञ्चानामपि भूतानां कारणानाञ्च कारणम् ।
चिदानन्दघनो विश्वध्येयो वेदान्तगोचर:।।२।।

प्रधानं पुरुषश्चासि गुणत्रयविभागकृत् ।
विश्वव्यापी विश्वनिधिर्विश्वरक्षणतत्पर:।।३।।

नानावतारकृच्चासि भूभारहरणोद्यत:।
देवानां पालने शक्तो दैत्यानां निधने तथा ।।४।।

द्विजानाञ्चैव धर्माणामार्तानां शरणैषिणाम् ।
स्वेच्छयाऽपत्यतां याते त्वयि ब्रह्मस्वरूपिणि ।।५।।

कमन्यं शरणं यामि काशीविरहदु:खित:।

ढुण्ढिरुवाच

अन्यानेव प्रेषयसि सर्वविद्याविशारदान् ।।६।।
सर्वदर्शी किमर्थं त्वं मोहमेषि सदाशिव !

शिव उवाच

इदानीमेव गच्छ त्वमविमुक्तं गजानन ।।७।।

दिवोदासस्य विघ्नार्थं मम कार्यार्थसिद्धये ।
मायया मोहय जनं पुण्यं येनास्य हीयते ।।८।।

ढुण्ढिरुवाच

यामि शीघ्रं महादेव ! न चिन्तां कर्तुमर्हसि ।
साधयिष्ये तव हितं दर्शयिष्ये निजां पुरीम् ।।९।।

बहिष्कृत्य दिवोदासं जनपापविभागिनम् ।

**मुनिले भने** - काशीको वियोगबाट सन्तप्त हुनुभएका भगवान् शिवजीले सम्पूर्ण कार्य सम्पन्न गर्न निपुण भगवान् ढुण्ढिराज गणेशलाई नमस्कार गरेर आतुरभावले प्रार्थना गर्नुभयो।।१।।

**शिवजीले भन्नुभयो** - पृथिवी, जल, तेज, वायु र आकाश यी पाँच महाभूतका आदिकारण, कारणहरूका पनि परम कारण, सच्चिदान्दस्वरूप, सबैद्वारा ध्यान गर्न योग्य, वेदान्तशास्त्रद्वारा मात्र अनुभव गरिने भगवान् ढुण्ढिराज गणेशलाई नमस्कार गर्दछु।।२।। हे श्रीगणेश ! हजुर प्रकृतिरूपमा हुनुहुन्छ र पुरुष रूपमा पनि। हजुर सत्त्व, रज र तम यी तीन गुणलाई विभाग गरेर गुणेशका रूपमा प्रसिद्ध हुनहुन्छ। हजुर विश्वव्यापी, विश्वनिधि र विश्वपालनमा तत्पर हुनुहुन्छ।।३।। हे प्रभु ! अनेक थरि अवतार लिएर पृथिवीको भार हरण गर्न तत्पर हुनुहुन्छ। हजुर देवताहरूको संरक्षण गर्न समर्थ हुनुहुन्छ र दैत्यहरूको संहारमा पनि त्यत्तिकै समर्थ हुनुहुन्छ।।४।। हे प्रभु ! ब्राह्मण, धर्म, दु:खीजन र शरणार्थीहरूका पालक, परब्रह्मस्वरूप हजुर आफ्नो इच्छाले मेरा पुत्रका रूपमा पैदा हुनुभएको छ। म अहिले काशीको विरहबाट साह्रै दु:खी छु। अब हजुरलाई छाडेर कुन अरू देवताको शरणमा जाऊँ।

**श्रीगणेशले भन्नुभयो** - हे सदाशिव ! हजुरले मलाई नसंझेर अरू देवता सबै विद्यामा सिपालु छन् भन्ने भावना राखी तिनलाई काशी पठाउनु भयो। हजुर सर्वदर्शी हुनुहुन्छ, तर यस विषयमा किन सर्वदर्शी हुनुभएन र मोहमा पर्नुभयो ?

**शिवजीले भन्नुभयो** - हे प्रभु ढुण्ढिराज ! हजुर अहिले नै काशी गई मेरो कार्य सिद्ध गर्नुहोस् । दिवोदासका आचार र विचारमा खोट पैदा गरी मायाबाट मानिसहरूलाई मोहित गरेर दिवोदासको पुण्य नष्ट हुने काम गर्नुहोस् ।।५-८।।

**श्रीगणेशले भन्नुभयो** - हे महादेव ! म छिट्टै काशी जान्छु। हजुरले चिन्ता नगर्नुहोस्। मैले हजुरको हितसाधना गर्नेछु र हजुरलाई हजुरकै काशी पुरीमा विराजमान गराउनेछु। जनताले गरेका पापका कारण पुण्य क्षीण भएका दिवोदासलाई काशीबाट बाहिर पठाएर त्यहाँ हजुरको प्रतिष्ठा गराउनेछु ।

मुनिरुवाच

इत्युक्त्वा शिवमानम्य पार्वतीञ्च षडाननम् ।।१०।।

प्रदक्षिणीकृत्य तथा नारदं गुरुमेव च ।
प्रस्थितोऽखिलविद्यानां कलानाञ्च निधिर्विभुः।।११।।

प्राप वाराणसीं पुण्यां पुण्यमेवात्र दृष्टवान् ।
ज्योतिर्विदभवत्सद्यस्तस्य पापमलक्ष्य सः।।१२।।

रुक्मकान्तिर्दिव्यदेहो मुक्तामालाविभूषितः।
कटिसूत्रञ्च नाभौ तु महारत्नविभूषितम् ।।१४।।

पीतवस्त्रपरीधानो दिव्यगन्धानुलेपनः।
कामातिसुन्दरतनुः कामिनीजनमोहनः।।१५।।

पतिव्रताश्च या नार्यश्चकमुस्ता अपि द्विजम् ।
मनसा चिन्तितं प्रश्नं वदति स्माखिलं तु सः।।१६।।

अतः पतिव्रता नार्यः प्रश्नं प्रष्टुं तमन्वयुः।
विहाय बालकान् भर्तॄन् भ्रातॄनन्यान् सुहृज्जनान् ।
स्वप्नान् वदति लोकानां स्वमायादर्शितानसौ ।।१७।।

सेवतां सर्वलोकानां ददाति सुबहून् वरान् ।
तद्वरस्य प्रभावेण दुष्टः कुष्ठो विनश्यति।।१८।।

पुत्रिण्यः सर्वबन्ध्याश्च जातास्तद्वरदानतः।
हस्तं दृष्ट्वा महाभाग्यं कर्माणि कथयत्यसौ ।।१९।।

यद् यद् येन च संभुक्तं भोक्ष्यमाणञ्च तत्क्षणात् ।।२०।।

विस्मितो नगरे लोकः सर्व आसीन् मुदान्वितः।
नेदृशो ब्राह्मणोऽदर्शि सर्ववेत्ता गुणाकरः।।२१।।

**मुनिले भने** - आफ्ना पिता शिवजीसँग यी कुरा गरेर शिव, पार्वती र स्कन्दलाई प्रणाम गरी प्रदक्षिणा गरेपछि नारदजी र गुरुलाई समेत प्रणाम गरी सबै विद्या एवं कलाका स्वामी र अन्तर्यामी श्रीगणेशले प्रस्थान गर्नुभयो। पुण्यमय वाराणसी नगरमा पुगेर उहाँले चारैतिर पुण्यमात्र देख्नुभयो। दिवोदासका आचार-विचारमा पाप नदेखेर उहाँले एउटा ज्योतिषीको रूप धारण गर्नुभयो।।१२।। सुवर्णमय कान्तिसम्पन्न आकर्षक देह धारण गर्ने, मोतीको माला धारण गरी सुहाएका, कानमा मोती र सुनबाट बनेका कुण्डल धारण गर्ने, बत्तीस लक्षणले सम्पन्न, भूत, भविष्य एवं वर्तमानका ज्ञाता, नाभिमा महारत्नले विभूषित कन्धनी धारण गर्ने, पहेंलो वस्त्र लगाएका, अत्यन्त उत्तम गन्ध आउने अङ्गराग लेपन गरेका, कामदेवको भन्दा पनि राम्रो शरीर भएका र दृष्टि पर्नासाथ कामिनीहरूलाई मुग्ध तुल्याउने स्वरूपका ज्योतिषी बनेर वाराणसीमा देखिनुभयो।।१३-१५।। उहाँको स्वरूप-सौन्दर्य देखेर पतिव्रता नारीहरू पनि मनमनै भोगको कामना गर्न थाले। ज्योतिषीको रूपमा रहनु भएका भगवान् गणेश मानिसको भाग्य हेर्दै हिंड्न थाल्नुभयो । उहाँले हेराउन आउने मानिसले मनमा चिताएका प्रश्नहरूको उत्तर दिनुहुन्थ्यो ।।१६।। एक दिन पतिव्रता नारीहरू आफ्ना बालबच्चा, पति, दाजुभाइ र मित्रजन सबैलाई छाडी उहाँसँग मुग्ध भएर भेट्ने निहुँले भाग्य हेराउन आए। सबैका मनका सपना बताउने श्रीगणेशले ती पतिव्रताहरूका सामु आफ्नो माया देखाउनुभयो। जसले उहाँको सेवा गरिरहेका हुन्थे त्यस्ता मानिसलाई ठूला-ठूला वरदान पनि दिनुभयो। श्रीगणेशको वरदानका प्रभावबाट डरलाग्दो कुष्ठरोग पनि नष्ट हुन्थ्यो।।१७-१८।। उहाँको वरदानबाट बाँझी आइमाईहरूले गर्भधारण गर्न थाले। मानिसहरूका हात हेरेर भगवान् श्रीगणेशले तिनका भाग्य र कर्म राम्ररी बताउनु हुन्थ्यो।।१९।। उहाँले हेर्न आउने मानिसहरूमध्ये जसले जे खाएर आएको छ र भोलि के खानेछ ती कुरा पनि बताउनुहुन्थ्यो। उहाँले जसले जे दुःखसुख भोगिसकेको छ र भविष्यमा भोग्नेछ ती कुरा पनि खुलस्त पार्नुहुन्थ्यो।।२०।। गणेशरूप ज्योतिषीका यस्ता चमत्कार देखेर अथवा सुनेर नगरवासीहरू चकित

न भूतो न भविष्यो वा इति लोका वदन्त्यमुम् ।
पूजयन्ति धनै रत्नैर्ज्ञात्वा प्रत्ययमस्य ते ।।२२।।

हस्ते धृतानि वस्तूनि कथयत्येव तत्क्षणात् ।
दरिद्रस्याप्रयत्नस्य प्रष्टुं यातस्य वेत्त्यसौ ।।२३।।

अभिप्रायं स्वयं तस्य ब्रूते त्रिदिनमन्तरा।
भविष्यति धनाढ्यस्त्वं तथैवासौ भवत्यपि।।२४।।

गतं नष्टं कथयति यथा यत् तत् तथा भवेत् ।
एवमाचक्षतस्तस्य दुण्ढेर्विप्रस्वरूपिणः।।२५।।

द्वित्रिमासैर्गता वार्ता राजकर्णे जनेरिता।

जना ऊचुः

राजपत्न्योऽपि याश्चान्याः पातिव्रत्यपरायणाः।।२६।।

एतावत्कालपर्यन्तं नोऽभजन्नन्यदेवताः।
विना पतिं गतास्तास्तु विनाज्ञां तं निरीक्षितुम् ।।२७।।

नो भविष्यति पुत्रो वा कन्या वेति विचारितुम् ।
सखीभिस्तु निषिद्धास्ता दुण्ढिरत्रागमिष्यति ।।२८।।

आकार्य तु ततस्तास्तु रहस्येतमुपानयन् ।
उपवेश्यासने रम्ये राजपत्न्यः प्रपूजिरे ।।२९।।

प्रक्षाल्य चरणद्वन्द्वं तद्दर्शनसुविह्वलाः।
कस्तूरीचन्दनं तस्य शरीरे पर्यमर्दयन् ।।३०।।

भए। यस्ता त्रिकालज्ञ विद्वान् ज्योतिषीको दर्शन पाएकोमा साह्रै खुसी पनि भए । त्यहाँका मानिसहरू भन्न थाले – 'यस्ता विद्वान्, गुणी र सर्वज्ञ ब्राह्मण हामीले कहिल्यै पनि देखेका थिएनौं। यस्ता ज्योतिषी भूतकालमा थिएन, अहिले छैनन् र भविष्यमा पनि हुनेछैनन् ।' ज्योतिषीको रूप धारण गर्नुहुने श्रीगणेशलाई मानिसहरू आएर उहाँको वाणी सत्य भएका कारण धन एवं रत्न दिएर सम्मान गरिरहेका थिए।।२१-२२।। कसैले हातमा कुनै वस्तु लुकाएर यसभित्र के छ भनी प्रश्न गर्दा ज्योतिषीरूप गणेश भगवान्ले लुकाएको वस्तु जे हुन्थ्यो त्यो सही बताइदिनुहुन्थ्यो। दरिद्र एवं आलसी मानिस भगवान्का सामु प्रश्न लिएर आउँदा त्यसको मनको अभिप्राय बुझेर तिमी तीन दिनपछि धनी हुनेछौ जस्ता उत्तर दिनुहुन्थ्यो र उहाँले दिएको उत्तर यथार्थ रूपमा पूरा हुन्थ्यो।।२३-२४।। हराएका र नष्ट भएका पदार्थहरूको विषयमा पनि उहाँले जस्ताको तस्तै बताउनुहुन्थ्यो। यसरी काशीका बजारका गल्ली-गल्लीमा डुलेर, घर-घरमा घुमेर नर-नारीहरूलाई यथार्थ फलादेश गरेका कारण ज्योतिषीरूप श्रीगणेशको साह्रै ठूलो ख्याति भयो। दुई तीन महिना बितेपछि राजा दिवोदासले पनि काशीमा आएका विद्वान् ज्योतिषीको विशेषता थाहा पाए ।

**मानिसहरूले भने** – राजा-रानी र समाजका उत्तम वर्गका पतिव्रता नारीहरू पतिको आज्ञाविना आजसम्म कुनै देवताको पूजा गर्दैनथे। अहिले भने काशीमा आएका नयाँ ज्योतिषी विद्वान्को प्रभावमा परेर आफ्ना पति र परिवारको बेवास्ता गरी तिनलाई हेर्न, तिनको सौन्दर्य दर्शन गरेर आनन्द लिन, छोरा अथवा छोरी के पैदा हुन्छ भन्ने कुरा जान्न समेत ज्योतिषी भएको ठाउँमा जान लागेका उत्तम महिलालाई सखीहरूले यसरी जान हुँदैन भनेर रोके। अरु तपाईंहरूलाई साह्रै दर्शन गर्ने इच्छा छ भने ती ज्योतिषीलाई यहीं बोलाउने काम गरौं भने। त्यसपछि राजदरबारमा गोप्य रूपमा रानीहरूका कोठामा ज्योतिषीरूप श्रीगणेशलाई ल्याउने काम गरेपछि रानीहरूले राम्रो आसनमा बसालेर तिनको पूजा गरे।।२५-२९।। ज्योतिषीको दर्शनका लागि व्याकुल भएका ती रानीहरूले तिनको पाउ पखाले। कस्तूरी र चन्दन लेपन गरी शरीरमा

निकटे तस्य काचित् तु भूत्वाऽदाद् वीटिकाः स्वयम्।
पप्रच्छुर्बहुप्रश्नास्तं सर्वानेवाब्रवीच्च सः ।।३१।।

प्रत्यये तु समुत्पन्ने सर्वास्तास्तु विसिस्मिरे ।
एवं ताः प्रत्यहं तस्य दर्शनं पूजनं स्वयम् ।।३२।।

त्यक्त्वा ता गृह्यकार्याणि चक्रुःसर्वास्तु तत्पराः।
नैतादृशो दृष्टपूर्वो भूतभव्यभविष्यवित् ।।३३।।

इत्यब्रुवन् स्तुवन्त्यस्तं सर्वज्योतिर्विदुत्तमम् ।
उत्थिते राज्ञि ताः शीघ्रं विससर्जुः क्षणादमुम् ।।३४।।

पतिभावं परित्यज्य तमेवाचिन्तयन् सदा।
दिवोदासोऽपि तं ज्ञात्वा समाकार्य ननाम च ।।३५।।

स्वासने तं परिस्थाप्य पुपूजे विष्टरादिभिः।
गामर्घ्यञ्च धनं वस्त्रमर्पयामास सादरम् ।।३६।।

यद् यत् तं परिपप्रच्छ तत्सर्वं स मुदाऽब्रवीत् ।
विस्मृत्य निजदेवं स तमेवाचिन्तयन्नृपः ।।३७।।

रहस्ये परिपप्रच्छ प्रश्नान् नानाविधान् बहून् ।
प्रत्यये तु समुत्पन्ने प्रार्थयामास सादरम् ।।३८।।

ग्रामान् धान्यं धनं दास्ये तिष्ठात्र निकटे मम।
चमत्कारा बहुविधा दृष्टा यस्मान् मया त्वयि ।।३९।।

ततो जगाद ढुण्ढिस्तं प्रपञ्चरहितो नृपम् ।
स्त्रीपुत्रकन्यागारादि त्यक्त्वा वाराणसीमगाम् ।।४०।।

न ग्रामा न धनं धान्यं रोचते मेऽस्पृहस्य ते ।
एकं वदामि ते वाक्यं हृदि तत्कर्तुमर्हसि ।।४१।।

मालिश पनि गरे। कुनै रानीले नजिकै आएर ज्योतिषीरूप गणेशलाई आफैले पान खुवाइन् । त्यसपछि ती रानीहरूले मिलेर मीठो स्वरमा मुस्काउँदै धेरै प्रश्नहरू सोधेपछि ज्योतिषीरूप श्रीगणेशले पनि सबै प्रश्नका उत्तर दिनुभयो ।।३०-३१।। प्रश्नको उत्तर मिलेपछि अत्यन्त खुसी भएका ती रानीहरू चकित भए। यसरी दिनदिनै उहाँलाई दरबारमा आउन निम्ता दिए। ज्योतिषी पनि दिनदिनै लुकेर दरबारमा जान थाल्नुभयो। ती रानीहरूले घरका काम बिर्सेर अत्यन्त भक्तिभावले ती ज्योतिषीको दर्शन र पूजा गर्न लागे। भूत, वर्तमान र भविष्यको विषयमा सटीक भविष्यवाणी गर्ने यस्ता ज्योतिषी हामीले आजसम्म कहिल्यै पनि देखेका थिएनौं भनी ती रानीहरूले ज्योतिषीको प्रशंसा गरे । राजा बाहिरबाट दरबारमा आएको अथवा निदाएर जागेको थाहा पाएपछि तिनीहरूले ज्योतिषीलाई बिदा गर्ने गर्थे। आफ्ना पतिमा श्रद्धा र प्रेम छाडेर ती रानीहरू अहोरात्र ज्योतिषीकै चिन्ता गर्न लागे। राजा दिवोदासले पनि एक दिन ज्योतिषीको विषयमा राम्ररी थाहा पाएर तिनलाई आफ्नो दरबारमा डाके। ती आएपछि प्रणाम गरी आसनमा राखेर आसन आदि टक्र्याई सम्मान गरे।।३२-३४।। राजाले तिनलाई गाई, अर्घ्य, धन र वस्त्र आदरपूर्वक टक्र्याए। दिवोदासले जस्ता प्रश्न गरेका थिए तिनको चित्त बुझ्ने गरी उत्तर दिए। दिवोदासले पनि आफ्ना आराध्य देवतालाई बिर्सेर मोहित भई ती ज्योतिषीकै चिन्तन गर्न थाले।।३५-३७।। तिनले ज्योतिषीलाई एकान्तमा लगेर धेरै किसिमका प्रश्न सोधे। दिएको प्रश्नोत्तरमा पूर्ण विश्वास भएपछि दिवोदासले ज्योतिषीलाई आदरपूर्वक भने - 'हे विद्वान् ब्राह्मण ! म तपाईंलाई गाउँ, धनधान्य आदि सबै कुरा पर्याप्त मात्रामा टक्र्याउँछु, तपाईं मेरो नजिकमा बस्नुहोस्, किनकि मैले तपाईंमा धेरै किसिमका चमत्कार देखेको छु' ।।३८-३९।। दिवोदासको प्रार्थना सुनेर प्रपञ्चहीन ज्योतिषीका रूपमा रहनु भएका भगवान् श्रीगणेशले राजालाई भन्नुभयो - हे राजन् ! पत्नी, पुत्र, पुत्री, घर र श्रीसम्पत्ति छाडेर म वाराणसी आएको छु। मलाई गाउँ, धनधान्य केही चाहिँदैन। मेरो संसारका कुनै पदार्थमा रुचि

इतः सप्तदशे राजन् ! दिने कोऽपि परः पुमान् ।

आगत्य स वदेद् यत् तत् कर्तव्यमविचारतः ।।४२।।

हितं ते परमं राजन् ! भविष्यति न संशयः।

एतावता मया लब्धा ग्रामा धान्यं धनानि च ।।४३।।

छैन। म तपाईँसँग एउटा अनुरोध गर्छु, मेरो अनुरोधलाई सम्मानपूर्वक सुनिदिनुहोस्। आजका सत्रौँ दिनका दिन कुनै विशिष्ट व्यक्ति तपाईँको राज्यमा आउनेछन्। तिनले आएर जुन कर्म गर्न भन्छन् त्यो तपाईँले विचारै नगरी गर्नुहुनेछ। त्यसबाट तपाईँको ठूलो हित हुनेछ। हे राजन् ! तपाईँले यो कुरा मानिदिनुभयो भने मैले गाउँ र धनधान्य पाएको महसुस गर्नेछु ।।४०-४३।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे बालचरिते ज्योतिर्विद्रूपप्रदर्शनं नाम षट्चत्वारिंशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'ज्योतिषीका रूपमा बालगणेशको चरित्रवर्णन' शीर्षकान्वित छयालीसौँ अध्याय पूर्ण भयो ।।४६।।

ॐ

## सप्तचत्वारिंशोऽध्यायः { ४७ अध्याय }

राजोवाच

अवश्यं मुनिशार्दूल ! करिष्ये वचनं तव ।
करवाण्यन्यथा चेन्मे शपथोऽस्ति हरस्य ह ।।१।।

गृत्समद उवाच

एवं तेन सर्वजनाः काशीस्थाः स्ववशीकृताः।
त्यक्त्वा सर्वाणि कर्माणि तमेव परिसेविरे ।।२।।

भूतं भव्यं विप्रकृष्टं भविष्यञ्च विवृण्वता।
ततो विष्णुर्बौद्धरूपी पञ्चक्रोशाद् बहिः स्थितः।।३।।

आगत्य मायया मोहं जनयन् सर्वदेहिनाम् ।
श्रुतिस्मृतिविरुद्धं सोऽपाठीद् धर्मवृषं द्विषन् ।।४।।

सोऽपि स्ववचनात् सर्वान् वशे चक्रे महाजनान् ।
साकारभजनं सर्व दूषयामास सादरम् ।।५।।

किमर्थं पार्थिवी मूर्तिरर्च्यते तैजसीरपि ।
सर्वो जनो मूढमनाः परात्मनि हृदि स्थिते।।६।।

वृक्षाणां जीवतां छेदः पशूनापि हिंसनम् ।
कुरुते स्वस्य वित्तानि परस्मै यः प्रयच्छति ।।७।।

नष्टे देहे तु भूतानि लीयन्ते पञ्च पञ्चसु ।
स्वयमेव हि भोक्तव्यं पक्वान्नं सघृतं मुदा।।८।।

**दिवोदासले भने** – हे मुनिश्रेष्ठ! म तपाइँको वचनको अवश्य पालना गर्नेछु। मैले यदि अन्यथा गरें भने शिवजीको सराप लाग्नेछ। मैले शिवजीलाई साक्षी राखेर यो प्रतिज्ञा गरिरहेको छु।।१।।

**गृत्समदले भने** – यसरी काशीमा रहेका ज्योतिषीले आफ्नो उत्तम भविष्य ज्ञानबाट काशी निवासी सबैलाई वशमा ल्याउनुभयो। आ–आफ्ना घरका काम छोडेर सबै मानिसहरूले उहाँकै सेवा गर्न लागे।।२।। भूत, वर्तमान र भविष्यत् कालका घटनाचक्रलाई यथार्थ रूपमा व्याख्या गर्ने ज्योतिषीको रहस्य बुझ्न भगवान् विष्णुले पनि बुद्धको रूप लिएर वाराणसीभन्दा पाँच कोश पर वास गर्नुभयो।।३।। विष्णुले मायाद्वारा श्रुति र स्मृतिविरुद्ध धर्मको उपदेश गर्न थाल्नुभयो र वैदिकधर्मको निन्दा गर्नुभयो।।४।। प्रवचनकलामा निपुण विष्णुले बुद्धको स्वरूप लिएर वाराणसीका साहु–महाजनहरूलाई पनि वशमा पार्नुभयो। त्यहाँ चलिरहेको मूर्तिपूजाको निन्दा गर्नुभयो।।५।। उहाँ भन्ने गर्नुहुन्थ्यो – 'किन तपाईंहरू विभिन्न देवताका माटो अथवा धातुको मूर्ति बनाएर पूजा गर्नुहुन्छ ? तिनमा भगवान् बस्नुहुन्न। परमात्मा त मानिसका हृदयमा वास गर्नुहुन्छ । तसर्थ माटो, ढुंगा र धातुमा देवताको पूजा गरेर केही पाइँदैन। वृक्षको छेदन गर्ने, पशुको हत्या गर्ने र अरू प्राणीहरूको वध गर्ने मानिसहरूले आफ्ना पाप काट्नका लागि अरूलाई दान दिने गर्दछन्, तर त्यो पाप दानबाट काटिने कुरा हुँदैन। शरीर नष्ट भएपछि शरीरका ती कणहरू पृथिवी, जल, तेज, वायु, आकाशमा विलीन हुन्छन्। नरक अथवा स्वर्गमा जानु पर्दैन। आफूले कमाएको अन्न र अरू पदार्थ अरूलाई दान नदिएर आफैं भोग गर्नुपर्छ। शरीर ढलेपछि अरू कुनै लोकमा गएर सुख अथवा दुःखको भोग हुँदैन । पकवान र घिउ-भात आफैले खाँदा आफू तृप्त भइन्छ, अरूलाई दिंदा रित्तो भइन्छ। मानिसले सकेसम्म सुखी र सन्तुष्ट हुन आफ्नै शरीरको पूजा र पुष्टि गर्नुपर्दछ। अनेक थरि भोग भोगेर आफ्नो शरीरलाई फूर्तिलो बनाउनुपर्दछ।' यसरी विष्णु भगवान्ले बुद्धको रूप लिएर नास्तिकतापूर्ण

देहात्मा परिपूज्योऽसौ नानाभोगैर्यथासुखम् ।
ततः सर्वे जनाः स्वं स्वं मार्गं मुक्त्वा तथाऽभवन् ।।९।।

ब्राह्मणानपि सन्त्यज्य बुभुजुर्भोगमुत्तमम् ।
तत्पत्नी कमला नाम पूरयन्ती मनोरथान् ।।१०।।

स्थिता वाराणसीवासिस्त्रियः सर्वा व्यमोहयत् ।
बोधयामास यत्नेन दुष्टमार्गं दिने दिने ।।११।।

भिद्यन्ते बुद्धयस्तेषां पुरग्रामनिवासिनाम् ।
स्वदेहे भर्तृदेहे योऽन्यस्य देहे स एव तु ।।१२।।

न भिद्यते पुमान् यद्वन्मुखनासाकरादिभिः।
तथात्मा नैव भिद्येत देहैरेतैश्चतुर्विधैः।
एवं प्रलोभिताः कान्ताः पुंसोऽन्यानपि भेजिरे।।१३।।

ब्राह्मणा अग्निहोत्रेषु यज्ञेषु शिथिलादराः।
व्रते दाने च होमे च देवब्राह्मणपूजने।।१४।।

पशूनां यज्ञियानाञ्च छेदने संशयं दधुः।
परस्परं गृहेऽर्चन्तो बुभुजुर्भोगमुत्तमम् ।।१५।।

स्वयमेव बुभुजिरे श्राद्धानि च व्रतानि च।
एवञ्च धर्मलोपोऽभूदेनसो वृद्धिरेव च ।।१६।।

ततो बौद्धो जगामाशु दिवोदासस्य मन्दिरम् ।
पूजितः परया भक्त्या स तेन स्वासने शुभे।।१७।।

तत ऊचे दिवोदासं वाक्यं वाक्यविशारदः।

बौद्ध उवाच

शृणु राजन् ! हितं वच्मि श्रुत्वा तत्कुरु सादरम् ।।१८।।

इयं वाराणसी शूलभृता निर्मायि तेजसा।
प्रलयेऽपि त्रिशूलाग्रे ध्रियते सर्वजन्तुभिः ।।१९।।

पुण्यवद्भिरिह स्थेयं मृतौ मोक्षमभीप्सुभिः।
पापात्मानो भैरवेण क्रियन्ते बहिरेव च।।२०।।

उपदेश गरेपछि सबै धर्मात्मा मानिसहरूले आ-आफ्ना धर्म छाडी बुद्धले भनेजस्तै आचरण गर्न लागे ।।६-९।। बुद्धको उपदेशको प्रभावबाट मानिसहरूले ब्राह्मणलाई दानमा दिइने पदार्थ आफै भोग गर्न लागे। बुद्धरूप भगवान्‌की पत्नीको नाम कमला थियो। तिनले पनि आफ्ना पतिले भनेअनुसारका उपदेश गर्दै वाराणसीका नारीहरुलाई मुग्ध तुल्याइन् । मानिसहरूका इच्छा पूरा गर्दै तिनले सबैलाई आफ्नो वशमा पारिन्। अनेक प्रयासबाट तिनले दिनदिनै मानिसहरूलाई नराम्रो मार्गमा जान उत्सुक गराइन्।।१०-११।। नगर र गाउँमा बस्ने नर-नारीहरूको बुद्धिभेदन हुँदै गयो। आफ्नो शरीर, श्रीमान्‌को शरीर र परपुरुषको शरीरमा केही फरक छैन, सबैका मुख, नाक आदि अङ्गहरू समान हुन्छन्, शरीर र आत्मामा कुनै अन्तर छैन। यसरी व्याख्या गरेपछि त्यहाँका सुन्दरीहरूले आफ्नो मन परेका पुरुषहरूसँग आनन्दपूर्वक भोग गर्न थाले।।१२-१३।। ब्राह्मणहरूले यज्ञ गर्न अल्छी गर्न थाले। व्रतोपवास, दान, हवन र देवता एवं ब्राह्मणको पूजनमा मानिसहरू शिथिल हुँदै गए।।१४।। मानिसहरूले यज्ञमा आहुति दिइने पशुहरूको वध गर्न पनि सन्देह गर्न थाले। घरमा परस्परमा एकले अर्काको पूजा गर्दै उत्तम भोगहरू भोग्न थाले। श्राद्ध र पूजन कर्ममा मीठा पकवान एवं व्यञ्जन बनाएर परिवारका मानिसहरूले मात्र खाने परम्परा चल्न थाल्यो । यसरी काशीराज्यमा धर्मको लोप र पापको वृद्धि हुँदै गयो।।१५-१६।। एक दिन बुद्धको रूप लिनु भएका भगवान् विष्णु दिवोदासका घर जानुभयो। दिवोदासले परम भक्तिपूर्वक उहाँको पूजा गरी आसनमा राखे। त्यसपछि बुद्धरूप भगवान्‌ले आफ्ना उत्तम वाक्यहरूको प्रयोग गरेर दिवोदासलाई सम्बोधन गर्दै भन्नुभयो।

**बुद्धले भन्नुभयो** - हे राजन् तपाईंलाई म एउटा हितकारी कुरा भन्दछु, त्यो सुन्नुहोस् ।।१७-१८।। वाराणसी पुरीको निर्माण त्रिशूलधारी भगवान् शङ्करबाट तेजबाट भएको हो। भगवान् शङ्करले प्रलयकालमा पनि सम्पूर्ण काशीवासी नर-नारीहरूसमेत काशी पुरीलाई आफ्नो त्रिशूलको टुप्पामा धारण गर्नुहुन्छ।।१९।। जुन मानिसमा पुण्य छ, ती मानिसहरू मात्र यहाँ बस्नुपर्दछ र जसलाई मरेपछि मोक्षको चाहना छ, ती मानिसहरू पनि यहाँ बस्नुपर्दछ। पापात्मा मानिसहरू यहाँ बस्नु हुँदैन। जो बस्न चाहन्छन्, तिनलाई भैरवले काशीबाट

रक्षणं पुण्यकर्तॄणां क्रियते तेन तेन च।
तव पुण्यं स्थितं यावत् तावदत्र स्थितो भवान् ।।२१।।

काश्यां राज्यं प्रकुर्वाण इदानीं न तथा भवान् ।
पापञ्च सम्प्रवृत्तं ते राज्ये नरककृन्नृप ।।२२।।

नृप उवाच

सम्यगुक्तं त्वया मह्यं करिष्ये वचनं तव।
ज्योतिर्विदा दुण्ढिना च प्रोक्तं तत्सत्यमेव तत् ।।२३।।

वद मे त्वञ्च कश्चासि मद्धितार्थमिहागतः।
यदि वेत्तुं मया शक्यं तत्त्वं ते पुरुषोत्तम।।२४।।

क उवाच

ततः स करुणाविष्टो दर्शयामास तं नृपम् ।
निजं चतुर्भुजं रूपं शङ्खचक्रगदाधरम् ।।२५।।

समष्टिव्यष्टिरूपेण चिद्रूपञ्च प्रदर्शितम् ।
ततो नृपो नमस्कृत्य पुपूज परया मुदा ।।२६।।

ननर्त परया भक्त्या तद्दर्शनमहोत्सवः।
धन्योऽहमिति तं प्राह पितृभ्यां सहितोऽनघ ।।२७।।

पूर्वं राज्यं परित्यज्य तपस्तप्तं मया बहु।
ब्रह्मणेदं बलान्मह्यं दत्तं राज्यमनुत्तमम् ।।२८।।

त्वद्दर्शनाज्जन्ममृती गते मे नात्र संशयः।
इदमेव परं याचे त्वामहं शरणं गतः।।२९।।

मुनिरुवाच

इत्युक्तः परमात्माऽसौ प्रोक्तवान् नृपसत्तमम् ।
विश्वेश्वरप्रसादाच्च तवापि राजसत्तम ।।३०।।

भविता परमा मुक्तिस्त्यक्त्वा राज्यं सुखी भव ।
भैरवो दण्डपाणिश्च बहिः कुर्यादतोऽन्यथा ।।३१

एवमाकर्ण्य तद्वाक्यं चिन्तां परमिकां ययौ।
ध्यात्वा विचार्य तद्धेतुं बुबोध सर्वमेव सः।।३२।।

लखेटिदिनुहुन्छ।।२०।। भगवान्का पार्षद भैरवले पुण्यवान्हरूको रक्षा गर्नुहुन्छ। हे राजा दिवोदास ! तपाईं पनि पुण्य रहेसम्म मात्र यहाँ बस्न सक्नुहुनेछ। पुण्य सकिएपछि तपाईंले पनि वाराणसी छोड्नुपर्नेछ।।२१।। अहिले काशीमा राज्य गरिरहनु भएका तपाईं पहिलेजस्तो धर्मात्मा रहनुभएको छैन, किनकि तपाईंको राज्यमा पाप फैलिइरहेको छ। यसले सबैलाई नरकतिर डोऱ्याउनेछ।।२२।।

**दिवोदासले भने** - तपाईंले राम्रो कुरा गर्नुभयो । म तपाईंको वचन पालन गर्छु। दुण्ढिरूप ज्योतिषीले जुन कुरा गर्नुभयो त्यो पनि सत्य थियो। तपाईं को हुनुहुन्छ अनि के कारणले यहाँ आउनुभएको हो ? यदि मैले जान्न र सुन्न हुन्छ भने मलाई बताउनुहोस्।।२३-२४।।

**ब्रह्माजीले भन्नुभयो** - राजा दिवोदासको सरलताबाट प्रभावित भएर दयालु नारायणले बौद्धको रूप छोडेर उहाँलाई आफ्नो शङ्ख, चक्र, गदा र पद्म धारण गर्ने चतुर्भुजस्वरूप देखाउनुभयो।।२५।। उहाँले समष्टि र व्यष्टिका रूपबाट चैतन्यको रूप पनि प्रकट गर्नुभयो । त्यसपछि राजा दिवोदासले नमस्कार गरेर हर्षपूर्वक उहाँको पूजा गरे।।२६।। राजा दिवोदास 'आज मैले नारायणको दर्शन पाएँ' भन्दै खुसीले नाचे। तिनले म आफ्ना बाबु-आमासहित धन्य भएँ भने। पहिले मैले राज्य परित्याग गरी तपस्या गरेको थिएँ। ब्रह्माजीले नल राजाबाट खोसेर मलाई राज्य दिनुभएको हो। हजुरको दर्शन पाएपछि मलाई अब जन्मनु र मर्नु पर्दैन भन्ने कुरामा सन्देह छैन। म फेरि पनि जन्मन र मर्न नपरोस् भनी हजुरसँग याचना गर्दै हजुरको शरणमा परेको छु ।।२७-२९।।

**गृत्समदले भने** - हे महारानी ! यसरी दिवोदासद्वारा प्रार्थना गरिएका भगवान् नारायणले तिनलाई भन्नुभयो - 'भगवान् विश्वेश्वरको कृपा र आफ्नो भक्तिभावका कारण तिमीले परम मुक्ति प्राप्त गर्नेछौ । तिमी अहिले नै राज्यत्याग गरेर सुखी बन, अन्यथा दण्डपाणि भैरवले तिमीलाई यहाँबाट निकालिदिनेछन्।' भगवान् विष्णुका यी कुरा सुनेर दिवोदासलाई ठूलो चिन्ता पऱ्यो। धेरैबेर विचार गरेपछि तिनलाई तत्त्वबोध भयो।।३०-३२।। राजाले ज्योतिषीका रूपमा

ज्योतिर्विदं गणेशञ्च बौद्धं मायाविनं हरिम् ।
प्रणम्य शिरसा भक्त्या कोऽसीति निजगाद तम् ।।३३।।

सोऽपि बुद्ध्वा महाविष्णुर्निजं रूपं समास्थितः।
चतुर्भुजं शङ्खचक्रगदापद्मधरं विभुम् ।।३४।।

पीताम्बरसमायुक्तं सर्वलोकाश्रयं परम् ।
उवाच तं नृपः पूज्य ! धन्योऽहं मम पूर्वजाः।।३५।।

यन्मोक्षदं पदयुगं दृष्टं पुण्यप्रभावतः।
देहि मे परमां मुक्तिं मुद्रामेतां गृहाण च ।।३६।।

बलाद् दत्तं ब्रह्मणा मे शास्तु राज्यं शिवो निजम् ।
ततो जगाद तं विष्णुः शिवो मुक्तिं प्रदास्यति ।।३७।।

क उवाच

एवमुक्त्वा दिवोदासं महायोगेश्वरो हरिः।
अन्तर्हितः पुनर्यायाद् बौद्धरूपी निजाश्रमम् ।।३८।।

प्रेषयामास दूतं स शिवागमनहेतवे ।
दिवोदासस्य राज्ये मेऽधर्मवृद्धिः कृता बहु।।३९।।

ज्योतिर्विदा गणेशेन त्यक्तं राज्यं नृपेण ते।
शीघ्रमायाहि विश्वेश ! निजां वाराणसीं पुरीम् ।।४०।।

ततो राजा राजचिह्नं त्यक्त्वा तेपे परन्तपः।
प्रासादे परमे स्थाप्य शिवलिङ्गं सुविश्रुतम् ।।४१।।

स्वनाम्ना मोक्षदं पुंसां सकामानां तु कामदम् ।
प्रतीक्षन् दर्शनं तस्य शङ्करस्यार्थदायिनः ।।४२।।

रहनुभएका भगवान् गणेश र बुद्धका रूपमा रहनु भएका भगवान् हरि दुबैलाई प्रणाम गरे। त्यसपछि राजाले विष्णुलाई तपाईँ को हो भनी सोधे । महाविष्णुले पनि प्रश्नको तात्पर्य बुझेर आफ्नो सक्कली रूप धारण गर्नुभयो । चतुर्भुज, शङ्ख-चक्र-गदा-पद्मधारी, पीताम्बर र सबै योगका आश्रय भगवान्लाई प्रणाम गर्दै राजाले भने - 'आज म धन्य भएँ, मेरा पूर्वजहरू धन्य हुनुभयो किनकि पहिले पुण्यका प्रभावले मोक्षदायक हजुरका चरणकमलको दर्शन गरें । मलाई परम मुक्ति प्रदान गर्नुहोस्। म हजुरलाई यो स्वर्णमुद्रा टक्र्याउँछु। यो राज्य मैले आफैं चाहेर पाएको होइन । ब्रह्माजीले मलाई जबर्जस्ती दिनुभएको हो। यो शिवजीको राज्य हो र यहाँ भगवान् शिवजीले नै शासन गर्नुपर्दछ।' त्यो कुरा सुनेर भगवान् विष्णुले दिवोदासलाई भन्नुभयो - 'तिमीले चिन्ता नगर, भगवान् शिवजीले तिमीलाई मोक्ष प्रदान गर्नुहुनेछ ।।३३-३७।।'

**ब्रह्माजीले भन्नुभयो** - यसरी महायोगेश्वर नारायण दिवोदासलाई वरदान दिएर अन्तर्धान हुनुभयो। अर्कोतर्फ उहाँ नै बुद्धको रूप लिएर आफ्नो आश्रमतर्फ जानुभयो। भगवान् विष्णुले शिवजीलाई मन्दराचलबाट काशीमा ल्याउनका लागि दूत पठाउनु भयो। दूतका माध्यमबाट सन्देश दिंदै भन्नुभयो - 'हे शिवजी ! दिवोदासका राज्यमा आएर मैले धेरै किसिमका अधर्म फैलाएँ। ज्योतिषीका रूपमा आउनुभएका भगवान् श्रीगणेशले पनि त्यस्तै काम गर्नुभयो। हे विश्वनाथ ! हजुर छिटै आफ्नो नगरी वाराणसीमा आउनुहोस् ।।३८-४०।।' त्यसपछि काशीका राजा दिवोदासले पनि राजमुकुट झिकेर आफ्नो निवासमा आफ्नो नामसमेत जोडेर शिवलिङ्गको स्थापना गरी प्रतिष्ठा गरे र आफूले चिताएको कामना पूरा गर्ने भगवान् शङ्करको दर्शनको प्रतीक्षा गर्दै रहे ।।४१-४२।।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे दिवोदासराज्यत्यागो नाम सप्तचत्वारिंशोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'दिवोदासद्वारा राज्यत्याग' शीर्षकान्वित सतचालीसौं अध्याय पूर्ण भयो ।।४७।।

ॐ

## अष्टचत्वारिंशोऽध्यायः { ४८ अध्याय }

मुनिरुवाच

त्यक्तं राज्यमिति ज्ञात्वा निजं रूपं समाश्रितः।
अवसत् सर्वलोकानां ढुण्ढिस्तत्रार्थदायकः ।।१।।

दूतञ्च प्रेषयामास शीघ्रमागम्यतामिति।
शङ्कराय महाबुद्धिस्ततः स हर्षनिर्भरः ।।२।।

आरुह्य वृषभं देवो ययौ वाराणसीं पुरीम् ।
दिव्यवादित्रनिर्घोषैः स्वगणैः परिवारितः ।।३।।

जैगीषव्यं निराहारं वल्मीकमिव संस्थितम् ।
अनुगृह्य ययौ ढुण्ढिं प्रणम्य च उवाच तम् ।।४।।

शिव उवाच

त्वमेव विश्वेश्वर विश्वरूप !
विश्वं सृजस्यत्सि हि पासि देव !
शुभाशुभं कर्म निरीक्ष्य तस्य
ददासि भोगं विविधं गणेश ! ।।५।।

ब्रह्मेङ्गितात्ते जगतीं विधत्ते
तद्रक्षणञ्चैव हरिस्तथाऽहम् ।
संहारकारीह चराचरस्य
विभागकृत्यं हि गुणत्रयस्य ।।६।।

तव प्रसादाद्धरिरब्जजोऽपि
शिवश्च शक्तो निजकर्मसिद्ध्यै ।
त्वया विना वेदविधिर्वृथा स्यात्
त्वदीयशक्त्या सुरशत्रुनाशः ।।७।।

अनन्तशक्तिः प्रकृतिः पुरा त्वां
समर्च्य दुष्टं महिषं जघान ।
यच्छ्वासनिर्धूतनगप्रपात-
भीतं जगत्कृत्स्नमिदं ररक्ष ।।८।।

**गृत्समदले भने** - दिवोदासले राज्यत्याग गरेपछि आफ्नो रूपमा प्रकट हुनुभएका मानिसका सबै कामना परिपूर्ण तुल्याउनुहुने भगवान् गणेश काशीमा विराजमान हुनुभयो ।।१।। एक दिन उहाँले एउटा दूतलाई मन्दराचलतर्फ पठाउनुभयो। त्यस दूतसँग उहाँले भगवान् शङ्करलाई हजुर छिटै आउनुहोस् भन्ने सन्देश पठाउनुभएको थियो। भगवान् शङ्करको आगमनका लागि दूत पठाएपछि भगवान् गणेश मनमनै अत्यन्त हर्षित हुनुभयो।।२।। उता मन्दराचलमा विराजमान भगवान् शिवजी गणेशको सन्देश थाहा पाएर नन्दीनामक साँढेमा सवार भई आफ्ना गणहरूका साथ दिव्य बाजा बजाउँदै वाराणसी आउनुभयो।।३।। भगवान् शिवजीले वाराणसी आउनुभन्दा पहिले धमिराको माटाले पुरिएर निराहार तपस्या गरिरहेका जैगीषव्य ऋषिमाथि कृपा गर्नुभएको थियो । वाराणसीमा आएर उहाँले श्रीगणेशलाई सम्बोधन गर्दै भन्नुभयो।।४।।

**शिवजीले भन्नुभयो** - हे श्रीगणेश ! हजुर नै विश्वेश्वररूप र विश्वरूप पनि हुनुहुन्छ । हजुरले विश्वको रचना र पालन गर्नुहुन्छ । हजुरले आफ्ना भक्तहरूलाई तिनको शुभ-अशुभ कर्मअनुसार अनेक थरि फल प्रदान गर्नुहुन्छ ।।५।। हे गणेश ! हजुरको सङ्केत पाएर ब्रह्माजीले सृष्टि गर्नुहुन्छ, भगवान् नारायणले रक्षा गर्नुहुन्छ र मैले संहारको काम गर्दछु। तीन गुणअनुसार विभाग गरिएका कामहरूलाई हामी तीन जनाले हजुरको निर्देशनअनुसार पालन गर्दछौं।।६।। हजुरको कृपाबाट नारायण, ब्रह्मा र म हामी तीनै जना आ-आफ्नो कर्मसम्पादनमा लागिरहेका हुन्छौं। हे गणेश ! हजुर नहुने हो भने वेदको विधान व्यर्थ हुनेथियो। हजुरकै कृपाबाट असुर र शत्रुको विनाश गर्न सकिन्छ।।७।। अनन्त शक्तिसम्पन्न भगवती दुर्गाले पनि हजुरको आराधना गरेर महिषासुरनामक दुष्ट दानवको विनाश गर्नुभएको थियो । जुन महिषासुरको श्वास-प्रश्वासबाट बाहिर आएका हावाले पर्वतहरूको पतन हुँदा भयभीत संसारको रक्षा आद्या भगवतीबाट भएको थियो ।।८।। हे

त्वमप्रमेयोऽखिललोकसाक्षी
त्वमव्ययः कारणकारणञ्च ।
वेदा विकुण्ठास्त्वयि सर्व एव
शेषो धराभृत्तव भक्तितो हि ।।९।।
त्वामेव नत्वा परिपूजयन्तः
सन्तो यजन्ते मनसा स्मरन्तः ।
त्वय्येव भक्तिं परिकल्पयन्तो
मुक्तिं भजन्ते परिवृत्तिहीनाः ।।१०।।
अनेकरूपाङ्घ्रिविलोचनस्त्व-
मनेकशीर्षश्रुतिबाहुजिह्वः ।
अनन्तविज्ञानघनो ह्यनेक-
ब्रह्माण्डहेतुः परमप्रकाशः ।।११।।
तव प्रसादादविमुक्तमेतद्
दृष्टञ्चिराद् यत्नवताऽखिलेश ! ।

मुनिरुवाच

एवं स्तुत्वा च सम्पूज्य प्रार्थयामास शङ्करः ।।१२।।
गतं विरहदुःखं मे प्राप्य वाराणसीं पुरीम् ।
इदानीं सर्वदा रक्ष मद्भक्तांश्च पुरीमिमाम् ।।१३।।
विना प्रसादं ते न स्यात् काशीवासः कदाचन ।
दण्डपाणेर्भैरवस्य तेऽपि यस्य कृपा भवेत्।।१४।।
तारकं ब्रह्म तस्यान्ते दिशामि च न चान्यथा ।
माघमासि चतुर्थ्यां यो भौमवारे विधूदये।।१५।।
अपूपैर्मोदकैरन्यैरुपचारैः प्रपूजयेत् ।
संहृत्य तस्य सङ्कष्टं स्तोत्रपाठेन यो नुयात् ।।१६।।
तस्यापि सकलान् कामान् यच्छ लक्ष्मीमनेकधा ।
य इदं प्रातरुत्थाय त्रिसन्ध्यं वापि भक्तितः ।।१७।।
पठेत् स्तोत्रं सकृद् वापि भुक्तिर्मुक्तिश्च तस्य च ।
अन्वेषयित्वा सर्वार्थान् विदधासि नृणामिह ।।१८।।

गणेश ! हजुर यस्तै रूपका हुनुहुन्छ भन्न सकिँदैन । हजुरको महिमा अवर्णनीय छ । हजुर संसारका साक्षी र अविनाशी तत्त्व हुनुहुन्छ । हजुर कारणका पनि कारणरूपमा रहनुभएको छ । हजुरको उपस्थितिमा नै वेदहरूले सक्रिय भएर काम गर्दछन्। त्यसैगरी शेषनाग पनि हजुरमा भक्तिभाव राखेका कारण पृथिवीको धारण गर्न समर्थ छन् ।।९।। सज्जनहरूले हजुरलाई नमस्कार गरी स्मरण र पूजन गर्दै यज्ञहरू सम्पन्न गर्दछन्। संसारको भोगबाट विरक्त भएका सन्यासीहरू हजुरका भक्तिको माध्यमबाट मुक्तिको परिकल्पना गर्दछन्।।१०।। हे भगवन्! हजुरका अनेक रूप छन्। हजुरका हजारौं पाउ, आँखा, शिर, कान, हात र जिभ्राहरू छन्। हजुर अनन्त विज्ञानका स्रोत र अनेक ब्रह्माण्डका कारण पनि हुनुहुन्छ । हजुर स्वप्रकाश र परम प्रकाश पनि हुनुहुन्छ ।।११।। धेरै कालदेखि म नहुँदा काशी नगरी शून्य थियो। अहिले हजुरको प्रयासबाट म यहाँ आउन पाएँ। म आउनाले काशी नगरी पनि प्रसन्न देखिएको छ ।

**गृत्समदले भने** - यसरी भगवान् शिवले भगवान् गणेशको स्तुति र पूजा गरेर प्रार्थना गर्दै भन्नुभयो - 'हे ढुण्ढिराज! मेरा विरहका दिन गए । म अब आफ्नो घर वाराणसी पुरीमा आइपुगेको छु। अब उप्रान्त हजुरले वाराणसी पुरीको रक्षा गर्दै मेरा भक्तहरूको पनि रक्षा गर्नुहोस् ।।१२-१३।। हजुर प्रसन्न नभएसम्म मेरो काशीवास सफल हुँदैन। हजुरका प्यारा दण्डपाणि भैरव र हजुरको जसमाथि कृपा हुन्छ त्यसलाई मैले काशीमा रहेर मृत्युकालमा तारकब्रह्मको उपदेश गर्नेछु। माघ महिनाको चतुर्थी तिथिमा मङ्गलबार परेको समयमा चन्द्रमाको उदय हुँदा जसले मालपुवा, मनभोग र लड्डू आदि सामग्री समर्पण गरेर मेरो पूजा गर्दछ र स्तोत्रपाठ गर्दछ त्यसका सम्पूर्ण कष्टहरूलाई मैले नाश गरिदिनेछु। हजुरले पनि त्यस्ता भक्तका सबै कामना परिपूर्ण तुल्याउनु हुनेछ र त्यसलाई श्रीसम्पन्न बनाउनुहुनेछ । जसले प्रातःकालमा उठेर भक्तिपूर्वक यो स्तोत्र पढ्दछ अथवा सङ्कटको समय र अन्य समयमा पनि श्रद्धापूर्वक पाठ गर्दछ त्यसका हातमा भुक्ति र मुक्ति दुबै हुन्छन्। हे गणेश! हजुरले संसारका पदार्थहरूको अन्वेषण गरेर मानिसहरूको कल्याण गर्नुहुन्छ । त्यस कारण हजुर संसारमा

अतो ढुण्ढिरिति ख्यातस्त्रिलोक्यां त्वं भविष्यसि !
ढुण्ढिरित्येव तं नाम मुक्तिदं पापनाशनम् ।।१९।।

स्मरणात् सर्वकार्याणां सिद्धिदश्च भविष्यति ।

मुनिरुवाच

एवमुक्त्वाऽस्थापयत् स गण्डकीयशिलाकृताम् ।।२०।।

मूर्तिं ढुण्ढेर्महादेवः प्रासादे चारुनिर्मिते ।
ततो विवेश भवनं सर्वे देवाः स्वमन्दिरम् ।।२१।।

दिवोदासस्य मुक्तिं स ददौ भक्तस्य शङ्करः ।

गृत्समद उवाच

एवं विमोहितस्तेन दिवोदासः स्वमायया ।।२२।।

विष्णुना बौद्धरूपेण तस्यास्य च हितं कृतम् ।
सर्वं ते कथितं देव ! सामर्थ्यं ढुण्ढिना कृतम् ।।२३।।

एवं प्रभावो देवोऽसौ यद्वरादुत्थितः सुतः ।

क उवाच

एवं गृत्समदः प्रोक्त्वा तस्यै ढुण्ढिविचेष्टितम्।।२४।।

गृहीत्वाज्ञां ययौ शीघ्रं निजमाश्रममण्डलम्।
तदानीमेव सा पुत्रमादाय प्रस्थिता ततः।।२५।।

ढुण्ढेरायतनं याता नानानारीनरैर्युतम्।
महोत्सवं प्रकुर्वद्भिर्दृष्ट्वा कीर्तिर्ननाम तम्।।२६।।

ययौ वाराणसीं पुण्यां मरणान्मुक्तिदायिनीम्।
माघमासे चतुर्थ्यां सा भौमवारे मुदान्विता।।२७।।

अनेकस्वर्णपात्रस्थैः पक्वान्नैः पायसादिभिः।
पूजितं भक्तनिवहैर्नृत्यगीतविशारदैः।।२८।।

ढुण्ढिराजका नामबाट प्रख्यात हुनुहुनेछ । हजुरको यो ढुण्ढिराज भन्ने नाम पापनाशक र मुक्तिदायक छ।।१४-१९।। जसले कुनै कार्यको आरम्भ गर्दा ढुण्ढिराज भनेर सम्बोधन गर्दछ त्यसको कार्य सिद्ध हुन्छ।

**गृत्समदले भने** - भगवान् शङ्करले यसरी प्रार्थना गर्नुभएपछि कालीगण्डकीको शिलाबाट तयार गरिएको ढुण्ढिराज गणेशको मूर्तिलाई सुन्दर मन्दिरमा स्थापित गरेर काशीमा विराजमान आफ्नो धाममा प्रवेश गर्नुभयो र अरू देवताहरू पनि आ-आफ्नो धामतर्फ लागे।।२०-२१।। त्यसपछि भगवान् शङ्करले काशीमा रही आफ्नो कार्यकालमा निष्ठाका साथ शासन सञ्चालन गर्ने राजा दिवोदासलाई पनि मुक्ति प्रदान गर्नुभयो।

**गृत्समदले भने** - हे कीर्ति ! यसरी भगवान् श्रीगणेशले आफ्नो मायाबाट र भगवान् विष्णुले बुद्धरूपको प्रकाशनबाट दिवोदासलाई मोहित गर्नुभएको थियो।।२२।। अन्तमा भगवान् विष्णुले आफ्ना दुवै स्वरूपबाट दिवोदासको कल्याण पनि गर्नुभयो। मैले तपाईंलाई यी सबै कुराका साथै भगवान् गणेशको ढुण्ढिराज नामको महिमा र उहाँको सामर्थ्यको विषयमा पनि बताएँ।।२३।। यस्ता प्रभावशाली भगवान् गणेश हुनुहुन्छ, जसका वरदानबाट हे महारानी ! तपाईंका छोरा पनि होशमा आएका थिए ।

**ब्रह्माजीले भन्नुभयो** - यसरी गृत्समद कीर्तिलाई ढुण्ढिराजको क्रियाकलाप बताए र उनीसँग आज्ञा लिएर आफ्नो आश्रमतर्फ लागे। कीर्ति पनि आफ्नो पुत्रलाई लिएर दरबारतर्फ लागिन्।।२४-२५।। त्यसपछि ती कीर्ति अनेक थरि नरनारीले परिपूर्ण ढुण्ढिराज श्रीगणेशको मन्दिरमा गइन्। त्यहाँ मानिसहरूले अनेक थरि उत्सव गरिरहेका थिए। कीर्तिले त्यहाँ पुगेर भगवान् ढुण्ढिराजलाई नमस्कार गरिन्।।२६।। त्यसपछि कीर्ति आफ्नो शरणमा आई मृत्युवरण गर्ने मानिसहरूलाई मुक्ति प्रदान गर्ने काशी पुरीमा गइन्। माघ महिनाको चतुर्थी तिथिमा मङ्गलवारका दिन खुसी भएर अनेक सुनका पात्रहरूमा पकवान, खीर आदि राखेर पूजा गर्न तयार भएका, नृत्य, गायन र वाद्यमा कुशल कलाकारहरूद्वारा परिपूर्ण, नानाथरिका अलङ्कारले सुहाएका, दिव्यमाला धारण गर्ने,

नानालङ्कारसंयुक्तं दिव्यमाल्याम्बरावृतम्।
नानामणिगणोपेतं नानामुक्ताविभूषितम्।।२९।।

सुवर्णरत्ननिचयैर्दक्षिणार्थं निवेदितैः।
न दृश्यते देवमुखमिति चिन्तापराऽभवत् ।।३०।।

मयाऽकिञ्चनयाऽस्मै किं निवेद्यमिति साऽनघ ।
सदूर्वाशमीमन्दारकुसुमैर्मार्गसञ्चितैः।।३१।।

पुपूज परया भक्त्या पुत्रोदयमयाचत ।
शमीमन्दारदूर्वाभिर्यथा तुष्टोऽभवत्तयोः ।।३२।।

न तथा द्रव्यनिचयैर्ढुण्ढिराजस्तुतोष ह ।
ततो भक्ता गताः सर्वे स्वस्वमन्दिरमादृताः।।३३।

उभौ तौ जननीपुत्रौ सन्निधौ तत्र तस्थतुः।
तयोर्निराहारतया भक्तिभावेन तोषितः।।३४।।

आविरासीन्मूर्तिमध्याद् ढुण्ढिराजो महोत्कटः।
ऊचतुर्मुनिना प्रोक्तं यत् स्वरूपं महेशितुः।।३५।।

तदेतत् पुण्यनिचयैर्दृष्टं साक्षात् सुभास्वरम्।
सर्वालङ्कारसंयुक्तं मुकुटेन विराजितम् ।।३६।।

दशबाहुधरञ्चारुनेत्रपङ्कजशोभितम्।
अनर्घ्यरत्नमुक्तानां बिभ्रद् दाम महत्तरम्।।३७।।

पीताम्बरयुतं दन्तविराजितमनुत्तमम्।
दृष्ट्वैवं परमं रूपं मग्नावानन्दसागरे।।३८।।

विस्मृतौ पूजनं कर्तुं नमस्कारञ्च तावुभौ ।
उवाच भगवान् देवो वरं वरय सुव्रते ।।३९।।

सुप्रसन्नः प्रदास्यामि यत् ते मनसि वर्तते ।
मुक्ताफलैर्न रत्नैश्च द्रव्यैर्नानाविधैरहम् ।।४०।।

प्रीतो यथा शमीपत्रैर्मन्दारैरपि शोभने !

अनेक थरि मणि र रत्नले सम्पन्न, मोतीका हारले अलङ्कृत, दक्षिणाका लागि निवेदन गरिएका रत्नहरूले शोभायमान, भगवान् श्रीगणेशका मन्दिरको दर्शन गरिन् । गर्भगृहमा गएर धेरै पटक प्रयास गर्दा पनि ढुण्ढिराजको अनुहार हेर्न पाइनन्। यसकारण उनको मनमा चिन्ता पर्‍यो।।२७-३०।। उनले भनिन्- 'म अकिञ्चन छु, मैले के निवेदन गरूँ ? मानिसहरूले पूजाका सामग्री तयार गरेका छन्, मसँग केही पनि छैन।' यस्तो तर्क गरिरहेकी कीर्तिले बाटोमा आउँदा टिपेका दूबो र शमीसहित धतुराका फूलहरूद्वारा परम भक्तिले पूजा गरी पुत्रको उदयको कामना गरिन्। शमीको पात, धतुराको फूल र दूर्वाङ्कुर समर्पण गरेर जति छिटो भगवान् प्रसन्न हुनुहुन्छ त्यति अन्य वस्तुहरू चढाएर हुनुहुन्न । त्यसकारण महारानी कीर्तिले श्रद्धापूर्वक धतुरो, दूबो र शमी चढाउँदा भगवान् श्रीगणेश प्रसन्न हुनुभयो। त्यहाँ रहेका अनेक भक्तहरू आ-आफ्ना घरमा गए । तर ती आमा-छोरा भने त्यहीं नै बसिरहे। निराहार बसेर भगवान्को आराधना गरेका कारण ती दुबैप्रति भगवान् प्रसन्न हुनुभयो ।।३१-३४।। तिनको भक्तिले प्रसन्न हुनुभएका भगवान् ढुण्ढिराज आफ्नै मूर्तिबाट प्रत्यक्ष देखिनुभयो। ती आमा-छोराले भने - 'भगवान् श्रीगणेशका स्वरूपका विषयमा गृत्समद ऋषिले जसरी हामीलाई उपदेश दिनुभएको थियो त्यही स्वरूप आज हामीले पुण्यका प्रतापबाट दर्शन गर्न पायौं। यो स्वरूप निर्मल प्रकाशले उज्ज्वल छ र सबै प्रकारका अलङ्कारहरूबाट अलङ्कृत छ। शिरमा मुकुट रहेका कारण अत्यन्त सुहाएको छ। यस मूर्तिमा दश हातहरूका साथै मनोहर नयनहरू छन् । बहुमूल्य रत्न र मोतीको मालाद्वारा विभूषित यो स्वरूप पीताम्बर र एकदन्तले शोभायमान छ।' यसरी वर्णन गर्दै भगवान् गणेशको दिव्यरूप साक्षात्कार गरेर ती आमा-छोरा आनन्दको सागरमा डुबुल्की मार्न थाले।।३५-३८।। गणेशको भक्तिमा डुबेर भावविह्वल भएका ती दुबैले भगवान्लाई नमस्कार र पूजा गर्न पनि बिर्से। त्यस बेला भगवान् ढुण्ढिराजले भन्नुभयो- 'हे पतिव्रता नारी! वरदान माग, म प्रसन्न भएको छु। तिमीले चिताएका कुरा पुर्‍याउँनेछु । म मोती, रत्न र बहुमूल्य पदार्थ अर्पण गरेर त्यति प्रसन्न हुँदिनँ जति शमीपत्र र धतुरो चढाउँदा प्रसन्न हुन्छु।'

क उवाच

एवमाकर्ण्य तद्वाक्यं कीर्तिस्तोषमियात् परम्।।४१।।

देहभावं समासाद्य जगाद द्विरदाननम् ।
किं स्त्रिया वचनं कार्यं सर्वज्ञे सर्वरूपिणि।।४२।।

आज्ञयाऽथ तथाऽप्यूचे सान्निध्याल्लब्धबोधया ।

कीर्तिरुवाच

निष्कलो निरहङ्कारो निर्गुणोऽसि जगत्प्रभुः।।४३।।

पूर्णानन्दः परानन्दः पुराणश्च परात्परः।

दिक्पालरूपी सोमार्कसरित्सागररूपवान्।।४४।।

त्वमेव पृथिवी वायुराकाशस्तेज एव च।

जलं तथाऽन्तरिक्षञ्च गन्धर्वोरगराक्षसाः।।४५।।

चराचरस्वरूपस्त्वं दीनानाथकृपानिधिः।

विनायकादिरूपेण व्यक्तिं प्राप्तोऽसि साम्प्रतम्।।४६।।

अद्य मे नयने धन्ये जन्म भर्ता सुतोऽप्ययम्।

पितरौ च कुलं शीलं रूपं ज्ञानं तपोऽपि च।।४७।।

जन्मान्तरीयपुण्येन दृष्टः क्षिप्रप्रसादनः

तवैव चाज्ञया देव स्थापिताऽस्य तवाभिधा ।।४८।।

सपत्न्याऽस्य विषं दत्तं मृत उत्थापितः पुनः।

गृत्समदेन मुनिना तव भक्त्यैव विश्वराट्।।४९।।

शमीपत्रैश्च पूजा ते कथिता तव लब्धये ।

मुनिप्रभावाद् दृष्टोऽसि तापत्रयनिवारण।।५०।।

**ब्रह्माजीले भन्नुभयो** - श्रीगणेशका यस्ता कुरा सुनेर कीर्ति अत्यन्त सन्तुष्ट भइन्।।३९-४१।। तिनले देहभावमा आएर भगवान् गणेशको प्रार्थना गर्दै भनिन् - 'हजुर सर्वज्ञ हुनुहुन्छ र सर्वरूप पनि हुनुहुन्छ। म नारी जातिका यी वचनले हजुरको के विशेषता बताउन सक्छु ? तैपनि हजुरको आज्ञा पाएर नजिकमा रहन पाउँदा केही ज्ञान पनि पाएकी छु। त्यस कारण म केही कुरा निवेदन गर्दछु।'

**कीर्तिले भनिन्** - 'हे भगवन् ढुण्ढिराज! हजुर कलारहित हुनुहुन्छ र अहङ्काररहित पनि। हजुर निर्गुण हुनुहुन्छ र जगत्का स्वामी पनि हुनुहुन्छ ।।४२-४३।। हे प्रभु ! हजुर पूर्णानन्द, परानन्द र पुराणपुरुष पनि हुनुहुन्छ। हजुरको स्वरूप भन्नु नै परात्पर स्वरूप हो। हजुर दिक्पाल, सूर्य-चन्द्र र नदी-सागरका स्वरूपमा सुहाउनुहुन्छ। हजुर पृथिवी, वायु र आकाशका साथै तेजको रूपमा पनि हुनुहुन्छ। पानी, धर्ती, गन्धर्व, नाग, राक्षस यी सबै हजुरका रूप हुन्। हजुर चर र अचर रूपमा विराजमान हुनुहुन्छ। हजुर दीनदुःखीका स्वामी र कृपाका सागर पनि हुनुहुन्छ । हजुर विनायक, मयूरेश, महोत्कट, विकट र ढुण्ढिराज आदि नामबाट अहिले प्रकट हुनुभएको छ।।४४-४६।। हजुरको दर्शन पाएर आज मेरा आँखा धन्य भएका छन् र मेरो जन्म अत्यन्त सफल भएको छ। मेरा पति भाग्यवान् हुनुभएको छ र यो छोरा पनि अत्यन्त सौभाग्यशाली बनेको छ । मलाई जन्म दिने आमा-बाबु, कुल, शील, रूप, ज्ञान र तपस्या पनि आज सफल भएका छन्।।४७।। जन्म-जन्मान्तरमा गरेका पुण्यका प्रतापले आज छिटै प्रसन्न हुनुहुने देवता क्षिप्रप्रसादनको मैले दर्शन पाएँ। हजुरकै आज्ञाले मैले मेरा यस पुत्रको नाम पनि क्षिप्रप्रसादन राखेकी छु ।।४८।। मेरो छोरा चार वर्षको हुँदा मेरी सौताले यसलाई विषपान गराइन्। हे विश्वराट् ! यो छोरा मर्यो, तर हजुरका भक्त गृत्समद मुनिले मरेको छोरालाई पनि बचाइ-दिनुभयो।।४९।। गृत्समद मुनिले हजुरको दर्शन प्राप्त गर्नका लागि शमीपत्र चढाएर पूजा गर्नुपर्छ भन्नुभएको थियो। मैले आज त्यसै गरें। हे प्रभु! मुनिको प्रतापबाट आज मैले आधिभौतिक, आधिदैविक र आध्यात्मिक गरी तीन प्रकारका तापहरूको नाश गर्नुहुने हजुरको दर्शन पाएँ। यदि हजुर प्रसन्न हुनुहुन्छ भने हे नाथ !

प्रसन्नश्चेद् देहि नाथ ! भक्तिं मम सुतस्य ते ।
त्रैलोक्येऽपि यशश्चाग्र्यं राज्ये निःसङ्गवृत्तिताम्।।५१।।

दीर्घायुः सद्‌गुणग्रामं बलं कीर्तिं सुखं क्षमाम्।
विजयं सर्वसंग्रामे द्विजे देवे रतिं पराम्।।५२।।

दुण्ढिरुवाच

ये ये वरास्त्वया प्रोक्तास्ते ते दत्ता मयाऽनघे ! ।
सहस्त्रयज्ञकर्ताऽसौ जीवन् वर्षसहस्त्रकम्।।५३।।

शान्तो दान्तो हि मद्भक्तो राज्यं कर्ता सुतस्तव।
चतुर्भिरप्युपायैः स वशे सर्वं करिष्यति।।५४।।

मम ध्यानं नामजपः सर्वदाऽस्य भविष्यति।
अन्ते मम स्मृतिं कृत्वा मत्स्वरूपं प्रपत्स्यते।।५५।।

क उवाच

एवं तस्यै वरान् दत्त्वा परितुष्टो विनायकः।
ददौ स्वपरशुं तस्य पर्शुबाहुरिति स्फुटम् ।।५६।।

चक्रे नाम स्वयं देवस्ततश्चान्तर्हितोऽभवत्।।५७।।

मेरो छोरालाई पनि हजुरले आफ्नो भक्ति प्रदान गर्नुहोस्, यसको कीर्ति स्वर्ग, मर्त्य, पातालमा फैलियोस्। राज्य-पालन गर्दा कसैको पक्षमा नलागेर तटस्थभावले सबैमा सर्वदर्शी भई शासन गर्ने प्रवृत्ति र सामर्थ्य प्रदान गर्नुहोस्।।५०-५१।। हे प्रभु ! हजुरले मेरा छोरालाई दीर्घायु बनाउनुहोस् । यसलाई उत्तम गुण, बल, कीर्ति, सुख, क्षमा, सम्पूर्ण सङ्ग्रामहरूमा विजय, देवता र ब्राह्मणमा भक्ति यी सबै कुराहरू प्रदान गर्नुहोस्।।५२।।'

**दुण्ढिराजले भन्नुभयो** - हे कीर्ति ! तिमीले जुन जुन वरदान मागेकी छ्यौ, मैले ती सबै तिमीलाई प्रदान गर्दछु। हे निष्पाप नारी ! तिम्रा छोराले एक हजार वर्षसम्म बाँचेर एक हजार यज्ञ सम्पन्न गर्नेछन्। यी तिम्रा छोरा शान्त, इन्द्रियविजयी, राज्यका पालक र मेरा भक्त पनि हुनेछन्। यिनले आफ्नो शासनकालमा साम, दान, दण्ड, भेद यी चारै कुरा अँगालेर सम्पूर्ण संसारलाई आफ्नो वशमा तुल्याउनेछन्।।५३-५४।। यिनले सधैं मेरो ध्यान गर्नेछन् र मेरो नामजप पनि गर्नेछन्। अन्तमा मलाई संझदै मेरै रूपमा प्राप्त हुनेछन्।।५५।।

**ब्रह्माजीले भन्नुभयो-** प्रसन्न हुनुभएका भगवान् ढुण्ढिराजले यसरी कीर्तिका छोरालाई वरदान दिएर आफ्नो परशु (बञ्चरो) पनि दिनुभयो। पछि उहाँले ती राजकुमारको नाम परशुबाहु पनि राख्नुभयो। त्यसपछि भगवान् श्रीगणेश अन्तर्धान हुनुभयो।।५६-५७।।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे कीर्तेर्वरप्रदानं नामाष्टचत्वारिंशोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'रानी कीर्तिलाई वरप्राप्ति' शीर्षकान्वित अठ्चालीसौं अध्याय पूर्ण भयो ।।४८।।

ॐ

## ऊनपञ्चाशोऽध्यायः　　{ ४९ अध्याय }

क उवाच

एवं लब्धवरा कीर्तिः शेषां रात्रिं निनाय च ।
उषः स्नात्वा प्रपूज्याशु मूर्तिं पुत्रयुता ययौ ।।१।।
हर्षिता दुःखिता देवविरहान्नगरं स्वकम् ।
नानाध्वजपताकाभिः सेकैर्धूपैरलङ्कृतम् ।।२।।
ढुण्ढिनाम जपन्तौ तौ नृपपत्नीसुतावुभौ।
ज्ञात्वागतौ नृयानेन सेनया वाद्यनिस्वनैः ।।३।।
आनिन्ये नगरं कर्णपुरं नाम्ना सुविश्रुतम् ।
मूर्ध्न्याघ्रायाशु तनयं सस्वजे परमादरात् ।।४।।
उवाच परमप्रीतो हर्षगद्गदया गिरा ।
क्षिप्रप्रसादन ! सुत ! श्रान्तोऽसि बहुवासरम् ।।५।।
दृष्ट्वा त्वां परमाह्लादं प्राप्तौ लब्ध्वा सुधामिव ।
विससर्जाखिलाँल्लोकान् दत्त्वा वस्त्राणि दक्षिणाः ।।६।।
कीर्तिश्च स नृपः पश्चात्परस्परमथोचतुः ।
साऽपि सर्वं नृपायास्मै वृत्तान्तं संन्यवेदयत् ।।७।।
परस्परालिङ्गनचुम्बनानि
　　हास्यं विनोदं परिचक्रतुस्तौ ।
ताम्बूलविच्छेदमपि प्रहर्षात्
　　कामस्य युद्धं निरपत्रपौ च ।।८।।
ततः कतिपयाहस्सु ज्ञात्वा पुत्रं गुणाकरम् ।
विनीतं सर्वधर्मज्ञं नीतिशास्त्रविशारदम् ।।९।।
अभिषेचनसम्भारान् कृत्वाहूय वरान् द्विजान् ।
सुहृदः सर्वराजन्यानभिषेकं सुते ददौ ।।१०।।
शुभे मुहूर्ते सल्लग्ने सप्तेष्टग्रहसंयुते ।
कृत्वाऽऽभ्युदयिकं श्राद्धं स्वस्तिवाचनपूर्वकम् ।।११।।
नानाद्रव्ययुतैस्तोयैरभिषेकमकारयत् ।
नदत्सु सर्वतुर्येषु ऋग्यजुस्साममन्त्रतः ।।१२।।

**ब्रह्माजीले भन्नुभयो** - भगवान् श्रीगणेशबाट वरदान पाएकी कीर्तिले त्यो रात आनन्दपूर्वक बिताइन् । बिहान उठी स्नान गरेर छिट्टै छोरालाई साथमा लिई भगवान् श्रीगणेशको पूजा गरेर आफ्नो नगरतर्फ लागिन् ।।१।। वरदान पाएका कारण ती रानी त्यसबेला खुसी थिइन् । भगवान्को मन्दिर छाडेर आफ्नो नगर जानुपरेकोमा दुःखी पनि थिइन् । ढुण्ढिराजको नामजप गरिरहेका ती आमा-छोरा अनेक थरि ध्वजापताका, जलको सिञ्चन र सुगन्धसेचनबाट रमणीय बनेको नगरमा पुगे ।।२।। ती आमा-छोरालाई आएको जानेर राजाले मनुष्यवाहन लिन पठाए र बाजागाजाका साथ कर्णपुरनामक नगरमा भित्र्याए । आफ्ना छोराको शिरमा सुँघेर श्रद्धापूर्वक आलिङ्गन गरे ।।३-४।। तिनले अत्यन्त खुसी भएर हर्षले गद्गद वाणीको उच्चारण गर्दै भने- 'बाबु क्षिप्रप्रसादन ! तिमी थाकेका छौ, धेरै दिनसम्म भगवान्को आराधना गर्यौ, तिमीलाई देखेर मैले ठूलो आनन्द पाएको छु, मलाई त अमृतै पाएजस्तो भएको छ ।' त्यसपछि कीर्तिले पनि आफ्नो दर्शन गर्न आएका नगरवासीहरूलाई वस्त्र र दक्षिणा प्रदान गरी बिदा गरिन् ।।५-६।। त्यसपछि कीर्ति र राजाले परस्परमा कुरा गरे। ती रानीले सबै कुरा राजालाई बताइन् ।।७।। आनन्दै आनन्दमा डुबेका ती दम्पतीले आपसमा अङ्कमाल र चुम्बन पनि गर्दै हाँसो ठट्टा पनि गरे । त्यसपछि एउटाले खाएको पान अर्कोले मुखले नै तानेर खानेजस्ता कामक्रीडाहरू पनि चले। त्यस अवसरमा राजारानी दुबै निर्लज्ज भएका थिए ।।८।। यसरी ती दुबैको गृहस्थजीवन आनन्दमय बन्यो। केही कालपछि राजाले आफ्ना छोरा क्षिप्रप्रसादनलाई गुणी, नम्र, धर्मात्मा एवं नीतिशास्त्रमा विद्वान् भएको जानेर राज्याभिषेकका सामग्रीहरू जम्मा गरी उत्तम ब्राह्मण, मित्र र अन्य राजाहरूलाई समेत जुटाएर छोराको राज्याभिषेक आरम्भ गरे ।।९-१०।। उत्तम मुहूर्त र उत्तम लग्नमा सातवटै ग्रह राम्रा भावमा भएको बेला स्वस्तिवाचनपूर्वक आभ्युदयिक श्राद्ध गरी विभिन्न तीर्थबाट ल्याइएका उत्तम द्रव्यले सम्पन्न जलद्वारा अभिषेक गरियो । त्यस बेला अनेक थरि बाजा बजिरहेका थिए । ऋग्वेद, यजुर्वेद र सामवेदका मन्त्रबाट त्यो अभिषेक सम्पन्न भयो ।।११-१२।।

सन्तोष्य ब्राह्मणानन्यान् दक्षिणारत्नदानतः ।
स्वयञ्च वनवासीयदीक्षां गृह्य च पृच्छ्य च ।।१३।।

विससर्जाखिलान् राजा निजसाधनसंस्थितः ।
ततः परशुबाहुः स प्रशशास महीमिमाम् ।।१४।।

धर्मशास्त्रीयनीत्या च त्यागेन यश आर्जयत् ।
विख्यातस्त्रिषु लोकेषु पराक्रमबलादभूत् ।।१५।।

मन्दारमूर्तिं ढुण्ढेः स कृत्वा कण्ठे दधार ह ।
शमीं दूर्वां विना पूजां न करोति कदाचन ।।१६।।

नानाभोगान् स्त्रियो नैका बुभुजे धर्मतस्तु सः ।
उत्पाद्य पुत्रान् दानानि दत्त्वा वर्षसहस्रकम् ।।१७।।

चकार राज्यं पश्चात् तत्पुत्रे न्यस्य दिवं ययौ ।
कल्पाननेकान् स्वर्गे स स्थितो ढुण्ढिस्वरूपवान् ।।१८।।

मुनिरुवाच

एवं शम्याः प्रभावस्ते सङ्क्षेपेण निरूपितः ।
तत्पूजनस्य पुण्यञ्च मन्दारस्य प्रसङ्गतः ।।१९।।

तस्मात् त्वयाऽपि पूज्योऽहं शमीमन्दारतो मुने !
भक्त्या समर्पितं पुष्पं पत्रमिष्टं सुधायते ।।२०।।

निषिद्धपत्रपुष्पादि समर्प्य नरकं व्रजेत् ।
यस्य यद् दैवतं मुख्यं तदिष्टमितरेषु वा ।।२१।।

समर्पयन्नभेदेन भक्तो दोषं न चाप्नुयात् ।
एवं पञ्चापि सम्पूज्य देवांस्तत्परतामियात् ।।२२।

सात्त्विको लीयते देवे राजसस्तु सरूपताम् ।
उभाभ्याञ्चैव सान्निध्यं तामसस्तु सलोकताम् ।।२३।।

प्राप्नुयाद् भजमानस्तु त्रेधा भक्तिर्न वै वृथा ।

अभिषेकका कार्य सबै सकेपछि राजाले दक्षिणा र रत्न दिएर ब्राह्मणहरूलाई सन्तुष्ट गराए । आफूले वनवासका लागि उपयुक्त दीक्षा ग्रहण गरी सबैसँग आज्ञा लिएर आएका सबै परपाहुनाहरूलाई बिदा गरेर आफ्नो साधनामा लागे । त्यसपछि परशुबाहुले यस धर्तीमा धर्मशास्त्रको नीतिअनुसार त्यागपूर्वक शासन गरेर ठूलो यश कमाए। ती परशुबाहु आफ्नो पराक्रमका कारण तीनै लोकमा प्रख्यात भए ।।१३-१५।। तिनले मन्दारवृक्षको काठबाट ढुण्ढिराज श्रीगणेशको मूर्ति बनाएर घाँटीमा धारण गरे। तिनले श्रीगणेशको पूजा गर्दा शमीपत्र र दूर्वाङ्कुर कहिल्यै पनि छुटाएनन् ।।१६।। आफ्नो शासनकालमा परशुबाहुले धर्मपूर्वक अनेक भोगहरू भोगे र अनेक रानीहरूसँग सहवास पनि गरे । असल छोराहरू जन्माएर धर्मपूर्वक उत्तम दान गर्दै एक हजारवर्षसम्म राज्य गरे। त्यसपछि आफ्नो राज्य छोराहरूलाई सुम्पेर स्वर्ग गए । अनेक कल्पसम्म ती राजा ढुण्ढिराजको स्वरूप धारण गरी स्वर्गमा विराजमान भएर रहे ।।१७-१८।।

मुनिले भने - 'यसरी मैले तपाईंलाई शमीपत्रको महिमा बताएँ । मन्दारको वर्णनको प्रसङ्गमा शमीपत्रबाट गरिने पूजाको महिमा पनि बताएँ ।।१९।। मलाई कुनै दिन भगवान् गणेशबाट आज्ञा भएको थियो - 'तपाईंले मेरो पूजा शमीपत्र र मन्दारपत्र चढाएर गर्नुपर्दछ । भक्तिपूर्वक समर्पण गरिएको पत्र र पुष्पले मीठो अमृतको काम गर्दछ ।।२०।। जसले अर्पण गर्न नहुने पुष्प र पत्र अर्पण गर्छ त्यसलाई नरक जानुपर्छ । जसका जुन इष्टदेवता छन् तिनलाई प्रधान मानेर अथवा तिनमा र ममा अभेददृष्टि राखेर मेरो पूजा गर्ने भक्तलाई कुनै अपराध लाग्दैन । यसरी श्रीगणेश, शिव, विष्णु, सूर्यनारायण, देवी आदि देवताहरूको पूजा गर्दा आफ्नो इष्टदेवतालाई प्रधान मानेर अरूलाई प्रधान देवताकै रूपमा समान श्रद्धा व्यक्त गर्दै पूजा गरेपछि त्यो भक्त ती देवताका स्वरूपमा परिणत हुन्छ ।।२१-२२।। सात्त्विक-भावनाले पूजा गर्ने मानिस भगवान् श्रीगणेशमै लीन हुन्छ । राजसी भक्तले भगवान्को समान स्वरूप पाउँछ । दुवै भक्तहरू मेरो नजिकमा बस्न पाउँछन् । तामसी भक्त भने मेरो लोकमा जान मात्र पाउँछ ।।२३।। फल जे जति अन्तर भए तापनि यी तीन प्रकारका भक्तहरूले गरेको भक्ति खेर जाँदैन ।

व्यास उवाच

विनायकस्य को लोकः कस्मिँल्लोके च तिष्ठति ।।२४।।

एतं मे संशयं ब्रह्मन् ! छेत्तुमर्हसि साम्प्रतम् ।
कमन्यं परिपृच्छामि सर्वज्ञं त्वां विहाय भोः ।।२५।।

ब्रह्मोवाच

मयाऽपि नारदायोक्तो मुद्गलाय च तेन च ।
काशिराजाय चाख्यातो लोको वैनायकः शुभः ।।२६।।

सकामदायिनीशक्त्या तेनैव निर्मितः पुरा ।
निजलोकेतिनामास्य स्वयञ्चक्रे विनायकः ।।२७।।

काशिराजो विमानस्थो दृष्ट्वाँश्चर्मचक्षुषा ।
यं प्राप्य न दुःखं द्वन्द्वं प्राप्नुते स्त्री पुमानपि ।।२८।।

ब्राह्मं कल्पञ्च वसति ज्योतिरूपं समाप्य च ।
इक्षुसागरसम्भोगं लभते तत्र यः स्थितः ।।२९।।

महाप्रलयवेलायां तिष्ठत्येवाविनाशि यत् ।
तत्पीठं तस्य देवस्य निद्रास्थानं सनातनम् ।।३०।।

सेवेते सिद्धिबुद्धी तं सामवेदस्तु गायति ।
कल्पवृक्षो यच्छति तत् कल्पितं मनुजेन यत् ।।३१।।

अकल्पिताः सम्पदोऽत्र जायन्ते तत्प्रभावतः ।
मयैव वर्णिताः सर्वे देवलोका अनेकशः ।।३२।।

गणेशनिजलोकस्य शक्तिर्नो मम वर्णने ।
सङ्क्षेपेण ततोऽख्यायि किमन्यच्छ्रोतुमिच्छसि ।।३३।।

**व्यासले भन्नुभयो –** हे ब्रह्माजी ! भगवान् श्रीगणेशको धाम कुन लोकमा रहेको छ ? मेरो यस संशयलाई हजुरले छेदन गर्नुहोस् । हजुर सर्वज्ञ हुनुहुन्छ । तसर्थ हजुरलाई छाडेर कसलाई सोधूँ ?

**ब्रह्माजीले भन्नुभयो –** हे व्यास ! तिम्रा यस प्रश्नको उत्तर एक दिन मैले नारदजीलाई दिएको थिएँ । नारदजीले मुद्गल ऋषिलाई दिएका थिए । मुद्गल ऋषिले काशिराजलाई दिए । विनायकको त्यो लोक भगवान् गणेशको सकामदायिनी शक्तिद्वारा निर्मित भएको छ । त्यस लोकको निर्माण गरेपछि भगवान् गणेशले आफ्नै नामबाट त्यसको विनायकलोक भनी नामकरण गर्नुभएको थियो ।।२४-२७।। भगवान् गणेशको कृपाले गणेशधाममा जाने विमानमा सवार भएका काशिराजले आफ्ना चर्मचक्षुले विनायकलोकको दर्शन गर्न पाएका थिए। जुन लोकको दर्शन गरेपछि कुनै पनि नारी अथवा पुरुषले दुःख र संघर्ष व्यहोर्नु पर्दैन ।।२८।। ब्रह्माजीको एक कल्पसम्म त्यो भक्त त्यहाँ ज्योतिर्मय रूपमा निवास गर्दछ । त्यहाँको भोग समाप्त भएपछि त्यसले इक्षुसागरमा गएर भोग गर्छ ।।२९।। त्यो गणेशधाम महाप्रलयको बेला पनि अविनाशी रूपमा रहन्छ। त्यो धाम भगवान् श्रीगणेशको सनातन विश्रामस्थान हो ।।३०।। सिद्धि र बुद्धिले त्यहाँ रहेर सधैं श्रीगणेशको सेवा गरिरहेका हुन्छन् । सामवेदले पनि सामगानद्वारा भगवान् गणेशको आराधना गरिरहेको हुन्छ । त्यस धाममा पुग्ने भक्तलाई कल्पवृक्षले पनि चिताएका कुरा प्रदान गर्दछन् ।।३१।। त्यहाँ पुग्ने भक्तले भगवान् श्रीगणेशको प्रभावबाट अकल्पनीय समृद्धि र आनन्दको भोग गर्दछ । मैले नै अनेक थरि देवलोकहरूको बयान गरेको छु, तर श्रीगणेशको दिव्यधामको वर्णन गर्ने मेरो शक्ति छैन । अतएव मैले सङ्क्षेपमा वर्णन गरें । अब अरू तिमी के सुन्न चाहन्छौ भन ? ।।३२-३३।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे शमीमन्दारसमर्पणजनितफलवर्णनं नामैकोनपञ्चाशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'शमीपत्र र मन्दारपत्र समर्पण गरी पूजन गर्दा प्राप्तव्य फलको निरूपण' शीर्षकान्वित उनान्पचासौं अध्याय पूर्ण भयो ।।४९।।

ॐ

# पञ्चाशोऽध्यायः { ५० अध्याय }

मुनिरुवाच

कथञ्च काशिराजेन प्राप्तं तत् स्थानमुत्तमम् ।
मुद्‌गलस्योपदेशेन तन्मे शंसितुमर्हसि ।।१।।

क उवाच

तीर्थयात्राप्रसङ्गेन मुद्‌गलस्तं नृपं ययौ ।
स पूजयित्वा पप्रच्छ सर्वज्ञं तं मुनिं नृपः ।।२।।

नृप उवाच

विनायकस्य लोकः कः प्राप्यते स कथं मया ।

मुनिरुवाच

स्वानन्दभुवनेत्येवं निजलोकेति च द्वयम् ।।३।।
वैनायकस्य लोकस्य विख्यातं नाम वर्तते ।
उत्पत्स्येते यदा दैत्यौ देवान्तकनरान्तकौ ।।४।।
विनायकोऽपि तौ हन्तुं मानुषेऽवतरिष्यति।
स तु बालकरूपेण लीला अद्‌भुतविक्रमाः ।।५।।
करिष्यति नृलोकेऽस्मिन्स्वेच्छाचारी महाबलः ।
शुक्लस्य भक्तियुक्तस्य दरिद्रस्य गृहे यदा ।।६।।
भुक्त्वा दत्त्वाऽमोघलक्ष्मीं शुक्लायेन्द्रस्य दुर्लभाम् ।
विवाहार्थं समानीतो दर्शयिष्यति पौरुषम् ।।७।।
यदा ते गृहमागच्छेत् तदा तद्‌भक्तितो नृप ।
काशिराज महाबाहो निजलोकमवाप्स्यसि ।।८।।

क उवाच

एवमुक्त्वा गते तस्मिन् काशिराजो महामतिः ।
गणेशभक्तिं कुर्वाणः कालाकाङ्क्षी बभूव ह ।।९।।
ततो बहुतिथे कालेऽवतीर्णोऽसौ विनायकः ।
कश्यपस्य गृहे यो वै लीलाविग्रहवान् विभुः ।।१०।।

**व्यासले भन्नुभयो -** काशिराजले मुद्‌गल ऋषिको उपदेशबाट भगवान् श्रीगणेशको धाम कसरी प्राप्त गरे ? मलाई त्यो कुरा बताउनुहोस् ? ।।१।।

**ब्रह्माजीले भन्नुभयो -** एक पटक मुद्‌गल ऋषि तीर्थयात्राको प्रसङ्गले काशिराजको दरबारमा पुगेका थिए। ती काशिराजले सर्वज्ञ ऋषि मुद्‌गललाई सम्मान गरेर सोधे ।।२।।

**राजाले भने -** हे मुद्‌गल ऋषि ! विनायकलोक कस्तो छ ? र त्यसलाई म कसरी प्राप्त गर्न सक्छु ?

**मुद्‌गलले भने -** हे राजन् ! विनायकलोकका स्वानन्दभुवन र निजलोक यी दुई नाम हुन्।।३।। विनायकलोकको नाम र महिमा विख्यात छ । धर्तीमा जब देवान्तक र नरान्तक नामका दुई दैत्य उत्पन्न हुनेछन् तिनको वध गर्न भगवान् श्रीगणेशले मनुष्यको रूपमा अवतार लिनुहुनेछ । उहाँले बालकका रूपमा रहेर अद्‌भुत लीला देखाउनु हुनेछ ।।४-५।। उहाँ यस मर्त्यलोकमा आफ्नो इच्छाअनुसार विचरण गर्ने महाबली बालकका रूपमा प्रख्यात हुनुहुनेछ । वाराणसी नजिकैमा घर बनाएर बस्ने दरिद्र शुक्लब्राह्मणको घरमा पाहुना बनेर उनले दिएका रुखा-सुखा भोजन ग्रहण गरी शुक्लब्राह्मणलाई इन्द्रले पनि नपाउने अमोघ लक्ष्मी प्रदान गरेर फर्केपछि विवाहको निम्तोमा काशी आउनु-भएका भगवान् गणेशले अपूर्व पुरुषार्थ देखाउनुहुनेछ।।६-७।। हे राजन्! जब बालकरूप भगवान् श्रीगणेश तपाईंको दरबारमा आउनुहुन्छ, त्यस बेला तपाईंले उहाँको अपूर्व भक्ति गर्नुहुनेछ। त्यस भक्तिका कारण तपाईंले श्रीगणेशको विनायकधाम प्राप्त गर्नुहुनेछ ।।८।।

**ब्रह्माजीले भन्नुभयो-** यति कुरा भनेर मुद्‌गल ऋषि फर्कनु-भएपछि बुद्धिमान् काशिराजले श्रीगणेशमा भक्ति गर्दै उहाँको बालकरूपमा कहिले जन्म हुन्छ र उहाँ कहिले काशी आउनुहुन्छ? भनी श्रीगणेशकै प्रतीक्षामा बसिरहे ।।९।। धेरै समयपछि कश्यप ऋषिका घरमा उहाँले मनुष्यको रूपमा अवतार लिनुभयो । त्यस बेला अद्‌भुत चमत्कार देखाउँदै

हता नानाविधा दैत्याः क्रीडा नानाविधाः कृताः ।
दारिद्र्यं हतवान् सद्यः शुक्लस्यादत् गृहे तदा ।।११।।

काशिराजस्य भवनं पुनरागान्महाबलः।
हतौ महाबलौ दैत्यौ देवान्तकनरान्तकौ ।।१२।।

स्वानन्दभुवनं यातः क्षीरसागरमध्यगम् ।
काशिराजस्तु विरहाच्चिन्तयन् सर्वदा तु तम् ।।१३।।

आलिङ्गति नरं कञ्चिदयमेव विनायकः।
इति मत्वा सभामध्ये सर्वं तदात्मकं जगत् ।।१४।।

पश्यति स्म दिवा रात्रौ सोऽपि तन्मयतामियात् ।
निराहारः कदाचित् स तिष्ठति स्म नृपस्तदा ।।१५।।

ग्रासमात्रं कदाचित् स भुनक्ति च यथामति ।
कदाचिद्धसते क्वापि नृत्यति स्म नृपस्तदा ।।१६।।

निद्राति बहुकालं तं पश्यन् स्वप्ने विनायकम् ।
एवं नृपे स्थितेऽमात्याश्चिन्तामापुः सुदारुणाम् ।।१७।।

यदि लोका विजानीयुः परचक्रं पतेत् तदा ।
एवं चिन्तयतां तेषाममात्यानां नृपालये ।।१८।।

तदैव मुद्गलो ध्यानं विसृज्य नृपतिं ययौ ।
तद्दर्शनप्राप्तबोधः प्रणनाम नृपो मुनिम् ।।१९।।

उपवेश्यासनं पश्चात् सम्पूज्य च यथाविधि ।
बद्धाञ्जलिरुवाचाथ धन्यो वंशो जनुर्मम ।।२०।।

पितरौ मन्दिरं नेत्रे धन्ये त्वद्दर्शनान्मुने !
यत्प्रसादात्परं स्थानं संसारतारणं नृणाम् ।।२१।।

उहाँले अनेक थरि दैत्यहरूको वध गर्नुभयो र अनेक बाललीला पनि देखाउनुभयो। शुक्लब्राह्मणका घर गई भोजन ग्रहण गरेर तिनको दरिद्रता नाश गर्नुभयो।।१०-११।। त्यसपछि उहाँ फेरि काशिराजकै दरबारमा आउनुभयो । उहाँले आफ्नै प्रतापबाट देवान्तक र नरान्तकनामक दैत्यहरूको वध गर्नुभयो । दैत्यहरूको वधपछि भगवान् श्रीगणेश क्षीरसागरको माझमा रहेको स्वानन्द-भुवनमा आउनुभयो । यता काशिराज श्रीगणेशको विरहबाट व्याकुल भए । ती दिन-रात, सपना-विपना र सुख-दुःख सबै परिस्थितिमा श्रीगणेशको ध्यान र संझना गरिरहन्थे। कुनै मानिसलाई देख्दा यी श्रीगणेश नै हुन् कि भनी आलिङ्गन गर्न पुग्थे । राजसभामा बस्दा पनि सभासद्‌हरूलाई गणेश मानेर व्यवहार गर्थे ।।१२-१३।। उनका लागि संसार गणेशमय बनेको थियो। यति तन्मय थिए कि त्यसको कुनै दृष्टान्त दिन सकिँदैन। उनी तन्मय भएर रात र दिनमा देखिने सबै दृश्यहरूमा श्रीगणेशकै अनुहार हेरिरहेका हुन्थे । कहिले हे भगवन् श्रीगणेश! तपाईंले कति बेला दर्शन दिनुहुन्छ भनी नखाएर बसिरहेका हुन्थे । कहिले एक गासमात्र खाएर फेरि श्रीगणेशको संझना आउँदा खान छोडिदिन्थे । कहिले श्रीगणेशको संझना हुँदा हाँसिरहन्थे । कहिले नाचिरहन्थे ।।१४-१५।। कुनै रातको सपनामा भगवान्‌को स्वरूप देख्न पाए भने धेरै बेरसम्म निदाइरहन्थे । राजाको यसरी श्रीगणेशमा तन्मयता बढेपछि अमात्यहरूले ठूलो चिन्ता गर्दै भने- 'यदि यहाँका मानिसहरूले राजाको यो अवस्था थाहा पाए भने शासनमा ठूलो विघ्न आउनेछ र परचक्री राजाहरूले आक्रमण गर्नेछन् । यस्तो स्थितिमा कसरी सुधार ल्याउने हो ?' यसरी मन्त्रीहरूले राजदरबारमा रहेर परस्पर चिन्ता गरिरहेकै समयमा ईश्वरको ध्यान गर्न छाडेर मुद्‌गल ऋषि काशिराजका समीपमा आइपुगे। मुद्‌गलको दर्शन पाएपछि चेतना प्राप्त गरेका राजाले उनलाई प्रणाम गरे ।।१६-१९।। काशिराजले मुद्‌गल ऋषिलाई आसनमा बसाएर विधिपूर्वक पूजा गरे । त्यसपछि हात जोडेर भने - 'हे मुनिवर! हजुरको दर्शनबाट मेरा वंश, जन्म, माता-पिता, घर, आँखा, सेवक र सबै पदार्थहरू धन्य भएका छन्। हजुरहरूजस्ता ब्रह्मज्ञानी ऋषिहरूको कृपाबाट मानिसहरूले संसार तर्ने ज्ञान र परम पद पाउँछन् । जसले हजुरजस्ता

अवमानान्महद् दु:खं तं त्वां पुण्येन दृष्टवान् ।
तमुवाच ततो विप्रो वाचा तस्य सुतोषित: ।।२२।।

मुनिरुवाच

त्वादृशस्तु विनीतात्मा नैव दृष्टो न च श्रुत: ।
पूजनात् परितुष्टोऽहं वाञ्छितं ते ददाम्यहम् ।।२३।।

क उवाच

तद्वाक्यपरितुष्टोऽसौ काशिराजो जगाद तम् ।
अनेनैव च देहेन स्वानन्दभुवनं मुने।।२४।।

इच्छेयञ्च चिरं तत्र स्थातुं नैव च सम्पद: ।
तत ऊचे मुद्गलोऽसौ परितुष्टस्तया गिरा ।।२५।।

अनेन जडदेहेन स्वानन्दभुवनं नृप ।
प्राप्स्यसे त्वं गणेशस्य पुनरावृत्तिवर्जित: ।।२६।।

भुक्त्वाऽन्नसम्पद: पञ्चसहस्त्रपरिवत्सरान् ।
ब्रह्मकल्पमयं कालं तत: स्वानन्दमाप्स्यसि ।।२७।।

नृप उवाच

कीदृक् स लोक: किन्नाम वद सत्यं मुने ! मम ।
केन पुण्येन गम्योऽसौ श्रुता लोका मयाऽखिला: ।२८।।

मुद्गल उवाच

श्रृणु राजन् ! मयाऽश्रावि महिमा कपिलान्मुने: ।
सामान्यत: सर्वलोका: प्रसिद्धा ये श्रुतास्त्वया ।।२९।।

गहना गतिरत्यन्तमस्य लोकस्य भूपते !
दिव्यलोकेति नामास्य निजलोकेति चापरम् ।।३०।।

स कामदायिनीपीठे सन्तिष्ठति विनायक: ।
विस्तीर्णे पञ्चसहस्त्रयोजनानि महामते ।।३१।।

रत्नकाञ्चनभूमौ स राजते भासयन् दिश:।
स्वानन्दनामा दिव्योऽयमिक्षुसागरमध्यग:।।३२।।

मुनिहरूको अपमान गर्दछन् ती ती मानिसहरूले परम गोता पाउँछन् । हे ऋषिवर ! आज मैले हजुरलाई पुण्यले देख्न पाएँ ।' राजाको उक्त भनाइबाट सन्तुष्ट भएका ऋषिले राजालाई सम्बोधन गर्दै भने ।।२०-२२।।

**मुद्गलले भने** - हे राजन् ! तपाईँजस्तो नम्र स्वभावको राजा मैले कहीं देखेको छैन र सुनेको पनि छैन। तपाईँले गर्नुभएको पूजाबाट म प्रसन्न छु । के चाहनुहुन्छ भन्नुहोस्, म त्यो दिन्छु ।।२३।।

**ब्रह्माजीले भन्नुभयो** - मुनिको वाक्य सुनेर प्रसन्न भएका काशिराजले भने- 'हे मुद्गल ऋषि! म यसै शरीरबाट श्रीगणेशको दिव्यधाम स्वानन्दभुवनमा जान चाहन्छु ।।२४।। हे प्रभु! जान मात्र होइन त्यहाँ धेरै दिनसम्म आनन्दपूर्वक बस्न पनि चाहन्छु। मलाई सम्पत्ति-धन केही चाहिएको छैन।' त्यसपछि राजाको प्रार्थनाबाट प्रसन्न भएका मुद्गल ऋषिले भने- 'हे राजन! तपाईँ यसै मानवशरीरबाट भगवान् श्रीगणेशको स्वानन्दभुवनमा पुग्नु हुनेछ । त्यहाँबाट तपाईँलाई फर्किनुपर्ने छैन ।।२५-२६।। तर स्वानन्द-भुवनमा जानुभन्दा पहिले ब्रह्मकल्पमा पाँच हजार वर्षसम्म मर्त्यलोकका सुखभोग गरेर मात्र तपाईं त्यहाँ पुग्नुहुनेछ ।।२७।।

**काशिराजले भने**- हे मुद्गल ऋषि ! त्यो विनायकलोक कस्तो छ ? त्यसको वास्तविक नाम के हो ? कुन पुण्यले त्यहाँ जान पाइन्छ ? मैले अरू लोकका विषयमा धेरै सुनेको छु तर विनायकलोकको विषयमा सुनेको छैन । हजुरले मलाई त्यसबारे जानकारी गराउनुहोस् ।।२८।।

**मुद्गलले भने** - हे राजन् ! मैले श्रीगणेशलोकको महिमा कपिल ऋषिबाट सुनेको हूँ । तपाईँले थाहा पाएका लोकहरू संसारमा प्रख्यात छन्, तर गणेशलोकको गति सबैका लागि दुर्लभ छ । कसैले यसलाई दिव्यलोक भन्ने गर्छन् र कसैले निजलोक पनि ।।२९-३१।। त्यस लोकमा एउटा उत्तम पीठ रहेको छ, जसको नाम सकामदायिनीपीठ हो । भगवान् गणेश त्यसै पीठमा विराजमान हुनुहुन्छ । हे बुद्धिमान् राजा ! त्यो पीठ पाँच हजार योजन अर्थात् बीस हजार कोश फैलिएको छ र रत्न एवं सुवर्णमय भूमिमा अडिएको छ । त्यसबाट निस्कने प्रकाशका धाराहरूबाट दिशाहरू प्रकाशित

न वेदैर्न च दानैश्च व्रतैर्यज्ञैर्जपैरपि ।
तपोभिर्विविधैश्चैव प्राप्यते नैव कर्हिचित् ।।३३।।

विनायकस्य कृपया प्राप्यते नित्यभक्तितः ।
समष्टिव्यष्टिरूपोऽत्र सदा तिष्ठति विघ्नराट् ।।३४।।

पादैः स सप्तपातालं व्याप्य शेषशिरांसि च ।
मत्स्यञ्च कमठञ्चैव श्रोत्राभ्याञ्च दिशोऽखिलाः ।।३५।।

केशैर्व्योमापि संरोध्य स्थित आधारपङ्कजे ।
भ्रूमध्येऽप्यग्निचक्रे तं द्विपत्रे ध्यायति कृती ।।३६।।

खेचरीमुद्रया युक्तो नान्यो ध्यातुं न च क्षमः ।
सहस्रपत्रं ब्रह्माण्डसरोजं विलसत्प्रभम्।।३७ ।।

तत्र तेजःस्वरूपोऽस्ति हृदि द्वादशपत्रकम् ।
दशपत्रं नाभिचक्रं लिङ्गे षट्पत्रकं शुभम् ।।३८।।

षोडशारं कण्ठदेशे तत्र सर्वत्र विघ्नराट् ।
तेजोरूपी दीप्यमानः सत्यलोके यथा विधिः ।।३९।।

द्वादशारं तु वैकुण्ठं तत्र विष्णुः सदा स्थितः ।
कण्ठाब्जे पञ्चवक्त्रोऽसौ कैलासे सगणो यथा ।।४०।।

सोमसूर्याग्निनेत्रोऽसौ भूमण्डलमहोदरः ।
एकविंशतिस्वर्गान् स व्याप्य चौषधिरोमवान् ।।४१।।

सरितः सागरा यस्य घर्मबिन्दुर्विभात्यसौ ।
ब्रह्माण्डे भान्ति यस्यैव ब्रह्माण्डानि तु रेणुवत् ।।४२।।

हुन्छन् । त्यसको अर्को नाम स्वानन्दभुवन पनि हो । यो भुवन इक्षुसागरका माझमा रहेको छ ।।३२।। वेदाध्ययन, दान, व्रत, यज्ञ, जप र अनेक किसिमका तपबाट पनि यो धाम कहिल्यै प्राप्त गर्न सकिंदैन । केवल श्रीगणेशमा नित्य भक्ति गर्ने मानिस मात्र गणेशको कृपाबाट त्यस धाममा जान पाउँछ । त्यहाँ भगवान् गणेश समष्टि अर्थात् विराट् स्वरूपमा र व्यष्टि अर्थात् अवतारी गणेशका रूपमा गरी दुई प्रकारले रहनुहुन्छ ।।३३-३४।। आफ्ना चरणहरूबाट शेषनागका सहस्र शिर, सप्त पाताल, महामत्स्य र कच्छपलाई व्याप्त गरेर आँखाहरूबाट सम्पूर्ण दिशा ढाकी केशहरूद्वारा आकाशलाई छोपेर आफ्नो आधारकमलमा रहनुभएका पुण्यवान् श्रीगणेशले भ्रूमध्यमा रहेको दुईपाते अग्निचक्रमा ध्यान गर्नुहुन्छ ।।३५-३६।। खेचरी मुद्राले सम्पन्न हुनुभएका श्रीगणेशले आफ्नो ध्यान प्रक्रिया अगाडि बढाउनुहुन्छ। यसरी ध्यान गर्न अन्य कुनै देवता समर्थ हुँदैनन्। एक हजार पात भएको दिव्य प्रभाले सम्पन्न ब्रह्माण्ड कमल छ, त्यसमा भगवान् गणेश तेजोरूप लिएर विराजमान हुनुहुन्छ। हृदयमा बाह्रवटा पात भएको कमल रहेको हुन्छ, नाभिचक्रमा दशवटा पात भएको कमल रहेको हुन्छ, लिङ्गमा छवटा पात भएको कमल रहेको हुन्छ, घाँटीमा सोह्रवटा पात भएको कमल रहेको हुन्छ । ती सबै कमलहरूमा भगवान् श्रीगणेश सत्यलोकमा भगवान् ब्रह्माजी ज्योतिर्मय रूपमा रहनुभएझैं तेजोमय रूप लिएर प्रकाशमान हुनुहुन्छ ।।३७-३९।। वैकुण्ठमा बाह्रपाते कमलमा भगवान् विष्णु विराजमान हुनुहुन्छ । कैलासमा कण्ठको आकृति भएको कमलमा पञ्चमुख भगवान् शिव विराजमान हुनुहुन्छ ।।४०।। त्यसैगरी भगवान् गणेश पनि विनायकलोकमा विराजमान हुनुहुन्छ। विराट्रूप लिनुहुने श्रीगणेशको स्वरूप विचित्र हुने गर्दछ । उहाँका आँखाका रूपमा सूर्य, चन्द्रमा र अग्निदेवता रहेका छन् । मानिसको दृष्टिमा आउने भूमण्डलसमान विशाल उहाँको पेट छ। एक्काइसवटा स्वर्गहरूलाई अर्थात् सात भूस्वर्ग, सात पातालस्वर्ग र सात अन्तरिक्षस्वर्ग व्याप्त गरेर रहनुहुने भगवान् गणेशका रोमहरू वनस्पति र वृक्ष नै हुन् । नदी र सागर उहाँका पसिनाका थोपा हुन् । उहाँको रोमका प्वाल-प्वालमा

त्रयस्त्रिंशत्कोटिदेवा जीवा ये च सहस्रशः ।
औदुम्बरगता भान्ति मशका इव तद्गताः ।।४३।।

रचनां तस्य लोकस्य सङ्क्षेपेण ब्रुवे नृप !
तुङ्गं यन्मेरुशिखरं तत्कैलासशिरस्पृहम् ।।४४।

सहस्रयोजनं शून्यमगम्यं मुनिपुङ्गवैः ।
तत्र एका शक्तिरुच्चैर्भ्रामिका नाम नामतः ।।४५।।

यत्समन्ताद् भ्रमन्त्येव भ्रमराः शुभ्र एव च ।
पद्मासनगताधारशक्तिस्तन्मस्तके स्थिता ।।४६।।

चामीकरनिभा या तन्मस्तके कामदायिनी ।
कोटिसूर्यनिभा तस्या मूर्ध्नि पीठं महत्तरम् ।।४७।।

विकरालं जटाभारं बिभ्रती वदनं तथा ।
सहस्रसूर्यसङ्काशा भासयन्ती दिशो दश ।।४८।।

विस्तीर्णं दशसहस्रयोजनं तावदायतम् ।
असङ्ख्यसूर्यसङ्काशं तन्मध्ये योजनायतम् ।।४९।।

स्वानन्दभुवनं भाति यत्र काञ्चनरत्नजाः ।
असङ्ख्याता गृहा भान्ति भास्वरा गजमौक्तिकाः ।।५०।।

तस्यैव कृपया प्राप्यो दुःखमोहविवर्जितः ।
तदुत्तरे भाति पर इक्षुसागर एव तु ।।५१।।

सहस्रपत्रसंयुक्ता तन्मध्ये पद्मिनी शुभा ।
सहस्रपत्रं कमलं तस्यां भाति यथा शशी ।।५२।।

तत्कर्णिकागतस्तल्पो रत्नकाञ्चननिर्मितः ।
दिव्याम्बरयुतः शेते नृप ! तत्र विनायकः ।।५३।।

रहने ब्रह्माण्डहरूका समक्ष अन्य ब्रह्माण्डहरूको मूल्यवत्ता र परिमाण धूलो बराबर पनि हुँदैन ।।४१-४२।। भगवान्को विराट् स्वरूपमा तेत्तीसकोटि देवता र करोडौं जीवहरू डुम्रीको फलभित्र लामखुट्टे रहेजस्तै रहेका हुन्छन् ।।४३।। स्वानन्दभुवनको रचनाको विषयमा म तपाईँलाई बताउँछु । भगवान् गणेशको विराट्रूपको शिरमा मेरुपर्वतको शिखर छ । जुन शिखरले कैलास शिखरको समानता प्राप्त गरेको छ ।।४४।। त्यो भुवन एक हजार योजनसम्म फैलिएको छ र रित्तो छ । मुनिहरूले त्यसलाई सहजरूपमा प्राप्त गर्न सक्दैनन्। त्यहाँ एउटा भ्रामिकानामक शक्ति रहेको छ । त्यसका वरिपरि भँमराहरू घुमिरहेका हुन्छन् । ब्रह्माजीको आधारशक्ति त्यस लोकको उज्ज्वलमस्तक भागमा रहेको छ ।।४५-४६।। त्यो सुवर्णसमान चम्किलो र करोडौं सूर्यका कान्तिले सुहाएको छ । शिरमा जटाभार एवं विकराल मुखमण्डल धारण गर्ने हजार सूर्यझैं प्रकाशमान छ र त्यसले आफ्नो प्रकाशबाट दसै दिशालाई चहकिलो तुल्याएको छ।।४७-४८।। अनन्त सूर्यसमान ज्योतिर्मय र दशहजार योजन फैलिएको पीठमा एक योजन फैलिएको स्वानन्दभुवन छ । त्यहाँ सुवर्ण र मणिबाट बनाइएका असंख्य घरहरू छन् र असंख्य हात्तीको शिरमा हुने गजमुक्ता पनि छन्। भगवान् गणेशको कृपाबाट मात्र दुःख र मोहबाट रहित भई त्यहाँ पुगेर आनन्दको साम्राज्य प्राप्त गर्न सकिन्छ । स्वानन्दभुवनको उत्तरपट्टि इक्षुसागर रहेको छ । त्यसको माझमा एउटा हजार पाते कमलको लहरा रहेको छ । त्यसमा चन्द्रमाझैं चहकिलो एक हजार पात भएको सहस्रपत्र कमल छ ।।४९-५२।। त्यस कमलको कर्णिकामा भगवान् श्रीगणेशको दिव्य शय्या तयार गरिएको छ । त्यो शय्या सुन र मणिबाट बनेको छ । त्यहाँ भगवान् गणेश दिव्य वस्त्र र गहनाले अलङ्कृत भई शयन गर्नुहुन्छ । सिद्धि र बुद्धिले वरिपरि रहेर भक्तिपूर्वक श्रीगणेशको पाउ दबाइरहेका हुन्छन् । त्यहाँ सामवेदले प्रत्यक्ष रूप धारण गरेर भगवान्को गुणगान गरिरहेका हुन्छन् । सम्पूर्ण शास्त्रहरूले पनि साकार स्वरूप धारण गरी उहाँको स्तुति गर्दछन् । पुराणहरूले पनि

सिद्धिबुद्धी सदा तस्य पादसंवाहनं मुदा ।
कुर्वाते परया भक्त्या सामवेदस्त्रिमूर्तिमान् ।।५४।।

गानं करोति शास्त्राणि मूर्तिमन्ति स्तुवन्ति तम् ।
पुराणानि च सर्वाणि वर्णयन्त्यस्य सद्गुणान् ।।५५।।

बालरूपधरस्तत्र शुण्डादण्डविराजितः ।
कोमलाङ्गोऽरुणनिभो विशालाक्षो विषाणवान् ।।५६।।

मुकुटी कुण्डली राजत्कस्तूरीतिलकः स्वराट् ।
दिव्यमाल्याम्बरधरो दिव्यगन्धानुलेपनः ।।५७।।

मुक्तामणिगणोपेतं सरत्नं दाम संदधत् ।।५८।।

अनन्तकोटिसूर्यौजाश्चन्द्रार्धकृतशेखरः।
स्मरणात् पापहा सद्यः स्मृता गङ्गा यथा नृणाम् ।।५९।।

तेजोवती ज्वालिनी च शक्ती पर्यङ्कपार्श्वयोः ।
सहस्रादित्यसङ्काशे तिष्ठतो नृप ! सर्वदा ।।६०।।

न शीतं न जरा तत्र क्लमः स्वेदोऽथ तन्द्र्यपि ।
क्षुधा तृषा वा दुःखं वा न कदाचन जायते ।।६१।।

आनन्दह्रदमग्नास्ते तत्रासन् ये सुपुण्यतः ।
विश्वव्यापी बालरूपी यत्र तिष्ठति विश्ववित् ।।६२।।

मुद्गल उवाच

एवं ते कथितो लोको गणेशस्य यथामति ।
तस्मादनन्यभक्त्या त्वं तमेवाराधय प्रभो ।।६३।।

मूर्तरूप धारण गरेर हात जोडी भगवान्का गुणहरूको बयान गर्दछन् । त्यहाँ भगवान् गणेश बालकरूपमा विराजमान हुनुहुन्छ । उहाँको मुखमण्डलमा सुन्दर सूँढ रहेको छ । उहाँको शरीर अत्यन्त कोमल देखिन्छ । उहाँको कान्ति बिहानमा उदाउने सूर्यकान्तिसमान छ । उहाँका आँखा ठूला-ठूला छन् र एउटा सिङ पनि धारण गर्नुभएको छ ।।५३-५६।। भगवान् गणेशले शिरमा मुकुट र कानमा कुण्डल धारण गर्नुभएको छ । उहाँको निधारमा कस्तूरीको तिलक शोभायमान छ । उहाँ आफ्नै प्रकाशबाट प्रकाशित हुनुहुन्छ र दिव्यमाला धारण गर्नुहुन्छ। उहाँ दिव्यवस्त्र र दिव्यगन्धले सुहाउनुभएको छ । मोती, मणि आदिले युक्त रत्नमय माला धारण गर्नुहुने भगवान् श्रीगणेश अनन्तकोटि सूर्यका तेजद्वारा शोभायमान हुनुहुन्छ। उहाँको निधारमा अर्धचन्द्र चम्किरहेको छ । जसले यस्ता विलक्षण भगवान् श्रीगणेशका दिव्य स्वरूपको स्मरण गर्दछ त्यसका पापलाई उहाँले नाश गरिदिनुहुन्छ । जसरी गङ्गा नदीले आफ्नो नाम लिनासाथ नाम लिने मानिसको पापलाई नष्ट गर्दछिन् त्यसैगरी भगवान् गणेशले पनि आफ्ना भक्तका पाप नाश गर्नुहुन्छ ।।५७-५९।। भगवान् गणेश विराजमान हुनुभएको पलङ्गका वरिपरि तेजोवती र ज्वालिनीनामक शक्तिहरू रहन्छन् । ती दुवै शक्ति सर्वदा हजारौं सूर्यका तेजले चम्किरहेका हुन्छन् । भगवान्को स्वानन्दभुवनमा ठण्डी र गर्मीको प्रकोप हुँदैन, वृद्धावस्था कहिल्यै आउँदैन, शरीरको कान्ति नाश पनि हुँदैन, शरीरमा पसिना कहिल्यै पनि देखिंदैन, भोक-प्यासको अनुभव हुँदैन र कुनै पनि दुःखको अनुभव हुँदैन ।।६०-६१।। जुन मानिसहरू पुण्य गरेर श्रीगणेशको आराधना गरी त्यो धाममा प्राप्त हुन्छन्, ती सबै आनन्दको तलाउमा पौडिरहेका हुन्छन् । विश्वका घटनाहरू जान्ने अन्तर्यामी र विश्वव्यापी भगवान् गणेश स्वानन्दभुवनमा दिव्य बालकका रूपमा विराजमान हुनुहुन्छ ।।६२।।

**मुद्गलले भने** - हे काशिराज ! मैले तपाईंलाई आफ्नो बुद्धिअनुसार गणेशलोकको स्वरूप बताएँ । तपाईंले अनन्यभक्ति गरी भगवान् श्रीगणेशको आराधना गर्नुहोस् ।।६३।।

क उवाच

एवमुक्त्वा गतः स्थानं स्वीकार्य मुद्गलो मुनिः ।
काशिराजो गणेशस्य भजने तत्परोऽभवत् ।।६४।।

सहस्त्रपञ्चवर्षाणि कृत्वा राज्यमनेन ह ।
देहेन यानमारुह्य गतः स्वानन्दधाम तत् ।।६५।।

**ब्रह्माजीले भन्नुभयो** - काशिराजलाई स्वानन्दभुवनको स्वरूप एवं महिमा बताएर मुद्गल ऋषि आफ्नो आश्रमतर्फ गए । काशिराज पनि त्यसै दिनदेखि निरन्तर भगवान् गणेशको भजनमा तल्लीन भए ।।६४।। तिनले पाँच हजारवर्षसम्म राज्यभोग गरेर भौतिक शरीर लिएर नै गणेशधाम जाने विमानमा सवार भई भगवान् श्रीगणेशको धाममा प्राप्त भए ।।६५।।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे गणेशलोकवर्णनं नाम पञ्चाशोऽध्यायः**

सतीशिरोमणि माताश्री दिव्यलक्ष्मी र सज्जनमुकुटमणि पिताश्री चूडामणि ढकालका सुपुत्र पाल्पा पोरकनी निवासी प्रा.डा. वेणीमाधव ढकालद्वारा परमकरुणामयी भगवती त्रिशक्तिको ऊर्जस्वल अभिप्रेरणा र अमोघ आशीर्वादबाट नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'श्रीगणेशको स्वानन्दभुवन वर्णन' शीर्षकान्वित पचासौँ अध्याय पूर्ण भयो ।।५०।।

ॐ

# एकपञ्चाशोऽध्यायः { ५१ अध्याय }

व्यास उवाच

कथमाराधितस्तेन काशिराजेन विघ्नराट् ।
कथञ्च चर्मदेहेन गतः स्थानमनुत्तमम् ।।१।।

एतन्मे शंस भगवन् ! शृण्वँस्तृप्यामि न क्वचित् ।

क उवाच

सम्यक् शृणु महाबुद्धे ! कथां पापप्रणाशिनीम् ।।२।।

कथयामि महाबुद्धे ! इतिहासं पुरातनम् ।
यथा निर्वासनो भूपः स्वानन्दभुवनं गतः ।।३।।

महिमानं परिज्ञाय मुद्गलाज्ज्ञानसागरात् ।
कायेन मनसा वाचा गणेशे भक्तिमानभूत् ।।४।।

गोदानानि महाभक्त्या गजदानान्यनेकशः ।
रथाश्वगृहधान्यानि दशदानान्यजानपि ।।५।।

विनायकप्रीतये स ददात्येव दिने दिने ।
मिष्टान्नभोजनैर्विप्राँस्तोषयित्वा धनादिभिः ।।६।।

गणेशदृढभक्तिं स याचते स्म दिने दिने ।
माघशुक्लचतुर्थ्यां स भौमवारे शुभे दिने ।।७।।

स्नानञ्चक्र उषःकाले सन्ध्यां नित्यविधिन्तथा ।
भूषयित्वा तथात्मानं नानालङ्करणांशुकैः ।।८।।

आकार्य सकलाँल्लोकान् ब्राह्मणान् सुहृदोऽपरान् ।
पूजयामास विविधै रत्नैरंशुकसञ्चयैः ।।९।।

वारं वारं पश्यति स्म विमानागमनं नृपः ।
सभातो गन्तुकामाँस्तान्निषेधति मुहुर्मुहुः ।।१०।।

ततो विनायको ज्ञात्वा कालं तस्य महात्मनः ।
प्रेषयामास दूताभ्यां विमानं द्युतिमत्तरम् ।।११।

**व्यासले भन्नुभयो** – काशिराजले भगवान् श्रीगणेशको कसरी आराधना गरे र कसरी चर्ममय शरीरका साथ श्रीगणेशको स्वानन्दभुवनमा पुगे ? ।।१।। मेरो यो संशय रहेको छ । त्यसको निवारण गर्नुहोस् । श्रीगणेशका कथा सुनेर कहिल्यै पनि मेरो मन तृप्त हुँदैन ।

**ब्रह्माजीले भन्नुभयो** – हे बुद्धिमान् व्यास ! राम्ररी सुन्नुहोस्। म तपाईँलाई पापनाशक कथा सुनाउँछु । जसरी काशिराज वासनामुक्त भएर स्वानन्दभुवनमा गए, यस विषयमा एउटा इतिहास रहेको छ। ज्ञानका सागर मुद्गल ऋषिबाट भगवान् श्रीगणेश र उहाँको धामका विषयमा राम्ररी जानकारी पाएर काशिराजले मन, वचन र कर्मबाट श्रीगणेशमा भक्ति गरेका थिए ।।२-४।। तिनले श्रीगणेशको आराधनाका क्रममा उत्तम भक्तिका साथ अनेक गाई र हात्तीहरूको दान गरे । तिनले रथ, घोडा, गृह, धनधान्य र दशदान पनि गरे । कुनै बेला त तिनले बोकाहरूको पनि दान गरे । ती भगवान् श्रीगणेशको प्रीतिका लागि निरन्तर दानकर्ममा निरत थिए । विभिन्न पकवान र मिठाइसमेत भोजन गराएर ब्राह्मणहरूलाई सन्तोष र तृप्ति प्रदान गरिरहेका थिए ।।५-६।। ब्राह्मणहरूसँग तिनले आशीर्वाद माग्ने क्रममा मलाई श्रीगणेशमा भक्ति दिनुहोस् भनी याचना गर्दथे । एक पटक माघ शुक्ल चतुर्थी तिथिमा मङ्गलबार परेका दिन बिहानै उठेर नित्यकर्म र सन्ध्या सम्पन्न गरी अनेक थरि वस्त्र र अलङ्कारले सजिएर आफन्त जन, ब्राह्मण र मित्रहरूलाई बोलाई तिनले अनेक रत्न र वस्त्रहरू समर्पण गरी भगवान् श्रीगणेशको पूजा गरे ।।७-९।। श्रीगणेशको विमान मलाई लिन कहिले आउँछ भनी पटक-पटक ती आकाशतिर आँखा लगाउने गर्दथे । सभाबाट बाहिर जान लागेका सभासद्हरूलाई अब म गणेशलोकमा जाँदैछु, तपाईँहरू बस्नुहोस् र मेरो गणेशधाममा प्रस्थान हुने दृश्यलाई अवलोकन गर्नुहोस् भन्ने गर्दथे । समय बितिरहेको थियो र प्रतीक्षाको धैर्यले पनि सीमा नाघ्न लागिरहेको थियो । भगवान् श्रीगणेशले काशिराजको शरीरत्यागको समय थाहा पाएर आफ्ना दूतहरूका साथ अत्यन्त ज्योतिर्मय र दिव्य विमान काशिराजलाई लिन पठाउने निधो गर्नुभयो ।।१०-११।।

गणेश उवाच

प्रमोदामोद ! गत्वा तु काशिराजं धरातले ।
मद्भक्तमत्रानय ते विमानवरमास्थितम् ।।१२।।

क उवाच

तदाज्ञां प्राप्य तं नत्वा दिवो लोकादुभौ तदा ।
दिव्यं विमानमादाय काशिराजं समीयतुः ।।१३।।

तत्तेजोधर्षिता लोका मेनिरे प्रलयानलम् ।
केचिच्च मेनिरे व्यभ्रे विद्युत्पातमिवागतम् ।।१४।।

तर्कयामासुरपरे पतन्तं रविमण्डलम् ।
घण्टानाञ्चैव तूर्याणां गन्धर्वाप्सरसां स्वनम् ।।१५।।

श्रुत्वाऽन्ये जज्ञिरे यानं गणेशकृपयागतम् ।
अङ्गणे काशिराजस्य समुत्तीर्णं श्रिया लसत् ।।१६।।

आगतौ राजनिकटे प्रमोदामोदसंज्ञकौ ।
गणौ दिव्याम्बरधरौ दिव्यभूषाविराजितौ ।।१७।।

दिव्यमाल्यानुलेपाद्यैर्दिव्यदीप्त्या स्मराविव ।
विनायकस्वरूपौ तौ नत्वा राजा निजासने ।।१८।।

उपवेश्य प्रपूज्याशु यावत् पृच्छति तौ नृपः ।
तावत् तावूचतुर्दूतौ सर्वलोकेऽथ शृण्वति ।।१९।।

शृणु राजन् ! प्रवक्ष्यामि वाक्यं वैनायकं शुभम् ।
न भक्तस्त्रिषु लोकेषु त्वत्तःप्रीतिकरो नृप! ।
त्वां ध्यायन्ति दिवारात्रं त्वद्गुणान् वदतेऽनिशम् ।।२०।।

धन्योऽसि जन्मसाफल्यं कृतं पुण्यवता त्वया ।
त्वद्दर्शनात् क्षिप्रतरं नष्टं पापं तमो महत् ।।२१।।

न जानीवस्तपः किं ते कृतं जन्मान्तरेषु च ।
परब्रह्मस्वरूपोऽयं बालरूपी विनायकः ।।२२।।

भक्तानां गृहमागत्य नानालीला अदर्शयत् ।
देवस्य देवभक्तस्य महिमा नैव गोचरः ।।२३।।

**श्रीगणेशले भन्नुभयो** - 'हे मेरा दूत प्रमोद एवं आमोद! तिमीहरू दुबै पृथिवीतलमा तपस्या गरिरहेका मेरा भक्त काशिराजलाई मेरो उत्तम विमानमा राखी लिएर आऊ ।।१२।।'

**ब्रह्माजीले भन्नुभयो** - श्रीगणेशको आज्ञा प्राप्त गरेर उहाँलाई नमस्कार गरी आमोद र प्रमोद गणेशलोकबाट दिव्य विमान साथमा लिई काशिराजका समीपमा गए ।।१३।। श्रीगणेशका दूतहरूको तेजबाट हतप्रभ भएका काशीका दरबारियाहरूले प्रलयको आगो नै बल्यो कि भन्ने भावना गरिरहेका थिए । कसैले बादल नभएको आकाशमा बिजुली चम्केझैं माने । कसैले सूर्यमण्डल नै खसेको हो कि भनी तर्क गरे । त्यस बेला घण्टाको आवाज, तुरहीको वाद्यघोष, गन्धर्व एवं अप्सराहरूको नाचगानको स्वर विमानबाट बाहिर आएको सुनेर ती मानिसहरूले श्रीगणेशको कृपाबाट काशिराजलाई लिन विमान आएको थाहा पाए । कान्तिले अत्यन्त सुहाएको त्यो विमान काशिराजको आँगनमा उत्रियो ।।१४-१६।। प्रमोद र आमोद काशिराजको नजिकमा आए । श्रीगणेशका ती दुवै दूतले दिव्य वस्त्र र आभूषण धारण गरेका थिए । तिनीहरूको शरीरमा दिव्य कान्ति छाएको थियो । अत्यन्त उत्तम माला र सुगन्धका सामग्रीहरूद्वारा वातावरणलाई सुगन्धित तुल्याउने ती दुवै कामदेवजस्ता देखिन्थे। काशिराजले भगवान् श्रीगणेशकै रूपमा रहेका ती दुवैलाई नमस्कार गरेर आसनमा बसाली पूजा गरेपछि केही सोध्न चाहिरहेका थिए, तर ती बोल्न नपाउँदै सबै मानिसहरूले सुन्ने गरी श्रीगणेशका दूत आमोद एवं प्रमोदले भने - 'हे काशिराज! तपाईंलाई हामी भगवान् श्रीगणेशको सन्देश सुनाउँदैछौं, सुन्नुहोस्- 'तीनै लोकमा तपाईंभन्दा प्यारो मेरो अर्को भक्त छैन । मैले तपाईंलाई रातदिन संझन्छु र तपाईंका गुणहरूको प्रशंसा गर्दछु। तपाईं धन्य हुनुहुन्छ र पुण्यवान् पनि । तपाईंले मानव जीवनको पूर्ण सफलता प्राप्त गर्नुभएको छ ।' श्रीगणेशको यो सन्देश हो, तपाईंले कस्तो तपस्या गर्नुभयो हामी जान्दैनौं । तपाईंको दर्शनबाट हाम्रा पाप पनि नष्ट भएका छन् । परब्रह्मस्वरूप भगवान् श्रीगणेशले तपाईंको घरमा आएर अनेक लीला देखाउनुभयो। भगवान् श्रीगणेश र उहाँका भक्तहरूको महिमा सामान्य मानिसको बुद्धिमा आउने विषय होइन ।।१७-२३।।

यतो विनायको देवस्त्वां चिन्तयति सर्वदा ।
त्वदर्थं प्रेषितं यानं दिव्यं वैभवसंयुतम् ।।२४।।

न यावो दिव्यलोकं त्वां तदाज्ञावशवर्तिनौ ।
शीघ्रमानयतां काशिराजमित्याह नौ विभुः ।।२५।।

शृण्वत्सु सर्वलोकेषु शुश्राव स वचस्तयोः ।
अमृताब्धौ निमग्नोऽभूदानन्दाश्रु सृजन् मुहुः ।।२६।।

देहावस्थां पुनर्लब्ध्वा प्रणम्य तौ उवाच सः ।
धन्यं जन्म च पितरौ निष्ठा भक्तिश्च सम्पदा ।।२७।।

यद् दुर्लभौ मया दृष्टौ चरणौ वां शुभावहौ ।
विनायकस्वरूपेण प्राप्तौ नेतुं परं स्थलम् ।।२८।।

इक्षुसागरमध्यस्थं दुर्दर्शं चर्मचक्षुषाम् ।
यन्निर्गुणं चिदानन्दं परं ब्रह्म सनातनम् ।।२९।।

विश्वोत्पत्तिस्थितिलयहेतुभूतमगोचरम् ।
यदणुभ्योऽप्यणुतरं स्थूलात् स्थूलतरञ्च यत् ।।३०।।

सर्वत्रगमसक्तञ्च साकारं गुणभोक्तृ च ।
नानारूपमरूपञ्च भूभारहरणोद्यतम् ।।३१।।

तेन मे रङ्कभूतस्य कृपेयं महती कृता ।
इत्युक्त्वा स नमस्कृत्य सर्वानालिङ्ग्य प्रेक्ष्य च ।।३२।।

दूतावूचे त्वारुहतं प्रणिपातपुरःसरम् ।
पश्चादहं समारोक्ष्ये विमानं मर्त्यदुर्लभम् ।।३३।।

भगवान् श्रीगणेशले तपाईँको निरन्तर चिन्तन गर्नुहुन्छ । तपाईँप्रति अत्यन्त माया गरेर उहाँले दिव्य वैभवले सम्पन्न विमान पठाउनुभएको छ ।।२४।। हामी आमोद र प्रमोद दुवै भगवान् श्रीगणेशको आज्ञापालन गर्ने सेवक हौँ । हामी तपाईँलाई लिन आएका छौँ । अब तपाईँको जाने बेला भयो । हामी तपाईँलाई श्रीगणेशलोकमा पुऱ्याउँछौँ किनकि भगवान् श्रीगणेशले छिटो गएर काशिराजलाई लिएर आओ भन्ने आज्ञा दिनुभएको छ ।।२५।। काशिराजले सभाका मानिस र परिवारका मानिसहरूको बीचमा आमोद र प्रमोदबाट यस्तो सन्देश सुनेपछि आँखाबाट हर्षका आँसु बगाउँदै आनन्दामृतको सागरमा डुबुल्की मारे । केही बेरपछि शान्त भएर केही ध्यान गरेझैं तिनले आफ्ना आँखा चिम्लिए । धेरै बेरपछि जागेर आमोद-प्रमोदलाई प्रणाम गर्दै भने - 'हे श्रीगणेशका दूतहरू ! तपाईँहरू आज आउनुभयो, मेरो जन्म धन्य भएको छ, मलाई जन्माउने माता-पिता धन्य हुनुभएको छ, मेरो श्रद्धा धन्य भएको छ, मेरो भक्ति धन्य भएको छ र मेरो सम्पत्ति धन्य भएको छ किनकि मैले संसारले दुर्लभ मानेका तपाईँहरूका चरणकमलको दर्शन पाएँ । तपाईँहरू श्रीगणेशका दूत भए पनि श्रीगणेशकै स्वरूपबाट आउनुभएको छ र मलाई परम धाममा पुऱ्याउने उद्देश्यले आउनुभएको छ । मेरा लागि तपाईँहरू श्रीगणेशसमान हुनुहुन्छ ।।२६-२८।। इक्षुसागरको बीचमा रहेका, साधारण मानिसले देख्न नपाउने, निर्गुण, चैतन्यमय, सनातन, परब्रह्मरूप, विश्वको उत्पत्ति, पालन र नाश गर्ने, सामान्य मानिसको दृष्टिमा नआउने, अणुभन्दा पनि साना, ठूला वस्तुभन्दा पनि धेरै ठूला, संसारमा व्याप्त भएर रहने, संसारमा आसक्त नहुने, साकार, निराकार, गुणको भोग गर्ने, गुणदेखि पर रहने, नाना रूपमा प्रकट हुने तर रूप नभएका, पृथिवीको भारहरण गर्न अनेक अवतार लिने भगवान् श्रीगणेशले आज ममाथि ठूलो कृपा गर्नुभएको छ ।' काशिराजले यसरी भाव व्यक्त गरेपछि त्यहाँ जम्मा भएका सबै मानिसलाई नमस्कार गरे, सबैलाई अङ्कमाल गरेर अब म बिदा हुन लागेँ भन्दै सबैका मुखमा हेरे ।।२९-३२।। केही बेरपछि दूतहरूलाई भने - 'तपाईँहरू विमानमा पाल्नुहोस् । तपाईँहरू सवार हुनुभएपछि मात्र म सवार हुनेछु ।' यसरी निवेदन गरेपछि काशिराजले आफ्ना मन्त्रीहरूलाई नमस्कार गरी आफ्नो छोरालाई देखाउँदै हे मन्त्रीहरू ! यो छोरा तपाईँहरूकै हो, यसको

अमात्याभ्यां नमस्कृत्य पुत्रं दत्त्वा तयोः करे ।
प्रजानां पालनं कार्यं धर्मेण च बलेन च ।।३४।।

मुद्गलेन च तत्प्रोक्तमनुभूतमिदं मया ।
इत्युक्त्वा चर्मदेहेन रुरोह यानमुत्तमम् ।।३५।।

अधिष्ठितं तु दूताभ्यां पूजिताभ्यामनेकधा ।
आरूढस्य च तत्रास्य देहोऽभूद् रविसन्निभः ।।३६।।

दिव्यैर्गन्धैरलङ्कारैस्ताभ्यां सम्पूजितोंऽशुकैः ।
गतौ तौ वायुवेगेन दर्शयन्तौ च तं नृपम् ।।३७।।

भूतप्रेतपिशाचानां लोकं दुष्कृतकर्मणाम् ।
यत्र ते विकृताकारा ऊर्ध्वपादा अधोमुखाः ।।३८।।

पृष्ठभागमुखाः केचिन्मस्तकाक्षास्तथाऽपरे ।
हृदिनेत्राः पृष्ठनेत्राः सूक्ष्मकण्ठा महोदराः ।।३९।।

यथा रश्मौ जालगते भ्रमन्ति परमाणवः ।
तथा भ्रमन्ति गगनेऽनेकरूपाः सुदुःखिताः ।।४०।।

कोऽयं लोको दूतवरौ ! ब्रूतं म इति सोऽब्रवीत् ।।४१।।

रक्षा गर्नुहोस्, प्रजापालन गर्ने कार्यमा यसलाई सघाउनुहोस्, धर्म र पराक्रम दुबै किसिमबाट सहयोग गर्नुहोस्, ऋषि मुद्गलले मलाई जसरी आशीर्वाद र उपदेश दिनुभएको थियो तदनुसार आज मैले भगवान् श्रीगणेशको साक्षात्कार गर्ने मौका पाएको छु । अब म जान्छु भनेर भौतिक शरीर लिएर नै काशिराज श्रीगणेशले पठाउनुभएको विमानमा सवार भए ।।३३-३५।। त्यस विमानमा श्रीगणेशका दूतहरू बसिरहेका थिए। काशिराज सवार हुनासाथ तिनका शरीर सूर्यजस्तै चहकिला भए । श्रीगणेशका दूत आमोद र प्रमोदले दिव्य गन्ध र अलङ्कार अर्पण गरी काशिराजको सम्मान गरे । त्यसपछि राजालाई साथमा लिई ती दूतहरू वायुवेगले श्रीगणेशधामतर्फ प्रस्थान गरे ।।३६-३७।। भूत, प्रेत, पिशाच र पाप गर्ने मानिसहरूको लोक छुट्टै हुने गर्छ। तिनीहरूले त्यहाँ परम गोता भोग्नुपर्छ । ती प्राणीहरूका आकार बिग्रेका हुन्छन् । सामान्य मानिसले हेर्दा डर लाग्छ । ती दुःख पाउने र नरक भोग्ने मानिसहरूका खुट्टा माथितिर फर्केका हुन्छन् र मुख तलतिर फर्केको हुन्छ। कसैका मुख पछाडिपट्टि हुन्छन् भने कसैका आँखा निधारमा देखिएका हुन्छन् । कसैका आँखा छातीमा टाँसिएझैं रहेका हुन्छन् भने कसैका आँखा पिठ्यूँमा रहेका हुन्छन् । कसैको घाँटी साह्रै मसिनो हुन्छ र कसैको पेट ठूलो हुन्छ । यी सबै पापबाट हुने कुरा हुन् ।।३८-३९।। सूर्यको किरणबाट दिनदिनै असंख्य जीवहरू धर्तीमा छरिएर परमाणुका रूपमा विचरण गरिरहेका हुन्छन् । तिनीहरू आकाशको एउटा किनारबाट अर्को किनारातर्फ गइरहेका हुन्छन् र अनेक थरि रूप हुन्छन् । अनेक कष्ट पाएर विलाप गरिरहेका हुन्छन् । पाप गर्ने र नरक भोग्ने मानिसहरूको यो स्थिति हुन्छ। ती मानिसहरूले दुःख भोग्ने यो लोकको नाम के हो भनेर विमानमा सवार भएका काशिराजले आमोद र प्रमोदसँग प्रश्न गरे ।।४०-४१।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे स्वानन्दभुवननामपंस्थानं एकपञ्चाशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'काशिराजको स्वानन्दभुवनका लागि प्रस्थान' शीर्षकान्वित एकाउन्नौं अध्याय पूर्ण भयो ।।५१।।

ॐ

## द्विपञ्चाशोऽध्यायः { ५२ अध्याय }

दूतावूचतुः

प्रेतभूतपिशाचानां लोकोऽयं राजसत्तम !
निन्दापैशुन्यतास्तेयकृतो यान्त्यत्र भूपते ।।१।।
ततोऽग्रे पश्यति स्मासौ लोकमसुररक्षसाम् ।
यत्र ते विविधाकारा ऊर्ध्वकेशा भयानकाः ।।२।।
घोरास्याश्च ललज्जिह्वा मेघनादा धरोपमाः ।
अग्निकुण्डनिभाँस्तान् स दृष्ट्वा पप्रच्छ तौ पुनः ।।३।।
केषामिदं पुरं दूतौ ! गदतं मेऽनुपृच्छतः ।
तावूचतुरयं लोको दुष्टदानवरक्षसाम् ।।४।।
श्रौतस्मार्तक्रियाहीना अत्र तिष्ठन्ति पापिनः ।
तदग्रे स ददर्शाऽथ लोकं गन्धर्वसेवितम् ।।५।।
रौप्यस्वर्णगृहा यत्र रत्नकाञ्चनभूमयः ।
नरनार्यः कामरत्यो नृत्यगानविशारदाः ।।६।।
अतिसौख्यकरं तं स दृष्ट्वा पप्रच्छ तौ पुनः ।
केषामिदं पुरं दूतौ ! गदतं मेऽनुपृच्छतः ।।७।।

तावुचतुः

गन्धर्वनगरञ्चेदं देवस्थानेषु गायकाः ।
प्राप्नुवन्ति महापुण्यादिदं पुरमनुत्तमम् ।।८।।
सिद्धचारणयक्षाणां गुह्यकानां पुरं महत् ।
नानाव्रतैस्तथा दानैर्गम्यं पुण्यसमुच्चयैः ।।९।।
दर्शयामासतुस्तौ च नृपं पश्चाद् गरीयसीम् ।
इन्द्रस्य नगरीं रम्यामश्वमेधशतार्जिताम् ।।१०।।
सुवर्णरत्नगोदानरथाश्वगजदानतः ।
गम्यां तीर्थाभिषेकाद्यैः पुण्यैर्नानाविधैरपि ।।११।।
तत्रेन्द्रभवनं रम्यं तावदर्शयतां शुभम् ।
नृपो निरीक्ष्य तौ प्रोचे यच्छ्रुतं दृष्टमेव तत् ।।१२।।
अग्निलोकं ततोऽग्रे तौ दर्शयन्तौ नृपं शुभम् ।
यत्राग्निहोत्रिणो वह्नितेजसो भान्त्यनेकशः ।।१३।।

**दूतहरूले भने** – हे राजन् ! यो प्रेत, भूत र पिशाचहरूको लोक हो । निन्दा, चुक्ली र चोरी गर्ने मानिसहरू यहाँ जान्छन्।।१।। त्यसपछि राजाले विमानद्वारा यात्रा गर्ने क्रममा अर्को लोक देखे । त्यो लोक असुर र राक्षसहरूको थियो । त्यहाँ अनेकौं आकारका ठाडा रौं भएका, डरलाग्दो अनुहार भएका, जिब्रो लपलपाइरहने, बादलझैं गर्जन गर्ने, पृथिवीसमान आकारका राक्षसहरू बस्दछन् । अग्निको कुण्डजस्तै ज्वालामय ती राक्षसहरूलाई देखेर राजाले फेरि सोधे – 'हे दूतहरू ! यो कसको पुर हो ? मलाई बताउनुहोस् ।' ती दूतले भने – 'यो डरलाग्दो लोक दुष्ट दानव र राक्षसहरूको हो । वेद र धर्मशास्त्रले बताएका कर्म नगर्ने पापीहरू यहाँ बस्ने गर्छन् ।' त्यसपछि राजाले अगाडि बढ्दा गन्धर्वहरूको लोक देखे ।।२-५।। गन्धर्वलोकमा चाँदी र सुनका घर थिए । भुइँमा रत्न र सुवर्णका फर्स बनाइएका थिए । नर-नारीहरू कामक्रीडामा रुचि भएका र नाच्न-गाउन सिपालु देखिन्थे । अत्यन्त सुखदायक त्यस लोकलाई देखेर राजाले दूतहरूलाई सोधे – 'यो पुर कसको हो ? तपाईंहरूले मलाई बताउनुहोस् ?' ।।६-७।।

**दूतहरूले भने** – 'यो गन्धर्वहरूको नगर हो । यहाँ गायकहरू आउँछन् । पुण्यवान् गायकहरूले पाउने उत्तम लोक यही नै हो । यो सिद्ध, चारण, यक्ष र गुह्यकहरूको पनि लोक हो। अनेक थरि व्रत, दान र पुण्यबाट यो लोक प्राप्त हुन्छ।' त्यसपछि दूतहरूले काशिराजलाई अत्यन्त रमणीय, सय अश्वमेध यज्ञ पूरा गरेपछि मात्र पाइने इन्द्रको नगरी देखाए ।।८-१०।। सुवर्णदान, रत्नदान, गोदान, रथदान, अश्वदान, गजदान र अनेक थरि तीर्थहरूमा स्नान गरेर पुण्य आर्जन गरेपछि साधकले इन्द्रको नगरी अमरावतीको भोग प्राप्त गर्दछ । यहाँ अत्यन्त राम्रो इन्द्रको दरबार छ भन्दै ती दूतहरूले राजालाई इन्द्रको दरबार नजर गराए । राजाले पनि इन्द्रको दरबार देखेपछि भने- मैले जस्तो सुनेको थिएँ त्यस्तै यो दरबार रहेछ।।११-१२।। त्यसपछि दूतहरूले राजालाई अगाडि बढेर अत्यन्त मङ्गलमय अग्निलोक देखाए । त्यहाँ अग्निहोत्री पुरुषहरू बसेका थिए। त्यहाँ रहेका नर-नारीहरू अग्निझैं तेजिला देखिन्थे । फेरि दूतहरूले राजालाई शुभ र अशुभ फल प्रदान गर्ने यमलोक देखाए। (जहाँ पुण्यवान् र

ततोऽदर्शयतां भूपं यमलोकं शुभाशुभम् ।
यत्र पुण्यकृतो यान्ति तथा पापकृतोऽपि च ।।१४।।

स धर्मः सुकृतां भाति क्रूरो दुष्कृतकर्मणाम् ।
सुकृतः सर्वभोगाँस्तु दुष्कृतो नरकानपि ।।१५।।

भुञ्जते प्राणिनः स्वस्वकर्मभोगाननेकशः ।
कुम्भीपाके च पच्यन्ते छिद्यन्ते चासिपत्रकैः ।।१६।।

अयोघनेन ताड्यन्ते कृत्यन्ते कण्टकैरपि ।
तामिस्रे चान्धतामिस्रे कृमिकुण्डे सपूयके ।।१७।।

पात्यन्ते नरके घोरे दुष्कृतः प्राणिनः स तान् ।
निरीक्ष्यामीलयन्नेत्रे यातं यातमिति ब्रुवन् ।।१८।।

ततोऽदर्शयतां तं तौ कौबेरं लोकमुत्तमम् ।
अत्याश्चर्यकरं शक्रलोकादतिवरं परम् ।।१९।।

रत्नकाञ्चनयुक्तानि गृहाणि दीप्तिमन्ति च ।
रत्नकाञ्चनदानेन तुलादानैश्च कोटिशः ।।२०।।

प्राप्नुवन्ति महाभागाः कौबेरं लोकमुत्तमम् ।
ततोऽदर्शयतां तं तौ वारुणं लोकमुत्तमम् ।।२१।।

तीर्थान्नदानतो लभ्यं कुबेरभवनातिगम् ।
अप्सु सर्वे शुष्कदेहा वसन्ति सुखभोगिनः ।।२२।।

वापीकूपतडागानां दृश्यन्ते जलदायिनः ।
ततोऽग्रेऽदर्शयतां तौ वायुलोकं सुखावहम् ।।२३।।

ददते व्यजनं ग्रीष्मे सोशिरं कर्पूरं जलम् ।
वसन्ति वायुलोके ते स्वेच्छयातिविहारिणः ।।२४।।

ततोऽग्रेऽदर्शयतां तौ सूर्यलोकं दुरासदम् ।
पञ्चाग्निसाधनरताः सूर्यभक्तिपरायणाः ।।२५।।

पापी दुर्बैथरि जाने गर्दछन् । पुण्यवान्ले राम्रो फल पाउँछन् भने पापीहरूले नरकभोग गर्दछन् । यमराजलाई धर्मराज पनि भनिन्छ । ती सज्जनहरूका निमित्त सुन्दरस्वरूपमा देखिन्छन् र धर्मकै रूपमा सुहाएका हुन्छन् । तर पापीहरूका समक्ष भने ती डरलाग्दा र क्रूर देखिन्छन् । यमलोकमा गएर पुण्यवान्हरूले पुण्यका राम्रा फल पाउँछन् भने पापीहरूले नरकका कष्टभोग गर्दछन् ।।१३-१५।। प्राणीहरूले यमलोकमा आएर आफूले जीवनमा गरेका पुण्य र पाप कर्मका अनेक फल भोग्दछन् । पापीहरू कुम्भीपाक नरकमा ठूला-ठूला ताउलाहरूमा पकाइन्छन् । तरबारका धारजस्ता तीखा शस्त्र-अस्त्रले काटिने र छेँडिने गर्दछन् । कहीं कहीं त उनीहरूलाई घनले पिट्ने गरिन्छ र काँडाले गोभ्ने गरिन्छ । यसरी नै पापीहरूलाई तामिस्र, अन्धतामिस्र र पीपैपीपले भरिएको कृमिकुण्ड नरकमा खसाइन्छ । काशिराजले ती नरकहरूमा मानिसले भोगिरहेका कष्ट देखेर आँखा चिम्लिए र अगाडि बढौं भने ।।१६-१८।। त्यसपछि दूतहरूले पनि अगाडि बढेर तिनलाई अत्यन्त आश्चर्यदायक, इन्द्रलोकभन्दा पनि विशाल र राम्रो कुबेरलोक देखाए । त्यहाँ सुन र रत्नले बनेका घर थिए। ती घरहरूमा विचित्र किसिमको चमक थियो। जुन मानिसले रत्नदान, सुवर्णदान र तुलादान गर्दछन् ती भाग्यशाली मानिसहरू त्यस उत्तम कुबेरलोकमा प्राप्त हुन्छन्। त्यसपछि अगाडि बढेर दूतहरूले राजालाई अत्यन्त उत्तम वरुणलोक देखाए।।१९-२१।। वरुणलोक कुबेरलोकभन्दा पनि राम्रो थियो। तीर्थमा गएर अन्नदान गर्ने मानिसले यो लोक प्राप्त गर्दछन् । यहाँ बस्ने प्राणीहरू पानीभित्र बस्दा पनि ओभानै हुन्छन् र तिनले अत्यन्त अनुपम आनन्द भोगिरहेका हुन्छन् ।।२२।। कुवा, तलाउ र पोखरी बनाएर जलदान गर्ने मानिसहरू त्यहाँ गई आनन्द भोग गर्दछन्। वरुणलोक देखाएपछि दूतहरूले केही अगाडि गएर राजालाई सुखदायक वायुलोक देखाए ।।२३।। जसले जेठ-असारका महिनामा पङ्खा, उशीर र कपूर दान गर्दछन् ती मानिसहरू आफ्नो इच्छाअनुसार विहार गर्दै वायुलोकमा रमाउँछन् ।।२४।। वायुलोक देखाएपछि दूतहरूले विमान अगाडि बढाए र राजालाई प्रचण्ड तेजले भरिएको सूर्यलोक देखाए । पञ्चाग्निसाधना गर्ने र सूर्यनारायणमा भक्ति गर्ने मानिसहरू सम्पूर्ण कामना भोग गर्न सूर्यलोकमा आउँछन् र सूर्यसमान तेजस्वी भएर रहन्छन्।

अवाप्तकामा मुनयः सर्वे ते सूर्यवर्चसः ।
निवसन्ति निराबाधा ब्रह्मकल्पशतं नराः ।।२६।।
नाक्षत्रञ्चन्द्रलोकञ्चाऽदर्शयतां नृपं ततः ।
मुक्ताफलसुवर्णानां दानेन सोमयागतः ।।२७।।
प्राप्नुवन्ति महात्मानो लोकमेनं सुपुण्यतः ।
गोलोकञ्च ततोऽदर्शयतां तौ नृपतिं तदा ।।२८।।
गोसहस्राणि ये दद्युर्ब्राह्मणेभ्यो यथाविधि ।
रोमसङ्ख्यैस्तु कल्पैस्ते गोलोके निवसन्ति हि ।।२९।।
सत्यलोकं ततोऽदर्शयतामग्रे चिरन्तनम् ।
सत्यव्रता वेदविदो वेदाध्ययनतत्पराः ।।३०।।
सदाचाराः शास्त्रविदः पुराणपाठकाश्च ये ।
अन्नदानरता यज्ञकर्तारस्तीर्थसेविनः ।।३१।।
अप्रतिग्राहका विप्राः परोपकृतिकारिणः ।
तपस्विनो दानपराः सत्यलोकं व्रजन्ति ते ।।३२।।
गव्यूत्यष्टसहस्रेण विस्तीर्णं तावदायतम् ।
यत्र ब्रह्मा मुनिगणैर्गणै राजर्षीणां परैः ।।३३।।
देवर्षीणां दानवानां गन्धर्वाप्सरसान्तथा ।
स्तूयमानो दिवारात्रं सेव्यते भक्तितत्परैः ।।३४।।
यत्रेन्द्रभवनाभानि गृहाणि परितो लसन् ।
तं दृष्ट्वा नृपतिर्लोकं विस्मितः प्राह तौ तदा ।।३५।।

नृप उवाच

धन्योऽस्म्यनुगृहीतोऽस्मि गणेशेन कृपावता ।
भवद्भ्याञ्च यतो दृष्टाः स्वर्गलोकाः सुदुर्लभाः ।।३६।।

क उवाच

तौ तं भूयोऽदर्शयतां वैकुण्ठं विश्रुतं त्रिषु ।
लोकेषु तत्र गच्छन्ति वैष्णवा भक्तितत्पराः ।।३७।।
सर्वलोकेषु श्रेष्ठं तं नोपमा यस्य विद्यते ।
शेषो न वर्णने शक्तोऽनेकवक्त्रो न चात्मभूः ।।३८।।
ऊर्जस्नायी झषस्नायी मेषस्नायी तिलान्नदः ।
गोदो गीताध्ययनवान् प्राणिनाञ्चोपकृच्च यः ।।३९।।

त्यस्ता मानिसहरू ब्रह्माजीको सय कल्पसम्म निर्बाधरूपमा यहाँ बस्ने गर्दछन् ।।२५-२६।। त्यसपछि दूतहरूले राजालाई नक्षत्रलोक र चन्द्रलोक देखाए । जुन मानिसले मोती, फल एवं सुवर्ण दान गर्दछन् र सोमयाग पनि गर्दछन् त्यस्ता महात्माहरू आफ्ना पुण्यका प्रतापले चन्द्रलोकमा जान्छन् । चन्द्रलोक देखाएपछि दूतहरूले विमानलाई फेरि अगाडि बढाएर राजालाई गोलोक नजर गराए ।।२७-२८।। जसले विधिपूर्वक ब्राह्मणहरूलाई हजारौं गाई प्रदान गर्दछन् ती मानिसहरू दान गरिएका गाईहरूका शरीरमा जति रौं हुन्छन् त्यति वर्षसम्म गोलोकमा निवास गर्दछन् ।।२९।। त्यसपछि दूतहरूले राजालाई अतिप्राचीन सत्यलोक देखाए । सत्यमा निष्ठा राख्ने, वेदज्ञ, वेदको निरन्तर अध्ययन गर्ने, उत्तम आचार-विचारले सम्पन्न, शास्त्रज्ञ, पुराणको पाठ गर्ने, निरन्तर अन्न दान गर्ने, ठूला-ठूला यज्ञ लगाउने, तीर्थमा गएर बस्ने मानिसहरू र दान नलिने ब्राह्मण, परोपकारी सज्जन, तपस्वी मानिस एवं नित्य दान-कर्ममा रुचि राख्ने मानिसहरू सत्यलोकमा जान्छन् । सत्यलोक बत्तीस कोसको भू-भागमा फैलिएको छ । त्यहाँ भक्तिमा तत्पर मुनिगण, राजर्षिगण, देवर्षिगण, दानवगण र गन्धर्वगणका साथै अप्सराहरूद्वारा स्तुति गरिएका र अहोरात्र सेवा गरिएका ब्रह्माजी पनि विराजमान हुनुहुन्छ ।।३०-३४।। सबै लोकहरूभन्दा उत्तम मानिएको ब्रह्मलोकमा इन्द्रलोकमा जस्तै राम्रा घरहरू छन् । ब्रह्मलोकलाई देखेर राजाले चकित हुँदै दूतहरूलाई भने ।।३५।।

**राजाले भने** - 'आज म धन्य छु र अनुगृहीत पनि छु। कृपालु भगवान् श्रीगणेश र तपाईंहरूका माध्यमबाट मैले दुर्लभ स्वर्गहरूको दर्शन पाएँ ।।३६।।'

**ब्रह्माजीले भन्नुभयो** - त्यसपछि दूतहरूले काशिराजलाई तीनै लोकमा विख्यात वैकुण्ठ देखाए । वैकुण्ठमा निरन्तर भक्तिसाधना गर्ने वैष्णवहरू जान्छन् ।।३७।। वैकुण्ठ लोक सबै लोकहरूभन्दा उत्तम लोक हो । यसको अरूसँग तुलना गर्न सकिंदैन । यसको महिमा बताउन शेषनाग र ब्रह्माजी पनि असमर्थ छन् । कार्तिक, माघ र वैशाख महिनामा तीर्थस्थान गर्ने, तिलदान, अन्नदान एवं गोदान गर्ने, निरन्तर गीताको अध्ययन गर्ने र प्राणीहरूको उपकार गर्ने पुण्यवान् मानिस तुरुन्तै विष्णुलोकमा प्राप्त हुन्छन् ।।३८-३९।। यो लोक पाँच

विष्णुलोकं व्रजत्याशु सहस्रपञ्चयोजनम् ।
सूर्यचन्द्रप्रकाशानि विश्वकर्मकृतानि च ।।४०।।

मन्दिराणि प्रभासन्ति रत्नकाञ्चनराजतै: ।
येषु नो प्रविशत्येव तमो रत्नमरीचिभि: ।।४१।।

परिवारयुतो लक्ष्म्या यत्र तिष्ठति दैत्यहा ।
जहर्ष नृपवर्योऽसौ दृष्ट्वा तत्पुण्यसञ्चयात् ।।४२।।

ततोऽदर्शयतां तौ तं कैलासं गिरिशालयम् ।
मेरोस्तु शिखरे रम्येऽयुतयोजनविस्तृते ।।४३।।

रविचन्द्रप्रकाशानि हर्म्याणि यत्र भान्ति च ।
यत्र पञ्चाक्षरजपा रुद्राध्यायजपाश्च ये ।।४४।।

अनेकसाधनरता: पुण्यवन्तो व्रजन्ति हि ।
तं दृष्ट्वा प्राह नृपतिर्विनायकप्रसादत: ।।४५।।

दृष्टा: सर्वे देवलोका: पुण्यदा दर्शनान्नृणाम् ।
ततोऽग्रे न रविश्चन्द्र: सहस्रयोजनावधि ।।४६।।

विमानप्रभया याति न च पश्यन्ति किञ्चन ।
मेघनादनिभं शब्दं शुश्राव दु:सहं नृप: ।।४७।।

गिरिवर्यप्रकाशानां भ्रमराणां समन्तत: ।
कस्य शब्द: श्रूयतेऽयमिति पप्रच्छ तौ नृप: ।।४८।।

कदा द्रक्ष्यामि देवस्य पादपद्ममिति स्फुटम् ।
ददर्श पुरतो राजा शक्तिं भ्रामरिकां दृढाम् ।।४९।।

अनेकादित्यसङ्काशां ब्रह्माण्डग्राससाहसाम् ।
प्रसारितमुखां भीमां दृष्ट्वा मूर्च्छामियान्नृप: ।।५०।।

आश्वास्य निन्यतुस्तं तु दूतावग्रे नृपं तदा ।
तत्र आधारशक्तिं स ततोऽप्यतिभयङ्कराम् ।।५१।।

हजार योजन फैलिएको छ । यसका चारैतिर सूर्य र चन्द्रमाका प्रकाश चौबीसै घण्टा प्रकाशित भइरहन्छन् । त्यहाँ विश्वकर्माले बनाएका अनेक थरि मन्दिरहरू रत्न, सुवर्ण र चाँदीको कान्ति फैलाएर चम्किरहेका हुन्छन् । रत्नहरूबाट निस्कने नौरङ्गी किरण अखण्ड रूपमा देखिने हुनाले यहाँ अन्धकारले प्रवेश पाउँदैन ।।४०-४१।। यहाँ भगवान् मधुसूदन लक्ष्मी आदि आफ्ना भक्तजन र परिवारजनका साथमा विराजमान हुनुहुन्छ । आफ्ना पुण्यका प्रतापले वैकुण्ठको दर्शन गर्न पाएकोमा काशिराज निकै खुसी भए ।।४२।। वैकुण्ठको दर्शन गरेपछि अलिकति अगाडि बढेर दूतहरूले राजालाई एक लाख योजन फैलिएको र अत्यन्त रमणीय सुमेरुपर्वतको चुचुरामा अवस्थित कैलासलोक देखाए, जहाँ भगवान् शङ्कर विराजमान हुनुहुन्छ ।।४३।। त्यहाँ सूर्य र चन्द्रमाका प्रकाशबाट अहोरात्र देदीप्यमान भइरहने भवनहरू छन् । **ॐ नम: शिवाय** मन्त्रको जप गर्ने, निरन्तर रुद्री पाठ गर्ने र शिवको भक्ति गर्दै उत्तम साधना गर्ने पुण्यवान् मानिसहरू कैलासलोकमा जान्छन् । कैलासलाई देखेर राजाले भने – 'भगवान् श्रीगणेशका कृपाले आज मैले कैलास देख्न पाएँ र देवलोकहरू पनि दर्शन गरें । जहाँ पुण्य गर्ने मानिसहरूमात्र जान्छन् ।' कैलास लोकपछि एक हजार योजनसम्म सूर्य र चन्द्रमा केही थिएनन्, कतै पनि केही देखिन्नथ्यो, विमान आफ्नो बत्तीको आधारमा अगाडि बढिरहेको थियो । एक हजार योजन अगाडि बढेपछि राजाले मेघको असह्य गर्जन सुने ।।४४-४७।। त्यहाँ चारैतिर पर्वतहरूका प्रकाश देखिएका थिए र भ्रमरगुञ्जन सुनिएको थियो । राजाले दूतहरूलाई सोधे – 'यहाँ कसले के गरेको शब्द सुनिएको छ ? मैले कहिले श्रीगणेशधामको दर्शन पाउँछु ? कहिले भगवान् श्रीगणेशको पाउमा शिर राख्न पाउँछु?' त्यति भन्दाभन्दै राजाले आफ्ना अगाडि भ्रामरिका नामक प्रबल शक्तिको दर्शन गरे ।।४८-४९।। ती शक्ति हजारौं सूर्यझैं चम्किरहेकी थिइन् । तिनमा ब्रह्माण्डलाई एकैचोटि निल्न सक्ने साहस थियो । आफ्नो मुख फैलाइरहेकी र डरलाग्दी भ्रामरिका शक्तिलाई देखेर राजा केही क्षण मूर्च्छित भए ।।५०।। दूतहरूले तिनलाई जगाएर सान्त्वना दिंदै अगाडि बढाए । त्यहाँ भ्रामरिकाभन्दा पनि भयङ्कर आधारशक्तिलाई भ्रामरिकाको शिरमा विराजमान भएकी देखेर राजा कम्पायमान भए । आधार शक्तिका रौंहरू कुटिल थिए, ओठ लामा थिए, जिब्रो फैलिएको

दृष्ट्वा चकम्पे नृपतिर्भ्रामरीं मस्तके स्थिताम् ।
करालकेशां लम्बोष्ठीं दीर्घजिह्वां प्रभायुताम् ।।५२।।

आश्वासितो व्रजन्नग्रे सोऽपश्यत् कामदायिनीम् ।
आधारशक्तिसंविष्टां योजनायुतविस्तृताम् ।।५३।।

भ्रमन्ति पर्वता यस्याः श्वासवायुविवर्तनात् ।
वज्रातिनिष्ठुरैर्देहैर्यस्यास्तिष्ठति सा पुरी ।।५४।।

वदतः स्म नृपं दूतौ पश्य स्वानन्दपत्तनम् ।
यद्ध्यानपरितृप्तोऽसि कोटिसूर्यनिभं शुभम् ।।५५।।

रत्नकाञ्चनसम्भिन्ना भान्ति यत्र गृहाः परे ।
मुक्तारजतसूर्याश्मनिर्मिताश्च सहस्रशः ।।५६।।

नीलाश्मकुट्टिमा यत्र पुमांसो यत्र वह्निभाः ।
वापीकूपतडागाश्च यत्र भान्ति सरांसि च ।।५७।।

स्वच्छशीताम्बुनीलानि पीतरत्नतटानि च ।
यदम्बुपानात्र जरा न क्षुद् रोगो नृणां भवेत् ।।५८।।

आक्रीडा विमला नानावृक्षवल्लीविराजिताः ।
दिव्यौषध्यो दिवा सूर्यकोटिभा भान्ति यत्र च ।।५९।।

चन्द्रपृष्ठे प्रपश्यन्ति कलङ्करहिते मुखम् ।
विलासिनीजना यत्र सर्वदाऽधोगते निशि ।।६०।।

यत्र पुष्पवनामोदः श्रमं हन्ति विहारिणाम् ।
इक्षुसागरतीरं तत् प्राप्योत्तेरुर्मुदा युताः ।।६१।।

थियो र तिनका शरीरबाट प्रभाको पुञ्ज फैलिरहेको थियो । यो दृश्य देखेर राजा अत्तालिए। त्यसपछि दूतहरूले तिनलाई संझाउँदै अगाडि बढाए । त्यहाँ काशिराजले कामदायिनी शक्ति देखे । एक लाख योजन फैलिएको त्यो शक्ति आधारशक्तिमाथि अडिएको थियो ।।५१-५३।। कामदायिनी शक्तिबाट निस्केको हावाका कारण पर्वतहरू कम्पायमान थिए । कामदायिनीका शरीरका अङ्गहरू वज्रभन्दा पनि कठोर थिए ।।५४।। त्यसपछि दूतहरूले भने - 'हे राजन् ! अब भगवान् श्रीगणेशको धाम स्वानन्दभुवन हेर्नुहोस् । करोडौं सूर्यसमान कान्ति भएको र मङ्गलमय यो स्वानन्दभुवन रहेको छ । तपाईं काशीमा बसी जुन भुवनको ध्यान गर्दा तृप्त हुनुहुन्थ्यो त्यो यही हो ।।५५।। यहाँ रत्न र सुवर्णले बनेका हजारौं भवनहरू शोभायमान छन्। मोती, चाँदी र सूर्यकान्त मणिद्वारा बनेका भवनहरू पनि छन्।।५६।। नीलमणि लगाएर यहाँका भवनहरूको भुइँ तयार गरिएको छ। यहाँका पुरुषहरू अग्निझैं ज्योतिर्मय छन् । यहाँ पोखरी, ताल, तलाउ र सरोवरहरू शोभायमान छन् ।।५७।। यहाँका सरोवरहरूमा स्वच्छ, चीसो र निर्मल पानी देखिन्छ । यो तलाउहरूका तटमा रत्नहरू जडित छन् । यहाँका तलाउहरूको पानी पिएपछि वृद्धावस्था आउँदैन, भोक र रोग पनि लाग्दैन।।५८।। यहाँ अनेक वृक्ष र लताहरूद्वारा शोभायमान सुन्दर उद्यानहरू छन् । यिनमा सूर्यको कोटिकोटि कान्ति धारण गर्ने दिव्य औषधिहरू चम्किरहन्छन् ।।५९।। रात परेपछि चन्द्रमा धर्तीमा झुकेर आउँदा यहाँका विलासिनी सुन्दरीहरूले निष्कलङ्क चन्द्रमालाई दर्पण मानेर त्यसमा आफ्नो मुख हेर्ने गर्छन् ।।६०।। यहाँका पुष्पवनको सुगन्धले विहार गरिरहेका युवा-युवतीहरूको थकाई मेट्ने काम गर्दछ। यसरी दूतहरूले काशिराजलाई स्वानन्दभुवन पुऱ्याए । इक्षुसागरको तीरमा रहेको त्यो स्वानन्दभुवन देखेर ती सबै प्रसन्न भए ।।६१।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे स्वानन्दभुवनप्राप्तिवर्णनं नाम द्विपञ्चाशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'काशिराजको स्वानन्दभुवनमा प्राप्ति' शीर्षकान्वित बाउन्नौं अध्याय पूर्ण भयो ।।५२।।

ॐ

## त्रिपञ्चाशोऽध्यायः { ५३ अध्याय }

ब्रह्मोवाच

पपुरिक्षुरसं पुण्यनिचयैर्लभ्यमञ्जसा।
तन्मध्ये पद्मिनी श्वेता सहस्त्रदलपद्मयुक् ।।१।।

महस्त्रकिरणप्रख्यं तस्यां यत् पद्ममुत्तमम् ।
तन्मध्ये तस्य देवस्य पर्यङ्कोऽतिमनोहरः।।२।।

दिव्यास्तरणसम्पन्नो दिव्यधूपैः सुधूपितः।
दिव्यनानाकुसुमवान् स्वप्रभै रत्नसञ्चयैः।।३।।

भासयन् प्रभया सर्वा दिशो विदिश एव च ।
व्यजनैर्वीज्यमानः स तत्र शेते विनायकः ।।४।।

कोटिचन्द्रनिभो नानालङ्कारो नागभूषणः।
रम्भास्तम्भनिभं शुण्डादण्डं रदनसुन्दरम् ।।५।।

दधद् दिव्याम्बरच्छन्नो भालनेत्रः किरीटवान् ।
कुण्डले चाङ्गदे मुद्रां कटिसूत्रं महाधनम् ।।६।।

सिद्धिबुद्धी सिद्धिहेतू पादौ संवहतोऽस्य ह।
अणिमागरिमाश्वेतचामरैर्वीजितः स्म ह ।।७।।

ज्वालिनी तेजिनी दीप्यमाने चोभयतः स्थिते।
दिव्यगन्धेन लिप्ताङ्गो दिव्यमालाविभूषितः ।।८।।

महिमा प्रथिमादाय स्थिते दृष्टिसमीपतः।
जलं गण्डूषपात्रञ्च छत्रं काञ्चनरत्नयुक्।।९।।

ततो दूतौ करे धृत्वा तं नृपं पुरतोऽस्य तु ।
ईक्षेते वागवसरं ततो देवोऽन्वबुध्यत।।१०।।

**ब्रह्माजीले भन्नुभयो -** इक्षुसागरको तीरमा रहेको इक्षुरसपुरलाई धेरै पुण्यकर्म गरेर मात्र प्राप्त गर्न सकिन्छ । इक्षुरसपुरको माझमा एक हजार पात भएका कमलहरूले युक्त सेतो कमलको लता रहेको छ ।।१।। त्यसमा फुल्ने प्रत्येक कमल सूर्यझैं चम्किला छन् । ती कमलहरूकै माझमा भगवान् श्रीगणेशको अत्यन्त राम्रो पलङ बिछ्याइएको छ।।२।। त्यसमा बिछ्याइएका वस्त्रहरू अत्यन्त मूल्यवान् छन् । पलङको वरिपरि दिव्य धूपहरूको सुगन्ध चलिरहेको हुन्छ। त्यहाँ अत्यन्त राम्रा फूलहरू राखिएका छन् र रत्नहरूबाट निस्किएका किरणहरूले भगवान् श्रीगणेशको शय्या प्रकाशमान भएको हुन्छ । त्यस प्रकाशले चारै दिशालाई चहकिलो तुल्याइरहेको हुन्छ । त्यस शय्यामा आफ्ना गणहरूद्वारा सेवा गरिएका भगवान् श्रीगणेश शयन गर्नुहुन्छ ।।३-४।। भगवान् श्रीगणेश करोडौं चन्द्रमासमान कान्तिले ज्योतिर्मय हुनुहुन्छ। उहाँले अनेक थरि अलङ्कार धारण गर्नुभएको छ र घाँटीमा नागको माला लगाउनु भएको छ । उहाँको सूँढ केराको स्तम्भजस्तै शोभायमान छ र दाँत अत्यन्त राम्रो देखिन्छ ।।५।। दिव्य वस्त्र लगाउनुभएका, निधारमा ज्ञाननेत्र धारण गर्नुहुने, किरीटधारी भगवान् श्रीगणेशले कानमा कुण्डल, भुजामा केयूर, कम्मरमा कटिसूत्र धारण गर्नुभएको छ ।।६।। भगवान्का पत्नी सिद्धि र बुद्धिले भगवान् श्रीगणेशको पाउ दबाइरहनु भएको छ । अणिमा, गरिमा आदि सिद्धिहरूले सेतो चमर डुलाएर भगवान्लाई पङ्खा हम्किरहेका छन्। ज्वालिनी र तेजिनी नामक दुई शक्ति भगवान्का वरिपरि उभिएका छन् । शरीरमा दिव्य गन्धको लेपन गर्नुहुने, दिव्यमाला धारण गर्नुहुने भगवान्को दृष्टिका सामु महिमा र प्रथिमा नामक शक्तिहरू रहेका छन् । तिनले भगवान्का लागि जलपात्र, थूकदानी, सुवर्ण एवं रत्नले बनेको छाता धारण गरिरहेका छन् ।।७-९।। भगवान् यसरी विराजमान हुनुभएको बेला भगवान्का दूत आमोद र प्रमोदले काशिराजलाई हातमा समातेर भगवान्का सामु लगे । भगवान् कतिबेला बोल्नुहुन्छ भनेर उभिइरहेका दूतहरूलाई जानेर

तौ दूतावूचतुर्देवमानीतोऽयं तवाज्ञया।
प्रणम्य च स्थितौ दूरं तदाज्ञापेक्षकावुभौ ।।११।।

तस्मिन् प्रबुद्धे राजा स प्रणनाम कृताञ्जलिः।
उवाच परमप्रीत्या धन्यो वंशो ममाद्य ह।।१२।।

पितरौ जन्म विद्या च तपो दृष्टिः सुतादयः।
येन मे दर्शितं ब्रह्मध्येयं पदयुगं तव।।१३।।

न ब्रह्मलोके कैलासे शक्रलोकेऽपि वैभवः।
एतादृशोऽदर्शि मया नान्यलोकेऽपि कश्चन।।१४।।

दूतावूच आस्यतां स ततस्तौ च निषेदतुः।
ततोऽपश्यद् बालरूपं द्विभुजं स विनायकम् ।।१५।।

येन तौ निहतौ दैत्यौ देवान्तकनरान्तकौ ।
अतिगौरं कोमलाङ्गं हिमकर्पूरसन्निभम् ।।१६।।

न शशाक तदा वक्तुं बाष्परुद्धमहागलः।
आनन्दाश्रुनदीपूरैरासिञ्चँस्तत्पदद्वयम् ।।१७।।

विज्ञाय तन्महाभक्तिमुत्थाप्यालिङ्ग्य विघ्नराट् ।
मूर्ध्न्याघ्रातश्च पितृवद् बहुकालगतः सुतः।।१८।।

देवोऽपि बाष्पकण्ठोऽभूदुभौ रोमाञ्चसंयुतौ।
उभौ सुखाब्धिसंमग्नौ देहातीतौ यथा मुनी।।१९।।

भगवान् जाग्नुभयो । त्यसपछि ती दूतहरूले भने- 'प्रभु! हजुरको आज्ञाले हामीले काशिराजलाई लिएर आएका छौं ।' यसरी निवेदन गरेर भगवान् श्रीगणेशले के आज्ञा गर्नुहुन्छ भनी प्रतीक्षा गरिरहेका ती दूतहरू भगवान्लाई प्रणाम गरी उभिइराखे ।।१०-११।। भगवान् श्रीगणेशले राम्ररी आँखा खोल्नु भएपछि हात जोडिरहेका काशिराजले पनि भगवान्लाई प्रणाम गरेर आफ्नो भाव व्यक्त गर्दै भने - 'आज मेरो वंश धन्य भएको छ र माता-पिता पनि धन्य हुनुभएको छ । मेरो जन्म, मैले अध्ययन गरेको विद्या, मैले गरेको तपस्या, मेरो आँखाको हेर्ने शक्ति, मेरा छोराछोरीहरू र मेरो पूरा परिवार सबै आज धन्य भएका छन्, किनकि मैले आज ब्रह्माद्वारा ध्यान गरिने हजुरका चरणयुगलको दर्शन पाएको छु ।।१२-१३।। ब्रह्मलोक, कैलास, इन्द्रलोक र अरू कुनै लोकमा पनि जुन वैभव छैन त्यो वैभव मैले यहाँ नजर गरेको छु ।।१४।।' भगवान् श्रीगणेशले दूतहरूलाई बस्न आज्ञा दिनुभएपछि दूतहरू पनि आसनमा बसे । काशिराजले त्यस बेला बालरूपमा रहनुभएका दुई हात धारण गर्नुहुने भगवान् श्रीगणेशको दर्शन पाए ।।१५।। जुन भगवान् गणेशले देवान्तक र नरान्तकको वध गर्नुभएको थियो त्यस्ता बालरूप भगवान् श्रीगणेशको वर्ण गोरो थियो, सम्पूर्ण अङ्ग-प्रत्यङ्ग कोमल थिए र उहाँ हिउ एवं कपूरजस्तै सेतो कान्तिले सुहाउनुभएको थियो । काशिराजको हृदयमा भाव र भक्ति बढेर आउँदा हर्षका आँसु खसे, घाँटी रोकियो र आनन्दातिरेकले केही पनि बोल्न सकेनन्। खालि हर्षका आँसुको धारा बगाएर त्यसबाट तिनले भगवान् श्रीगणेशका पाउ पखालिरहेका थिए । भगवान् श्रीगणेशले पनि तिनको ठूलो भक्तिलाई जानेर उठाउनुभयो र आलिङ्गन गर्नुभयो । पिताले धेरै दिनपछि घर आएका छोराको शिरमा सुँघेझैं भगवान् श्रीगणेशले पनि काशिराजको शिरमा सुँघ्नुभयो ।।१६-१८।। आफ्ना भक्तको तरल अवस्था देखेर भगवान् श्रीगणेशले पनि हर्षका आँसु बगाउनुभयो । त्यस बेला भगवान् र भक्त दुबै रोमाञ्चित थिए र दुबै सुखको सागरमा डुबुल्की मार्दै थिए। दुबैले देहभाव बिर्सेर आत्माको आनन्दमा गोता लगाइरहेका थिए । ब्रह्मप्राप्ति हुँदा एउटा मुनिको जुन अवस्था हुन्छ त्यो त्यहाँ देखियो ।।१९।। केही

उवाच वचनं पश्चाद् बालरूपी विनायकः।
त्वद्गृहेऽनेकधा तात ! क्रीडता यत् कृतं मया।।२०।।

तत् क्षान्तं हि त्वया सर्वं शुभं वा यदि वाऽशुभम् ।
निहता बहवो दैत्या धराभारश्च संहृतः।।२१।।

पालिताः साधुलोकाश्च स्थापिता धर्मसेतवः।
तवाज्ञया पुनर्यातः कश्यपं सृष्टिकारकम् ।।२२।।

प्रणम्य तं निजं लोकं प्राप्तोऽमुं सर्ववैभवम् ।
त्वामेव परिचिन्त्याहं विश्रान्तिं न लभे क्वचित् ।।२३।।

तवादिभावं ज्ञात्वाऽहं मुद्गलं मुनिपुङ्गवम् ।
अप्रेषयं तव गृहे तदनुग्रहतस्त्वया।।२४।।

प्राप्तं स्थानं मुद्गलेन भक्तेनेदं त्वयाऽपि च ।
यदगम्यं सदा दैवैर्ब्रह्माद्यैर्मुनिपुङ्गवैः।।२५।।

क उवाच

पीत्वा वागमृतं तस्य नृपो नत्वा पुनःपुनः।
उवाच धैर्यमालम्ब्य तुष्टाव च यथामति।।२६।।

नृप उवाच

नमामि ते नाथ पदारविन्दं
ब्रह्मादिभिर्ध्येयतमं शिवाय ।
यत्पद्मपाशासिपरश्वधादि-
(सु)चिह्नितं विघ्नहरं निजानाम् ।।२७।।

यदर्च्यते विष्णुशिवादिभिः सुरै-
रनेककार्यार्थकरैर्नरैश्च ।
अनेकशो विघ्नविनाशदक्षं
संसारतप्तामृतवृष्टिकारि ।।२८।।

नमामि ते नाथ मुखारविन्दं
त्रिलोचनं वह्निरवीन्दुतारम् ।
कृपाकटाक्षामृतसेचनेन
तापत्रयोन्मूलनदृष्टशक्ति।।२९।।

समयपछि बालकरूप भगवान् श्रीगणेशले काशिराजलाई भन्नुभयो- 'हे राजन्! काशीवासको समयमा तपाईंको घरमा रहँदा बालकहरूका साथ बालक्रीडा गर्दा मैले राम्रो-नराम्रो गरेकोमा तपाईंले क्षमा दिनुभयो । तपाईंकै घरमा रहँदा मैले धेरै दैत्यहरू मारें र पृथिवीको भार हलुका बनाएँ । त्यस बेला मैले सज्जनहरूको रक्षा गरें र धर्मका पुल बाँधें । त्यसपछि तपाईंसँग आज्ञा लिएर प्रजापति कश्यपको घरमा फर्केको थिएँ ।।२०-२२।। त्यहाँ केही दिन बसी पितालाई प्रणाम गरेर बिदाबादी भई अनन्त वैभवले सम्पन्न मेरो धाम स्वानन्दभुवनमा आएको छु । यहाँ आउँदा पनि हे काशिराज! मैले तपाईंकै संझना गरिरहेको थिएँ । तपाईंलाई देख्न नपाउँदा छटपटिन्थें । तपाईंकै संझनाको कारण मैले कहिल्यै शान्ति पाइनँ । तपाईंको भक्तिभावलाई राम्ररी जानेर मैले मुद्‌गल ऋषिलाई त्यहाँ पठाएको थिएँ । तिनको आर्शीर्वादबाट तपाईंले यो स्थान प्राप्त गर्नुभयो र मेरा भक्त ऋषि मुद्‌गल पनि यहीं नै आएका छन् । यो स्थान ब्रह्मा आदि देवता र ठूला-ठूला ऋषिहरूका निम्ति पनि अगम्य र दुर्लभ छ ।।२३-२५।।'

**ब्रह्माजीले भन्नुभयो**- भगवान् श्रीगणेशका मुखारविन्दबाट निस्केका वचनामृत पान गरेर पुलकित भएका काशिराजले भगवान्‌लाई प्रणाम गर्दै धैर्यपूर्वक आफ्नो बुद्धिअनुसार भगवान्‌को स्तुति गरे ।।२६।।

**काशिराजले भने** - 'हे नाथ ! म ब्रह्मा आदि देवताहरूद्वारा ध्यान गरिने हजुरका चरणकमलमा सर्वमङ्गलका लागि प्रणाम गर्दछु । हजुरको चरणकमल पद्म, पाश, खड्‌ग, परशु आदि आयुधहरूले सम्पन्न छ र भक्तहरूको विघ्नहरण गर्न समर्थ छ।।२७।। जुन चरणकमलको ब्रह्मा, विष्णु, शिव आदि देवता र अनेक थरि साधना गर्ने मानिसहरूले पूजन गर्दछन् त्यो हजुरको चरणकमल कोटिकोटि विघ्न नाश गर्न समर्थ छ । हजुरको चरणकमल संसारमा जन्मेर तापैतापले आत्तिएका नर-नारीहरूका मनमा अमृत बर्साउने पुण्यमय साधनका रूपमा रहेको छ । हजुरको महिमामय चरणकमलमा म बारबार प्रणाम गर्दछु ।।२८।। हे भगवन् ! अग्नि, तारा, सूर्य र चन्द्रमाको ज्योतिले सम्पन्न, तीन आँखाले सुहाएको हजुरको मुखकमलमा म प्रणाम गर्दछु । हजुरको त्यो मुखकमल कृपाकटाक्षको

नमामि ते नाथ करारविन्द-

मनेकहेतिक्षतदैत्यसङ्घम् ।

अनेकभक्ताभयदं सुरेश !

संसारकूपोत्तरणावलम्बम् ।।३०।।

त्वमेव सत्त्वात्मतया बिभर्षि

सृजस्यजो राजसतामवाप्य ।

तमोगुणाधारतया च हंसि

चराचरं ते वशगं गणेश ।।३१।।

यः शुद्धचेता भजतेऽनिशं त्वा-

माक्रम्य विघ्नान् परिधावसि त्वम् ।

स त्वां वशे कृत्य सुखं हि शेते

वत्सं यथा गौरिव धावसि त्वम् ।।३२।।

येऽन्ये भजन्तः समवाप्य तापान्

संसारचक्रे बहुधा भ्रमन्तः।

कदापि तेऽनुग्रहमाप्य तेऽपि

भजन्ति मानुष्यमवाप्य तेऽपि ।।३३।।

धराराजः कोऽपि मिमीत नाके

तारागणं वारिमुचाञ्च धाराः।

नालं गुणानां गणनां हि कर्तुं

शेषो विधाता तव वर्षपूगैः।।३४।।

निराकृतेस्ते यदि नाकृतिः स्या-

दुपासनाकर्मविधिर्वृथा स्यात् ।

गुणप्रपञ्चः प्रकृतेर्विलासो

जनस्य भोगश्च तथा कथं स्यात् ।।३५।।

अमृतसेचन गरेर भक्तहरूका तीनै किसिमका सन्ताप निर्मूलन गर्न समर्थ छ ।।२९।। हे नाथ ! हजुरको करकमलमा प्रणाम गर्दछु । हजुरको यो करकमल दैत्यहरूसँग सङ्ग्राम गर्दा शस्त्रसञ्चालनका कारण बन्न गएका ठेलाहरूले सुहाएको छ, अनेक भक्तहरूलाई अभयदान दिन निपुण छ र संसाररूपी कुवाबाट पारि जानका लागि अनुपम अवलम्बनका रूपमा रहेको छ ।।३०।। हे श्रीगणेश ! हजुरले नै सत्त्वगुण अँगालेर संसारका प्राणीहरूको रक्षा गर्नुहुन्छ, रजोगुण अँगालेर संसारको सृष्टि गर्नुहुन्छ र तमोगुण अँगालेर चराचरमय विश्वको संहार गर्नुहुन्छ । हे श्रीगणेश ! सम्पूर्ण चराचर हजुरको वशवर्ती भएर रहेको छ ।।३१।। जुन मानिसले चित्तलाई शुद्ध गराएर रातदिन हजुरको भजन गर्दछ त्यस भक्तमाथि विपत्ति आइलाग्दा त्यसको निवारण गर्न हजुर दौडेर त्यहाँ पुग्नुहुन्छ। हजुरका भक्तहरूले हजुरलाई आफ्नो वशमा बनाएर आनन्दपूर्वक जीवनयापन गर्दछन् र सुखपूर्वक निदाउँछन् । हजुरले गाईले बाच्छाको रक्षा गरेझैं आफ्ना भक्तको रक्षा गर्नुहुन्छ र त्यसका निमित्त दौडनुहुन्छ ।।३२।। संसारमा जन्म लिएर अनेक थरि तापले सन्तप्त भई सुख-दुःख, आँसु-हाँसोका साथ व्यवहारमा भौतारिइरहेका मानिसहरूले जुन बेला हजुरको भजन गर्दछन् त्यस बेला तिनीहरूले हजुरको कृपा पाउँछन् र अर्को जन्ममा उत्तम परिवारमा जन्म लिएर हजुरको गुणगान गर्दछन् ।।३३।। के कुनै मानिसले धर्तीको धूलो गन्न सक्छ ? के आकाशका तारा कति छन् भन्न सक्छ ? के बादलले बर्साउने वृष्टिधारा यति छ भनेर कसैले बताउन सक्छ ? कुनै दिन ती कुरा सम्भव भए पनि हजुरका महिमाको वर्णन गर्न शेषनाग र ब्रह्माजीसमेत कोटिकोटि वर्षमा पनि समर्थ हुनुहुन्न ।।३४।। हजुर निराकार हुनुहुन्छ । हजुरको वास्तविक स्वरूप निराकार नै हो तर यदि हजुर भक्तहरूमाथि दया गर्न साकार बन्नु हुँदैनथ्यो भने भक्तले गर्ने उपासना र कर्मका विधान व्यर्थ हुने थिए । हजुर निराकाररूपमै रहनुभएको भए सत्त्व, रज र तमोगुणको विस्तारबाट हुने यो संसारप्रपञ्च देखिँदैनथ्यो, प्रकृतिको विलास हुँदैनथ्यो र नर-नारीहरूको भोगविलासमय संसारको पनि अस्तित्व हुने थिएन)।।३५।।(यदि जीवनमा

सत्सङ्गतिश्चेत् सदनुग्रहः स्यात्
सत्कर्मनिष्ठा सदनुस्मृतिश्च ।
चित्तस्य शुद्धिर्महती कृपा ते
ज्ञानं विमुक्तिश्च न दुर्लभा स्यात् ।।३६।।

उत्तम मानिसको सङ्गति प्राप्त हुन्छ, उत्तम सज्जनहरूको आशीर्वाद प्राप्त गरिन्छ, उत्तम कर्ममा आस्था राखिन्छ र उत्तम वस्तुहरूको स्मरण गरिन्छ भने त्यस अवस्थामा चित्तको शुद्धि हुन्छ र हजुरको कृपा पनि प्राप्त हुन्छ । हजुरको कृपा प्राप्त भएपछि उत्तम ज्ञान प्राप्त हुन्छ । ज्ञान प्राप्त गर्ने साधकलाई मुक्ति दुर्लभ हुँदैन ।।३६।।

क उवाच

इति स्तोत्रं समाकर्ण्य परितुष्टो विनायकः।
उवाच काशिराजं स वरं वृणु हृदि स्थितम् ।।३७।।

**ब्रह्माजीले भन्नुभयो** – काशिराजद्वारा गरिएको यो स्तुति सुनेर भगवान् श्रीगणेश सन्तुष्ट हुनुभयो र उहाँले काशिराजलाई भन्नुभयो – 'तपाईँका मनमा के कामना रहेका छन्, भन्नुहोस् ? म वर दिन्छु ।।३७।।'

नृप उवाच

ज्ञातं वरस्य कृत्यं मे यत्राहं हि समागतः ।
इतः पुनर्जन्ममृती न स्यातां तद् विधीयताम् ।।३८।।

**काशिराजले भने**- 'हे प्रभु! मलाई कुनै वरदान चाहिंदैन। हजुरको धाममा आएपछि अरू कुन कुराको आवश्यकता बाँकी रहन्छ र ? अब मलाई जन्मनु र मर्नु नपरोस् । हजुरले यत्ति मात्र कृपा गर्नुहोस् ।।३८।।'

क उवाच

स्तोत्रेण प्रीतस्तं प्राह तथेति दिव्यदेहिनम् ।
स्थापयामास निकटे कल्पकोटियुगावधि ।।३९।।

मुने ! स्तोत्रं मया तस्मात् प्राप्तं तस्य प्रसादतः।
नारदाय मया प्रोक्तं नारदो गौतमाय च।।४०।।

आह सोऽपि मुनीन् सर्वान् सर्वकामफलप्रदम् ।
ज्ञानदं मोक्षदं विघ्ननाशनं पावनं परम् ।।४१।।

यः पठेत् स लभेद् भक्तिं गणेशसन्निधौ नरः।
विद्याकामो लभेद् विद्यां त्रिसन्ध्यं यः पठेन्नरः।।४२।।

पुत्रकामो लभेत् पुत्रान् जयकामो लभेज्जयम् ।
एवं सर्वं समाख्यातं यद् यत् पृष्टं त्वया मुने ।।४३।।

आख्यानं काशिराजस्य किमन्यच्छ्रोतुमिच्छसि ।

**ब्रह्माजीले भन्नुभयो** - काशिराजको स्तुतिबाट प्रसन्न हुनुभएका भगवान् श्रीगणेशले दिव्यदेह धारण गर्ने काशिराजलाई तथास्तु भनी करोडौं कल्पसम्म आफ्नो नजिकमा राख्नुभयो ।।३९।। भगवान् श्रीगणेशको कृपाबाट मैले यो स्तोत्र प्राप्त गरेको हुँ । त्यसपछि मैले नारदजीलाई यो स्तोत्रको उपदेश गरें । नारदजीले यो स्तोत्र गौतमलाई सुनाए । गौतम ऋषिले पनि सबै कामना पूरा गराउने यो स्तोत्र सबै जिज्ञासु ऋषिहरूलाई सुनाएका थिए । वास्तवमा काशिराजले बनाएको यो स्तोत्र ज्ञानदायक, मोक्षदायक, विघ्ननाशक र परम पावन छ ।।४०-४१।। जसले श्रद्धापूर्वक यस स्तोत्रको पाठ गर्दछ त्यसले श्रीगणेशको उत्तम भक्ति प्राप्त गर्छ र अन्तमा श्रीगणेशको समीपमा गएर शोभायमान हुन्छ । यस स्तोत्रको पाठबाट विद्याको कामना गर्ने विद्यार्थीले विद्या प्राप्त गर्दछ । प्रातःकाल, मध्याह्नकाल र सायंकालमा जसले यस स्तोत्रको पाठ गर्दछन् ती भक्तहरूका सबै कामना परिपूर्ण हुन्छन् ।।४२।। छोराको कामना गर्नेले छोरा जन्माउँछ र विजयको कामना गर्नेले विजय प्राप्त गर्दछ । हे वेदव्यास ! मैले तपाईँलाई काशिराजको कथा सुनाएँ । अब के सुन्न चाहनुहुन्छ?

भृगुरुवाच

इति श्रुत्वा ब्रह्मवाक्यं व्यासो निःसंशयो गिरा ।।४४।।
पुनः पप्रच्छ सुमतिर्विस्तरेण कथान्तरम् ।

**भृगुले भन्नुभयो** - ब्रह्माजीका यी कुरा सुनेर व्यासका सन्देहको निवारण भए तापनि बुद्धिमान् व्यासले ब्रह्माजीसँग श्रीगणेशसम्बन्धी अरू कथा सुन्न जिज्ञासा गर्दै भन्नुभयो ।

व्यास उवाच

शुक्लस्यातिदरिद्रस्य हृतं दारिद्र्यमादरात् ।।४५।।

भुक्त्वा कदन्नं तद्गेहे काशिराजं समेत्य च।
किञ्चकार स देवोऽपि काशिराजश्च तद्वद ।।४६।।

कथं तौ निहतौ दैत्यौ भूभारश्च कथं हृतः।
स्थापितश्च कथं धर्मस्तन्मे शंस यथाविधि।।४७।।

क उवाच

कथयामि समासेन चरितं बालरूपिणः।
हत्वा शुक्लस्य दारिद्र्यं यद् यत् तेन कृतं मुने ।।४८।।

**व्यासले भन्नुभयो**- 'हे विधाता ! काशी पुरीको नजिकमा झुपडी बनाएर बस्ने शुक्ल ब्राह्मण दरिद्र थिए । तिनको दरिद्रतालाई भगवान्ले तिनका घरमा रुखासुखा भोजन गरेर हरण गर्नुभयो ।।४३-४५।। त्यसपछि काशिराजका घरमा फर्किएर काशिराज र श्रीगणेशले के के काम गर्नुभयो ? भगवान् श्रीगणेशले नरान्तक र देवान्तकलाई कसरी मार्नुभयो? पृथिवीको भार कसरी हरण गर्नुभयो र कसरी धर्मको स्थापना गर्नुभयो ? यी कुराहरूको उत्तर दिनुहोस् ।।४६-४७।।'

**ब्रह्माजीले भन्नुभयो** - हे मुनिवर ! म बालरूपी श्रीगणेशको चरित्र संक्षेपमा बताउँछु र उहाँले शुक्लब्राह्मणको दरिद्रता निर्मूलन गरेर के के लीला गर्नुभयो भन्ने कुरा पनि बताउँछु ।।४८।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे स्वानन्दप्राप्तस्य काशिराजस्य श्रीगणेशदर्शनं नाम त्रिपञ्चाशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'स्वानन्दभुवनमा प्राप्त काशिराजद्वारा श्रीगणेशको दर्शन' शीर्षकान्वित त्रिपन्नौं अध्याय पूर्ण भयो ।।५३।।

ॐ

## चतुःपञ्चाशोऽध्यायः { ५४ अध्याय }

क उवाच

भुक्त्वा शुक्लगृहे देवो यावत् क्रीडति चत्वरे।
क्षणं सुष्वाप मध्ये स ततो नागरिका जनाः।।१।।

भोजनाय समारम्भं कृत्वा मुनिसुतस्य च ।
काशिराजगृहं तावदाकारयितुमागताः ।।२।।

अनूचे काशिराजस्तु क्रीडन् क्रीडन्नितो गतः।
मृगयन्ति स्म ततो लोका गृहे गृहे विनायकम् ।।३।।

शुक्लस्य स गृहं यात इति केचित् समूचिरे ।
ततो जना निनिन्दुस्तं देवं शुक्लमकिञ्चनम् ।।४।।

जना ऊचुः

उष्ट्रस्तु कण्टकान् भुङ्क्ते हित्वा कोमलपल्लवान् ।
अस्मानाढ्यान् विहायासौ दरिद्रस्य गृहं गतः ।।५।।

वृथैवेश्वरतां नीतो राज्ञा बालो यदीश्वरः।
स्वादयञ्चेत् तदा कुर्यात् सन्तुष्टिं सर्वचेतसाम् ।।६।।

कदन्नं तदपि स्वल्पं कथं भोक्ष्यति बालकः।
केचित् सत्पुरुषास्तेषु तमानयितुमुत्सुकाः।।७।।

इतस्ततः प्रधावन्ति विज्ञातुं तं विनायकम् ।
पप्रच्छुर्मार्गगाँल्लोकान् क्वचिद् दृष्टो विनायकः।।८।।

दृष्ट्वा पृष्ट्वा व्रजन्ति स्म जनास्तद्भक्तितत्पराः।
केचिदूचुः शुक्लगृहं गतः स्यादिति तान् प्रति।।९।।

ते शीघ्रं तद्गृहं याता ज्ञात्वा सुप्तं विनायकम् ।
अतिष्ठन् सात्त्विकास्तूष्णीं प्रबुद्धः स्याद् यदा विभुः।।१०।।

तदैनं प्रार्थयामेति राजसास्तु तमब्रुवन् ।
उत्तिष्ठ याहि रे भोक्तुमन्नं पर्युषितं भवेत् ।।११।।

**ब्रह्माजीले भन्नुभयो -** शुक्ल ब्राह्मणको घरमा भोजन गरेर एक छिन श्रीगणेश आँगनमा खेल्नुभयो । खेलेपछि थकाइ लागेर आँगनको बीचमै सुतिरहनु भएको थियो । त्यसै बेला नागरिकहरू आ-आफ्ना घरमा भोजन तयार गरेर भगवान् श्रीगणेशलाई बोलाउन काशिराजको घरमा आए । काशिराजले भने - 'श्रीगणेश यतै खेल्दै हुनुहुन्थ्यो, यहाँबाट यसो लाग्नुभएको हो ।' उनले त्यसो भनेपछि मानिसहरू घर-घरमा श्रीगणेशको खोजी गर्दै गए । कसैले श्रीगणेश शुक्ल ब्राह्मणका घरमा जानुभएको छ भनेको सुनेर ती मानिसहरूले श्रीगणेश र शुक्ल ब्राह्मणको निन्दा गरे ।।१-४।।

**मानिसहरूले भने -** 'जसरी ऊँटले कोमल पालुवा छोडेर काँडा खाने गर्छ त्यसैगरी विनायक पनि हामीजस्ता सम्पन्न मानिसहरूका घरमा नआई दरिद्र शुक्ल ब्राह्मणका घरमा जानुभएको छ ।।५।। काशिराजले पनि एउटा सानो बालकलाई व्यर्थमै ईश्वर मानेका छन् । यदि ती ईश्वर हुन्थे भने तिनले सबैलाई सन्तुष्ट तुल्याउने थिए ।।६।। शुक्ल ब्राह्मणका घरमा पाकेको नमीठो अन्न ती बालकले कसरी खालान्? खाए पनि थोरैमात्र खान सक्लान्।' ती नागरिकहरूमध्ये केही सज्जन पनि थिए । तिनले भने निन्दा गरेनन् । बरू ती त शुक्ल ब्राह्मणको घरमा गएर उहाँलाई ल्याउनुपर्छ भन्दै थिए ।।७।। अरू मानिसहरू श्रीगणेशको जानकारी लिन यताउति दौडिरहेका थिए । बाटामा वटुवाहरूसँग तपाईंले श्रीगणेशलाई देख्नुभयो भन्दै भक्तिले तत्पर भएका मानिसहरू बाटामा सोध्दै-सोध्दै अगाडि बढिरहेका थिए। केही मानिसहरूले तिनीसँग भगवान् श्रीगणेश शुक्ल ब्राह्मणको घरको गएको हुनुपर्छ भने ।।८-९।। वटुवाहरूका ती कुरा सुनेर काशीका नागरिकहरू दौडी दौडी शुक्लको घरमा गए। त्यहाँ भगवान् श्रीगणेश आँगनमा मस्त निदाइरहनु भएको थियो । त्यस बेला सात्त्विक प्रकृतिका भक्तहरू धैर्यसाथ चुप लागेर बसे। भगवान् जाग्नुभएपछि कुरा गरौंला भनिरहेका थिए । तर रजोगुण भएका भक्तहरूले यिनको प्रार्थना गरेपछि जाग्लान् भनेर स्तुति गर्दै भने - 'ए बालक उट्नुहोस्, भोजन गर्ने बेला भयो, विलम्ब भएमा अन्न बासी हुनेछ।।१०-११।।

त्वदर्थं नगरे लोकाः कोलाहलं प्रकुर्वते।
दरिद्रस्यास्य शुक्लस्य शुक्लभिक्षारतस्य ह।।१२।।

पर्याप्तिश्चास्य भिक्षाया जायते न कदाचन।
पिबति न जलं कोऽपि तस्य गेहे कथं भवान् ।
भुक्तवान् कुत्सितञ्चान्नं कश्यपस्यात्मजोऽपि सन् ।।१३।।

केचित् तं विविधैर्वाक्यैर्निनिन्दुस्तुष्टुवुः परे ।

मुनिरुवाच

एवं श्रुत्वा सर्ववाक्यमुवाच कश्यपात्मजः।।१४।।

देव उवाच

भक्त्योपपादितञ्चान्नं भुक्तमद्य यथेच्छतः।
पदमात्रं हि गन्तुं मे शक्तिस्तृप्तस्य नास्ति च।।१५।।

ग्रासमात्रं हि भोक्तुं मे वाञ्छा नास्त्यधुना जनाः ।

क उवाच

एवं निष्ठुरतां ज्ञात्वा जनास्ते विरसास्तदा ।।१६।।

ऊचुः परस्परं केचित् कर्तव्यं किं हि बालके।
सोऽपि विह्वलतां ज्ञात्वा पुरवासिजनस्य ह ।।१७।।

एकोऽनन्तत्वमापेदे घटाकाश इव क्षणात् ।
जलकुम्भगतो यद्वत् सविताऽनेकरूपवान् ।।१८।।

प्रतिगृहं गतो नानाक्रीडासक्तोऽभवद् विभुः।
क्वचित् सोपानमार्गेषु क्वचिद् दोलागतोऽपि च।।१९।।

क्वचिच्च पर्यङ्कगतः क्वचित् सौधगतोऽपि च ।
क्रीडते हसते क्वापि गृहबालैर्भुनक्ति च ।।२०।।

अध्येति क्वापि शास्त्राणि पाठयत्यपि कुत्रचित् ।
तं दृष्ट्वा स्वगृहं यातं काशिराजेन संयुतम् ।।२१।।

तपाइँ नआउनु भएको हुँदा नगरमा मानिसहरू कोलाहल गरिरहेका छन् । तपाइँ दरिद्र शुक्लको घरमा आउनुभएछ । यी बिचरा ब्राह्मण भिक्षा मागेर साँझ-बिहानको छाक टार्ने गर्छन् । यिनले भिक्षा माग्दा पूरा अन्न पाउँदैनन् । यिनले बनाएको भोजन कति भयो होला ? के खानुभयो होला ? यिनलाई कङ्गाल ठानेर कुनै पनि मानिस यिनका घरमा आएर पानी पनि खाँदैनन् । तपाइँ त कश्यप ऋषिका छोरा हुनुहुन्छ। यिनका घरको नमीठो अन्न कसरी खानुभयो ? ।।१२-१३।।' यसरी अनेक थरि कुरा गरेर केही मानिसले भगवान्‌को निन्दा गरे भने केही मानिसले स्तुति पनि ।

**मुनिले भने-** यी सबैका सबैथरिका कुरा सुनेर कश्यपका छोरा भगवान्‌ले भन्नुभयो ।।१४।।

**श्रीगणेशले भन्नुभयो -** 'शुक्ल ब्राह्मणले मलाई भक्तिपूर्वक राम्रो भोजन खुवाएका छन् र मैले इच्छाअनुसार खाएको छु । म यति अघाएको छु कि एक पाइला हिंड्न पनि मेरो शक्ति छैन ।।१५।। हे मानिस हो ! तपाइँहरू भोजन गर्न हिंड्नुहोस् भन्नुहुन्छ तर मलाई अहिले एक गास पनि खाने मन छैन ।'

**ब्रह्माजीले भन्नुभयो -** भगवान् श्रीगणेशले निष्ठुर उत्तर दिनुभएपछि ती मानिसहरू निराश भए ।।१६।। केही मानिसहरू आपसमा भन्न लागे - 'यी बालकसँग कसरी व्यवहार गर्ने ? यिनलाई लगेर कसरी खुवाउने ?' भगवान् श्रीगणेशले पनि ती नगरवासीहरूको व्याकुलता थाहा पाएर जसरी एउटा आकाश गाग्राहरूभित्र अनेक आकाशको रूपमा परिणत भएको हुन्छ त्यसरी श्रीगणेशले पनि आफूलाई अनन्तरूपमा परिणत गर्नुभयो । जसरी पानी भरिएको गाग्रामा सूर्यको बिम्ब पर्दा अनेक सूर्यहरू देखिन्छन् त्यसरी नै भगवान् अनेक रूपमा देखिनुभयो ।।१७-१८।। त्यसपछि श्रीगणेश काशीका प्रत्येक घरमा देखिनुभयो । उहाँ प्रत्येक घरमा अनेक थरि क्रीडा गर्दै हुनुहुन्थ्यो । कहीं उहाँ सोपानमार्गमा उक्लिरहेका देखिनुहुन्थ्यो, कहीं डोलामा सवार हुनुहुन्थ्यो, कहीं पलङमा सुतिरहेका देखिनुहुन्थ्यो, कहीं राजमहलमा बसिरहेका देखिनुहुन्थ्यो र कुनै घरमा बालकहरूका साथ हाँस्दै-खेल्दै खाइरहेका देखिनुहुन्थ्यो ।।१९-२०।। श्रीगणेश कहीं शास्त्र पढिरहेका र कहीं शास्त्र पढाइरहेको अवस्थामा पनि देखिनुभयो।

जहर्षे स गृहस्वामी धन्योऽहमिति चाब्रवीत् ।
एवं सर्वगृहे राजसहितोऽसौ विनायकः ।।२२।।

क्वचिदभ्यज्यते तैलैः स्नाति क्वापि शुभैर्जलैः।
पादप्रक्षालनं क्वापि क्रियते परमादरात् ।।२३।।

उपचारैः षोडशभिः पूज्यते क्वापि भक्तितः।
भोज्यते परमान्नेन बालभावाद् यथा तथा ।।२४।।

क्वचिन्नानापरिमलैः कस्तूरीचन्दनादिभिः।
अर्च्यते सुमनोभिश्च नैवेद्यैर्विविधैरपि।
सेव्यते गृहपत्नीभिः शिशुभिः सेवकैरपि।।२५।।

भुक्त्वा यथेष्टं सुष्वाप पादसंवाहनादिभिः।
वेदपारायणरतः क्वापि गानरतस्तु सन् ।।२६।।

शृणोति सत्कथां क्वापि हरेरपि कथां क्वचित् ।
क्वचिच्च प्रमदानृत्यं पश्यति स्म नृपेण सः।।२७।।

आरार्तिक्यैश्च विविधैः क्वापि नीराज्यते विभुः।
क्वचिच्च पाशहस्तोऽसौ क्रीडते क्षुद्रबालकैः।।२८।।

पुराणं वाच्यते क्वापि धर्मशास्त्रं स्मृतिस्तथा।
एवं सर्वगृहे भुक्त्वा सर्वेषां कामपूरकः।।२९।।

यस्य यस्य यथा वाञ्छा तथा तां व्यदधाद् विभुः।
सुप्रसन्नो महादेवो यथाकल्पद्रुमोऽपि च ।।३०।।

यथा चिन्तामणिः कामधेनुर्वाऽखिलकामदा ।
दीननाथेति यन्नाम कृतं तत् सार्थकं तदा।।३१।।

देवदुन्दुभयो नेदुः पुष्पवृष्टिर्गृहे गृहे।
दृष्ट्वेत्थं काशिराजोऽसौ भ्रान्त ऊचे निजान् प्रति।।३२।।

यसरी काशिराजका साथमा श्रीगणेशलाई आफ्नो घरमा देखेर कुनै घरका स्वामीले भने- 'म धन्य भएँ।' यसैगरी धेरै घरहरूमा भगवान् श्रीगणेश काशिराजका साथमा देखिनुभयो ।।२१-२२।। भगवान् श्रीगणेश कहीँ तेल मालिस गराइरहेका देखिनुहुन्थ्यो र कहीँ निर्मल पानीले नुहाइरहेका देखिनुहुन्थ्यो । कुनै घरका मानिसहरूले ठूलो आदरका साथ भगवान्को पाउ पखालिरहेका थिए । कहीँ बालरूप भगवान्ले केटाकेटीले झैँ भोजनलाई चारैतिर छितार्नुभएको देखिन्थ्यो । कुनै घरका नर-नारीले भक्तिपूर्वक सोह्र प्रकारका पूजाका सामग्रीहरूद्वारा भगवान्को पूजा गरिरहेका थिए । कहीँ भगवान्लाई उत्तम अन्नद्वारा भोजन गराइदैथियो । कहीँ अनेक थरि सुगन्ध, कस्तूरी, चन्दन र पुष्पहरूबाट भगवान्को पूजा भइरहेको थियो। कहीँ अनेक थरि नैवद्य टक्र्याएर भगवान्लाई तृप्त गराइएको थियो । घर-घरमा शिशु र सेवकहरूले भगवान् श्रीगणेशको सेवा गरिरहेका थिए । कुनै घरमा भगवान् भोजन ग्रहण गरी सुकला गर्नुभएको थियो र घरका मानिसहरूले उहाँको पाउ दबाइरहेका थिए । कहीँ भगवान् वेदपाठ गर्दै हुनुहुन्थ्यो र कहीँ वीणा आदि वाद्य साधन हातमा लिएर गाना गाउँदै हुनुहुन्थ्यो । कुनै घरमा उहाँ उत्तम कथा श्रवण गर्दै हुनुहुन्थ्यो र कुनै घरमा उहाँ भगवान् सत्यनारायणको कथा सुनिरहनुभएको थियो । कुनै घरमा उहाँ काशिराजका साथ वेश्याहरूको नाच हेर्दै हुनुहुन्थ्यो। कुनै घरमा सर्वव्यापी भगवान् श्रीगणेश अनेक थरि आरतीहरूद्वारा पूजा गरिँदै हुनुहुन्थ्यो। कहीँ हातमा पाश लिएर साना-साना बालकहरूसँग खेल्दै हुनुहुन्थ्यो ।।२३-२८।। कहीँ भगवान् श्रीगणेश पुराणवाचन गर्दै हुनुहुन्थ्यो र कहीँ धर्मशास्त्र एवं स्मृतिग्रन्थ सुनाउँदै हुनुहुन्थ्यो । यसरी सबैका घरमा भोजन गरेर भगवान् श्रीगणेशले सबैका इच्छा पूरा गरिदिनुभयो ।।२९।। जसको जस्तो इच्छा थियो, तदनुसार रूप लिएर भगवान्ले ती इच्छा पूरा गरिदिनुभयो । भगवान् आशुतोष शङ्कर प्रसन्न र वरदायक बन्नुभएझैँ श्रीगणेश पनि आशुतोष हुनुभयो । कल्पवृक्ष, चिन्तामणि र कामधेनुले मानिसले कल्पना गरेको कुरालाई साकार तुल्याएझैँ भगवान् श्रीगणेशले पनि सबैका कामनालाई साकार तुल्याई आफ्नो दीननाथ भन्ने नामलाई सार्थक तुल्याउनुभयो।।३०-३१।। काशीका घर-घरमा श्रीगणेशको उपस्थिति भएपछि त्यहाँ पुष्पवर्षा भयो र देवदुन्दुभि बज्न थाले । यो दृश्य देखेर

अयं विनायको बालः सन्निधौ मम तिष्ठति।
स कथं सर्वगृहगः पूज्यते सर्वमानवैः।।३३।।

गृहे गृहे तु स कथं तिष्ठत्यत्रापि साम्प्रतम् ।
यो मामाकारयति तं वदामि च पुनः पुनः।।३४।।

विना विनायकं यामि कथं भोक्तुं भवद्गृहे ।
गृहमध्यस्थितश्चात्र भुङ्क्ते काश्यपसंयुतः।।३५।।

तं भुक्तवन्तं त्यक्त्वैव बहिस्थमपि दृष्टवान् ।
इतस्ततोऽब्रुवँल्लोका दृढविस्मितमानसाः।।३६।।

नानागृहगतो भुङ्क्ते काशिराजयुतो विभुः।
आकर्ण्य वचनं तेषां हसन्नूचे नृपः स तान् ।।३७।।

विना मां स कथं यातो भोक्तुं नानागृहानिति।
ततो गृहाणि द्वित्राणि गत्वा राजा हि दृष्टवान् ।।३८।।

स्वञ्च कश्यपपुत्रञ्च भुक्तवन्तं गृहे गृहे ।
एतस्मिन्नन्तरे प्राप्तौ स्नात्वा तौ मुनिसत्तमौ ।।३९।।

भुक्त्यर्थं भ्रममाणौ तौ सनकश्च सनन्दनः।
पुरीं महोत्सवयुतां विनायकमयीं शुभाम् ।।४०।।

यद् यद् गृहं प्रविशतस्तत्र तत्र विनायकम् ।
पश्यतः स्मरतस्तौ तु यातः स्म बहिरेव च।।४१।।

भुक्तञ्च भुक्तवन्तञ्च सुप्तं क्रीडन्तमेव च।
जपन्तञ्च पठन्तञ्च पाठयन्तञ्च पश्यतः।।४२।।

एवं सर्वत्र तं दृष्ट्वा परस्परमथोचतुः।
न स्थलं भोजनार्थाय दृश्यतेऽथात्र निर्मलम् ।।४३।।

यावः शुक्लगृहं कर्ता स नानातिथ्यमादरात् ।
इत्युक्त्वा तद्गृहं यातौ दृष्टस्तत्रापि काश्यपः।।४४।।

भ्रान्तिमा परी काशिराजले आफ्ना मानिसहरूलाई भने - 'बालक विनायक मेरै घरमा विराजमान हुनुहुन्छ र मेरै नजिकमा विराजमान हुनुहुन्छ । यस्ता श्रीगणेशको कसरी मानिसहरूले आ-आफ्ना घरमा पूजा गरिरहेका छन् ? प्रत्येक घरमा भगवान् श्रीगणेश कसरी उपस्थित हुनुहुन्छ किनकि उहाँ त अहिले मेरै राजभवनमा हुनुहुन्छ । जसले मलाई भोजनका निमित्त आफ्नो घरमा बोलाउँछन्, तिनलाई म बारबार भन्ने गर्दछु - भगवान् श्रीगणेशविना म एक्लै तपाईँको घरमा आउँदिन। श्रीगणेशलाई आफ्नै घरमा राखेर उहाँसँग बसी दिनदिनै भोजन गर्ने गर्छु । अहिले के आश्चर्य हो ?' यसो भनेर श्रीगणेशलाई एक्लै छाडी काशिराज बाहिर निस्के । त्यहाँ पनि तिनले श्रीगणेशलाई नजर गरे। त्यसै बेला अरू मानिसहरू पनि श्रीगणेशले प्रत्येक घरमा गएर भोजन गर्नुभएको थाहा पाई चकित भएका थिए। तिनीहरूले आएर राजालाई भने - 'हे काशिराज ! भगवान् श्रीगणेश हजुरका साथमा प्रत्येक घरमा गई भोजन गर्दै हुनुहुन्छ।' तिनका कुरा सुनेर हाँस्दै काशिराजले भने - म त यहीँ छु, उहाँ पनि यहीँ हुनुहुन्छ तर तपाईँहरू त्यसो भन्नुहुन्छ, उहाँ एक्लै कसरी जानुभयो ? म पनि अब हेर्छु भनी राजा दुई-तीन घरमा परीक्षण गर्न गए । त्यहाँ तिनले आफूलाई श्रीगणेश सँगसँगै भोजन गरिरहेको देखी आश्चर्यचकित भए । त्यसै बेला उत्तम मुनि सनक र सनन्दन गङ्गा स्नान गरी भोजन गर्न भनी घुम्दै आए । तिनीहरूले पनि काशीका प्रत्येक घरमा श्रीगणेशको उपस्थिति, उत्सव र रमझम देखे ।।३२-४०।। जुन जुन घरमा भिक्षा माग्न प्रवेश गरे, त्यहाँ त्यहाँ तिनीहरूले श्रीगणेशलाई नै देखे । उहाँलाई देखेर उहाँको संझना गर्दै ती एक घरबाट अर्को घर जान भनी बाहिर आउँथे । जुन जुन घरमा जान्थे, त्यहाँ त्यहाँ कहीँ भोजन गरिसकेका, कहीँ भोजन गरिरहेका, कहीँ सुतिरहेका, कहीँ खेलिरहेका, कहीँ जप गरिरहेका, कहीँ पढिरहेका र कहीँ पढाइरहेका श्रीगणेशलाई देखे ।।४१-४२।। यसरी जहाँसुकै भगवान् श्रीगणेशलाई देखेर ती दुबैले आपसमा कुरा गरे - जहाँसुकै श्रीगणेशले भोजन गरिरहेका छन् । हाम्रा लागि शुद्ध भोजन गर्न योग्य घर कहीँ पनि देखिँदैन ।।४३।। अब हामी शुक्ल ब्राह्मणका घरमा जाऔँ, तिनले हाम्रो राम्रो सत्कार गर्नेछन् । यस्तो विचार गरेर ती दुबै मुनि शुक्ल ब्राह्मणका घरमा गए। त्यहाँ पनि तिनीहरूले भगवान् श्रीगणेशलाई देखे।।४४।।

अधोमुखौ क्षुधार्तौ तौ यातः स्म नगराद् बहिः।
पश्यतः स्म परां मूर्तिं स्फुटां वैनायकीं शुभाम्।।४५।।

अन्तर्हृदि च नेत्रे स्वे निमील्योन्मील्य वा पुनः।
अधश्चोर्ध्वं चान्तराले दिक्षु चैव विदिक्षु च ।।४६।।

स्वानुस्मृतौ ततः पश्चाद् ध्यानस्तिमितवीक्षणौ।
क्षणमुद्घाट्य नयने विनायकस्वरूपिणम् ।।४७।।

परस्परं पश्यति स्म सनकस्तं परोऽपि तम् ।
यं देवं तौ ध्यायतः स्म पश्यतस्तं विनायकम् ।।४८।।

सर्वव्यापी सर्वरूप आविरासीत् तयोः पुरः।
दशबाहुः सिंहगतः सिद्धिबुद्धिविराजितः ।।४९।।

सुप्रकाशं किरीटञ्च कुण्डले चाङ्गदे दधत् ।
दिव्यगन्धञ्च माल्यञ्च नागञ्चन्द्रार्द्धमेव च ।।५०।।

कस्तूरीतिलकं दिव्ये वसने दशनप्रभे ।
सौम्यतेजाः सुमनसां दुष्टानां दुर्निरीक्षणः।।५१।।

त्यक्त्वा भ्रमं तु तत्त्वज्ञौ प्रणतौ तौ विनायकम् ।
बद्ध्वा करपुटं तौ तं तुष्टुवाते महामती ।।५२।।

तौ ऊचतुः

नित्यमद्वैतमपरं परं ब्रह्म सनातनम् ।
नमाम परया भक्त्या पञ्चभूतात्मकं विभुम् ।।५३।।

चराचरगतं सर्वरूपिणं परमेश्वरम् ।
भ्रमन्ति यस्य रोमाञ्चगता ब्रह्माण्डकोटयः।।५४।।

स कथं स्तवनीयोऽसौ वेदान्तानामगोचरः।
आवयोर्वाञ्छितं देव ! त्वया ज्ञात्वा प्रपूरितम् ।।५५।।

न विद्मो महिमानं ते बालरूपधरस्य ह।
भूभारहरणार्थाय काश्यपं रूपमुत्तमम् ।।५६।।

भोकले व्याकुल भएका ती दुबै ऋषिहरू लाजले मुन्टो झुकाउँदै अब यहाँ कहीं पनि खान पाइँदैन भनी शहरबाहिर गए । तिनीहरूले त्यहाँ पनि भगवान् श्रीगणेशको स्पष्ट, सुन्दर र अति उत्तम मूर्ति देखे ।।४५।। यो मूर्तिलाई हेर्दैनौं भनेर ती दुबैले आँखा चिम्लिए। आँखा चिम्लिदा पनि तिनीहरूले आफ्नै हृदयमा त्यही सुन्दर मूर्ति देखे। फेरि आँखा खोले, तल, माथि, बीचमा, पूर्व, पश्चिम, उत्तर, दक्षिण, ऐशान्य, वायव्य, आग्नेय, नैऋत्य सबै दिशाहरूमा तिनीहरूले श्रीगणेशको त्यही मूर्ति देखे ।।४६।। यसरी जहाँसुकै मूर्ति देखिएपछि ध्यानमुद्रामा आँखा बन्द गरे । एक छिनपछि आँखा खोल्दा सनकले सनन्दनलाई र सनन्दनले सनकलाई गणेशको रूपमा दर्शन गरे ।।४७-४८।। ती दुबैले जुन जुन देवताको ध्यान गर्थे ती देवतालाई पनि श्रीगणेशकै रूपमा पाउँथे । सर्वव्यापक, सर्वरूप भगवान् श्रीगणेश ती ऋषिहरूलाई अलमलिएको देखेर तिनका सामु प्रकट हुनुभयो। दश हात भएका, सिंहमा सवार, सिद्धि र बुद्धिद्वारा सेवित, अत्यन्त प्रकाशमय, कुण्डल र अङ्गदले सुहाउनु भएका, दिव्य गन्ध र मालाले अलङ्कृत, आधा चन्द्रमा धारण गर्नुहुने, कम्मरमा शेषनाग बेर्नुभएका, निधारमा कस्तूरीको तिलक लगाउनु हुने, हिउँझैं सेता सुन्दर वस्त्र धारण गर्नुहुने, सज्जनहरूका लागि अत्यन्त शान्त तेज धारण गर्नुभएका र दुष्टहरूको दृष्टिमा भयङ्कर रूपमा देखिनुहुने भगवान् श्रीगणेश तिनीहरूका सामु विराजमान हुनुहुन्थ्यो । यसरी भगवान्को दर्शन पाएपछि ती दुबै मुनिहरूले भ्रमको जालो च्यातेर तत्त्वज्ञान गरे । त्यसपछि विनम्रतापूर्वक हात जोडी श्रीगणेशलाई प्रणाम गर्दै स्तुति गरे ।।४९-५२।।

**सनक र सनन्दनले भने** - 'नित्यस्वरूप, अद्वैतरूप, सनातन, परब्रह्म श्रीगणेशलाई परम भक्तिपूर्वक नमस्कार गर्दछौं। पृथिवी, जल, तेज, आकाश र पवन यी पाँच महाभूतहरूमा विराजमान हुनुहुने, चराचरव्यापी, सर्वरूप परमेश्वरलाई प्रणाम गर्दछौं । जसका रोमाञ्चमा कोटि ब्रह्माण्ड घुम्दछन् त्यस्ता वेदान्तद्वारा पनि अनिर्वचनीय प्रभुको हामी कसरी स्तुति गरौं ? हे प्रभु ! हजुरले हामीहरूले चाहेको कुरा थाहा पाएर त्यसलाई परिपूर्ण गराइदिनुभएको छ । बालकरूपमा विराजमान, पृथिवीको भार हरण गर्न कश्यपका पुत्रका रूपमा अवतार लिनुहुने हजुरको महिमा हामी जान्दैनौं ।।५३-५६।।'

क उवाच

अन्तर्दधे तु तद्रूपमुभयोः स्तुवतोः पुरः।
न पश्यतो यदा रूपं तदा तौ श्रमवर्जितौ ।।५७।।

प्रासादं परमं कृत्वा मूर्तिं वैनायकीं शुभाम् ।
ब्रह्मवादित्रघोषैश्च यथादृष्टं शुभे दिने ।।५८।।

स्थापयामासतुर्नाम वरदोऽयं विनायकः।
गणेशतीर्थमिति च तत्र यत् सर उत्तमम् ।।५९।।

स्थापितं नाम तस्यापि तत्र तत् ख्यातिमागमत् ।
अत्र स्नानेन दानेन गणेशपूजनेन च ।।६०।।

सर्वान् कामानवाप्नोति हित्वा पापं पुरातनम् ।
तत्रेयुर्मुनयः सर्वे देवाश्च सदिगीश्वराः।।६१।।

दृष्ट्वा सम्पूजितं देवं स्तुत्वा नत्वा ययुः पुनः।

मुनिरुवाच

एवं तौ बालरूपस्य प्रभावं द्रष्टुमागतौ ।।६२।।

दृष्टप्रभावौ सन्तुष्टौ स्वस्थानमापतुः परम् ।
य इदं शृणुयाद् भक्त्या बालस्य चरितं शुभम् ।।६३।।

सर्वान् कामानवाप्नोति प्रेत्य ब्रह्ममयो भवेत् ।
न बालग्रहपीडा स्यात् सर्वत्र विजयी भवेत् ।।६४।।

**ब्रह्माजीले भन्नुभयो** – सनक र सनन्दनले यसरी स्तुति गर्दागर्दै भगवान् श्रीगणेशले आफ्नो त्यस रूपलाई अन्तर्धान गराउनुभयो । श्रीगणेशको रूप देख्न नपाएका र सहसा चेष्टाहीन हुन पुगेका ती दुबै ऋषिले उत्साहपूर्वक श्रीगणेशको ठूलो मन्दिर बनाए । वेदपाठ र बाजागाजाको मङ्गल ध्वनिका साथ शास्त्रको आदेशअनुसार आफूले बनाएको मन्दिरमा उत्तम दिनमा ती दुबै मुनिले भगवान् श्रीगणेशको मूर्ति प्रतिष्ठा गरे । तिनीहरूले आफूले स्थापना गरेका भगवान् श्रीगणेशको नाम वरदगणेश राखे । त्यो ठाउँ गणेशतीर्थ र त्यहाँ रहेको सरोवर गणेश सरोवरका रूपमा प्रख्यात भयो । श्रीगणेश तीर्थमा स्नान, दान र पूजन गर्नाले भक्तले आफ्ना पापहरू पखालेर सम्पूर्ण कामनाका फल प्राप्त गर्दछन् । सनक र सनन्दनले मूर्ति प्रतिष्ठा गरेपछि त्यहाँ दिक्पाल र देवताहरू पनि आइपुगे ।।५७-६१।। भगवान् श्रीगणेशको पूजा भएको देखेर उहाँलाई नमस्कार र स्तुति गरी आ-आफ्ना धामतर्फ गए ।

**मुनिले भने** – यसरी बालरूप भगवान् श्रीगणेशको प्रभावबाट परिचित हुन पाएका सनक र सनन्दन पनि भगवान्को प्रभावबाट सन्तुष्ट भई आफ्नो आश्रमतर्फ लागे । जसले भक्तिपूर्वक श्रीगणेशको यो बालचरित्रको श्रवण गर्दछ त्यसले सम्पूर्ण कामनाहरू पूर्ण हुने फल प्राप्त गर्दछ । त्यो भक्त अन्तमा ब्रह्ममय भएर गणेशधाममा प्राप्त हुन्छ । यो कथा श्रवण गर्नाले बालकहरूमा ग्रहपीडा हुँदैन र भक्तजनहरू जुनसुकै क्षेत्रमा पनि सफल हुन्छन् ।।६२-६४।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे बालचरिते सनकसनन्दनस्तुतिवर्णनं नाम चतुःपञ्चाशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'सनक र सनन्दनद्वारा भगवान् श्रीगणेशको स्तुति' शीर्षकान्वित चौवन्नौं अध्याय पूर्ण भयो ।।५४।।

ॐ

# पञ्चपञ्चाशोऽध्याय:　　{ ५५ अध्याय }

### मुनिरुवाच

तयोस्तु गतयो: पश्चान्मोहापन्नो महानृप:।
काशिराजो हयारूढो भ्रमति स्म गृहे गृहे।।१।।

विनायकमचक्षाण: क्व गतो भोक्तुमित्युत।
विहाय मां कथं यातो मिष्टान्नं भोक्तुमेकश:।।२।।

गृहे गृहे पर्यपृच्छत् क्व गतोऽसौ विनायक:।
इदानीं बहिरायातो भुक्त्वा क्रीडितुमुत्सुक: ।।३।।

काशिराजेन सहितो वृथा त्वं पृच्छसे कथम् ।
एवं निराकृत: सर्वै: पुरवासिजनैरसौ ।।४।।

परमं श्रममापन्नो कुटुम्ब्यकिञ्चनो यथा।
केचिदूचु: शुक्लगृहे क्रीडतेऽसौ विनायक:।।५।।

ततो हर्षयुत: शुक्लगृहं यातो नृपस्तदा।
ददर्श चाङ्गणे तस्य बालं वृषगतं विभुम् ।।६।।

दृष्ट्वा तं वृषभारूढं त्रिनेत्रमिव चापरम् ।
प्रणम्य परया भक्त्या बद्धाञ्जलिपुटोऽब्रवीत् ।।७।।

### नृप उवाच

न बाले साधुचरितं न ज्ञानं स्नेह एव च ।
विहाय मां कथं भुक्तं मिष्टान्नं विविधं त्वया।८।।

### क उवाच

एवमाकर्ण्य तद्वाक्यमुवाच स विनायक: ।
यत्र यत्र मया भुक्तं तत्र भुक्तं त्वयाऽपि च।।९।।

मिथ्या त्वं भाषसे मन्द! बालस्त्वमसि बुद्धित:।
वदिष्यन्ति जना: सर्वे पृच्छेति च ससाक्षिकम् ।।१०।।

**मुनिले भने** - सनक र सनन्दनको प्रस्थानपछि श्रीगणेशलाई नदेखेर चिन्तामग्न भएका काशिराज श्रीगणेशको खोजीमा घोडामा सवार भएर घर-घर डुल्दै थिए ।।१।। भोजन गर्ने बेला भयो, मेरा श्रीगणेश कहाँ हुनुहुन्छ ? मीठा पकवान र व्यञ्जन भोजन गर्न मलाई छोडेर एक्लै किन जानुभयो ? मेरा श्रीगणेश कहाँ जानुभयो ? यस्ता प्रश्न गर्दै काशिराज घर-घरमा हिंडे । काशिराजका प्रश्न सुनेर नगरनिवासी मानिसहरूले 'श्रीगणेश भोजन गरेर भर्खरै काशिराजका साथ बाहिर जानुभएको थियो। उहाँ बालकहरूका साथ बालक्रीडा गर्न उत्सुक हुनुहुन्थ्यो । तपाईँ व्यर्थमा अत्तालिएर किन प्रश्न गर्दै हुनुहुन्छ' भनी काशिराजलाई नअत्तालिन अनुरोध गरे ।।२-४।। यसरी नर-नारीहरूले भनेपछि राजा झन् चिन्तामा परे । गरीब गृहस्थ आफ्नो सन्तानको खोजी गर्दा थाकेझैं श्रीगणेशलाई खोज्दा-खोज्दा काशिराज अत्यन्त थाके तर उपाय केही देखेनन् । कसैले आएर भने - 'यतिबेला श्रीगणेश शुक्ल ब्राह्मणको घरमा खेलिरहनुभएको छ ।।५।।' यो थाहा पाएर खुसी भएका काशिराज शुक्लका घरमा गए । शुक्लको आँगनमा साँढेमा सवार हुनुभएका अन्तर्यामी श्रीगणेशलाई देखे । उहाँलाई साँढेमा सवार भएको देखेर तिनले दोस्रा शिवको रूपमा दर्शन गरी परम भक्तिले प्रणाम गरेर हात जोडी निवेदन गरे ।

**राजाले भने** - 'बालकमा सज्जनको स्वभाव, ज्ञान र माया पनि नहुँदो रहेछ । मलाई एक्लै छाडेर किन हजुरले मीठा-मीठा भोजन खानुभयो ? ।।६-८।।'

**ब्रह्माजीले भन्नुभयो** - काशिराजका कुरा सुनेर विनायकले उत्तर दिनुभयो - 'हे काशिराज ! मैले जहाँ-जहाँ खाएँ त्यहाँ-त्यहाँ तपाईँले पनि खानुभएको छ । तपाईँ किन असत्य भाषण गर्दै हुनुहुन्छ ? तपाईँ बौद्धिक दृष्टिबाट हेर्दा मभन्दा पनि बच्चा हुनुहुँदो रहेछ । अरू मानिसहरूलाई सोध्नुहोस् त तिनीहरूले के भन्दा रहेछन् ? मसित सँगै तपाईँले भोजन गरेको कुरा देख्ने र जान्ने धेरै साक्षीहरूलाई म तपाईँसामु उभ्याउन सक्छु ।' यसरी भगवान् श्रीगणेशले भनिरहनु भएको

श्रुत्वा वैनायकं वाक्यं जना ऊचुर्नृपं तदा।
इदानीं हि त्वया भुक्तं विनायकसमीपतः।।११।।

कथं मिथ्या भाषसे त्वं वृद्धः सन् नृपसत्तम !।
ततः प्रकृतिमापन्नो ज्ञातवान् स नृपोऽब्रवीत्।।१२।।

अज्ञेया ते परा माया योगिनामपि मोहिनी।
धन्योऽसि सर्वरूपेण सर्वत्र मानितो यतः।।१३।।

क उवाच

रोमाञ्चाञ्चितगात्रः स ध्यानमेवान्वपद्यत।
ततो वैनायकं रूपं स्वयमेवान्वपद्यत।।१४।।

यथा जले जलं क्षिप्तं जलत्वं प्रतिपद्यते।
पुनर्मायाबलेनासौ भिन्नमूर्तिर्नृपोत्तमः।।१५।।

स तु तं शिबिकारूढं निनाय निजमन्दिरम्।
नानावादित्रनिर्घोषैर्नृत्यगीतैरनेकशः।।१६।।

शुशुभे बालकोऽतीव देवेषु मदनो यथा।
अनुयाति सपत्नीको भक्त्या शुक्लः शनैः शनैः।।१७।।

परावर्त्य मुखं दृष्टो बालेन व्रीडता भृशम्।
कथं प्रयातोऽदत्त्वाऽस्मै वरं कञ्चन तोषकम्।।१८।।

इत्येवं मनसा तस्मै ददौ सम्पत्तिमुत्तमाम्।
कुबेरसम्पदः श्रेष्ठां सर्वाश्चर्यकरीं विभुः।।१९।।

शुक्लः परावृतो दीनः सपत्नीको महामनाः।
कदन्नभक्षणाद् देवो रुष्टः किन्न्विति चिन्तयन्।।२०।।

नापश्यत् तां पर्णकुटीं चिन्तां परमिकां ययौ।
ततस्तु सेवकाः शुक्लं सुगन्धतैलमर्दनैः।।२१।।

स्नापयित्वाऽप्यलञ्चक्रुर्भूषणैः काञ्चनांशुकैः।
तथैव तस्य पत्नीञ्च बलादिव नियोजिताः।।२२।।

अत्याश्चर्ययुतौ चोभौ पश्यतः सर्वसम्पदः।
रत्नकाञ्चनभित्तीश्च मञ्चान् नानासनानि च।।२३।।

बेला मानिसहरू आएर भने– 'हे काशिराज! तपाईंले भर्खरै श्रीगणेशका साथमा बसेर खानुभएको थियो ।।९–११।। हे उत्तम राजा ! तपाईं वृद्ध मानिस भएर पनि किन मिथ्या भाषण गरिरहनु भएको छ ?' यो घटनापछि स्वस्थ भएका ज्ञानी काशिराजले भने– 'हे भगवन् विनायक! हजुरको माया अपरम्पार छ । त्यसबाट योगीहरू पनि मुग्ध हुन्छन् । हजुर धन्य हुनुहुन्छ । हे श्रीगणेश ! हजुर सर्वव्यापक र सर्वसम्मानित पनि हुनुहुन्छ ।।१२–१३।।'

**ब्रह्माजीले भन्नुभयो** – यति भन्दाभन्दै काशिराज रोमाञ्चित भएर श्रीगणेशको ध्यानमा लीन भए । उहाँको ध्यानमा लीन भएका काशिराज चिन्तन गर्ने क्रममा आफै श्रीगणेशको रूपमा परिणत भए ।।१४।। जसरी पानीमा थपेको पानी पानी नै हुन्छ त्यसैगरी भक्त पनि भगवान्को चिन्ता गर्दा भगवान्कै रूपमा परिणत हुन्छ । केही समयपछि भगवान्ले मायाको प्रयोग गर्नुभयो । काशिराज भिन्न रूपमा देखिए । त्यसपछि तिनले अनेक थरि वाद्यध्वनि र गीतहरूको गायनका साथ भगवान् श्रीगणेशलाई पालकीमा राखेर राजभवन पुर्‍याए ।।१५–१६।। त्यस बेला भगवान् श्रीगणेश देवताहरूमा कामदेव अत्यन्त राम्रा देखिएझैं सम्पूर्ण बालकहरूमध्ये राम्रा देखिनुभएको थियो। त्यस बेला शुक्ल ब्राह्मण आफ्नी पत्नीलाई साथ लिएर भगवान्का पछिपछि आइरहेका थिए । श्रीगणेशले पछाडि फर्केर शुक्ललाई हेर्नुभयो । मैले अकिञ्चन ब्राह्मणलाई केही दिन सकिनँ भनेर उहाँले लाज मानेझैं गर्नुभयो । त्यतिबेलै उहाँले मनबाट शुक्ल ब्राह्मणलाई कुबेरको भन्दा पनि उत्तम र सबैलाई चकित तुल्याउने सम्पत्ति प्रदान गर्नुभयो ।।१७–१९।। यो कुरा शुक्ललाई केही थाहा भएन । भगवान्ले केही पनि दिनुभएन भन्दै मलिन मुख गराएर फर्के। तिनले मनमा सोचे– 'मैले घरमा राम्रो भोजन खुवाउन सकिनँ, त्यसै भएर रुष्ट हुनुभएका भगवान्ले मलाई केही दिनु भएन ।' मनमा यस्ता कुरा खेलाउँदै घर फर्केका शुक्ल ब्राह्मणले जहाँनिर आफ्नो झुपडी थियो त्यहाँ त्यो नदेखेर ठूलो चिन्ता गरे । त्यसपछि सेवकहरूले समीपमा आई तिनलाई सुगन्धित तेलको मालिश गरी सुन्दर सामग्रीबाट स्नान गराएर बहुमूल्य अलङ्कार एवं

[illegible]मणिगणैश्चित्राण्यनेकानि स्थले स्थले।
[illegible]नानि च भाण्डानि वस्त्राण्याच्छादनानि च।।२४।।
[illegible]ाण्यनेकरूपाणि खाद्यानि विविधानि च।
[illegible] सकलत्रोभौ परस्परमभाषताम् ।।२५।।

[illegible]दं भवनं क्षुद्रं जातमिन्द्रगृहोपमम् ।
[illegible] शुक्लोऽब्रवीत् पत्नीं विनायकप्रसादत:।।२६।।

[illegible] जानीहि सुभगे ! न समक्षं महाविभु:।
[illegible]ति तु परोक्षेऽसावल्पमात्रेण तोषयन् ।।२७।।

[illegible] दत्तं बहुतरमल्पमेव हि मन्यते ।
[illegible]पपादितं स्वल्पं मन्यते बहुलं विभु:।।२८।।

[illegible]द् भयेन कामेन स्नेहेन रिपुभावत:।
[illegible]व्यो नमनीयश्च स्तव्य: पूज्यो हिताय च।।२९।।

मुनिरुवाच

[illegible] नगरे गुप्तौ नरान्तकसमीरितौ।
[illegible] दूतौ चिरं कालं शूरश्च चपलस्तथा।।३०।।

[illegible]शब्दात् त्रैलोक्यं कम्पतेऽश्वत्थपत्रवत् ।
[illegible] कम्पत: कम्पं यान्ति देवा: सवासवा: ।।३१।।

[illegible] बले शब्दे त्रैलोक्ये न समस्तयो: ।
[illegible] तु [illegible]शिविकामध्ये हन्तव्यो मुनिदेहज:।।३२।।

[illegible]नेन हता दैत्या बलिन: पूर्वमागता:।
[illegible]कृति: कार्येत्येवमूचु: परस्परम् ।।३३।।

वस्त्र पहिराए । त्यसैगरी तिनकी पत्नीलाई पनि स्नान र शृङ्गार गराउने काम गरे । सेवकहरूद्वारा गरिएको सेवा, विचित्र सम्पत्ति, सुन र रत्नले बनेको घर, दिव्य आसन, मञ्च, मोतीका दाना र सुनले भरिएका भाँडा, संसारमै सर्वोत्तम मानिएका वस्त्र, मूल्यवान् कम्बल, अनेक थरि पकवान र उत्तम भोजन देखेर दुबै दम्पतीले परस्पर कुरा गरे ।।२०-२५।। 'हाम्रो सानो झुपडी आज इन्द्रको दरबारजस्तो बन्यो । यो कसरी बन्यो ? कसले बनायो ? हामी त छक्क परेका छौं ।' त्यसपछि शुक्लले विचार गर्दै आफ्नी पत्नीलाई भने – 'हे सुन्दरी ! संसारका सबभन्दा ठूला देवता श्रीगणेशको कृपाबाट यी सबै कुरा प्राप्त भएका हुन् । सर्वव्यापक परमात्माले भक्तलाई समीपमा आई केही पनि दिनुहुन्न । थोरै मात्र वस्तु दिंदा खुसी भएर भगवान्ले परोक्षमा सबै कुरा दिनुहुन्छ। यति धेरै सम्पत्ति दिएर पनि उहाँले मैले थोरै दिएँ भन्नुहुन्छ। भक्तले भक्तिपूर्वक दिएको थोरै वस्तुलाई पनि अत्यन्त धेरै मानेर स्वीकार गर्नुहुन्छ ।।२६-२८।। हे सुन्दरी! भगवान्लाई डरले भजे पनि हुन्छ, कामना लिएर भजे पनि हुन्छ, मायाले भजे पनि हुन्छ, शत्रु बनाएर भजे पनि हुन्छ किनकि यी सबै भावनाहरूद्वारा भज्दा भगवान्को नाम लिइन्छ र भगवान्को स्मरण गरिन्छ । यसैगरी भक्तहरूले भगवान्लाई प्रणाम, स्तुति र पूजा गर्नुपर्छ । केही फरक पर्दैन । यसो गर्दा भगवान् प्रसन्न हुनुहुन्छ र भक्तको हित गर्नुहुन्छ ।।२९।।'

**मुनिले भने** – नरान्तकको आज्ञा पाएर काशीनगरमा आई लुकेर रहेका शूर र चपल नामक नरान्तकका दूतहरू दीर्घकालदेखि श्रीगणेशमाथि प्रहार गर्ने इच्छाले प्रतीक्षा गरिरहेका थिए। तिनले आपसमा कुरा गरे– 'जसको प्रचण्ड शब्दले तीन लोक नै पीपलका पातझैं काँप्दछन्, जसले शिर हल्लाउँदा इन्द्रसहित सम्पूर्ण देवताहरू काँप्दछन्, पराक्रम, बल र गर्जनमा जुन वीरहरूसमान संसारमा अरू कुनै पनि छैनन्, हामी तिनै वीरका दूत हौं । पालकीमा सवार भई काशिराजको दरबारतर्फ प्रस्थान गर्ने हाम्रो शत्रु कश्यपपुत्र श्रीगणेशलाई हामीले मार्नुपर्दछ ।।३०-३२।। किनकि यसले पहिले युद्ध गर्न आएका हाम्रा दाजुभाइ धेरै दैत्य वीरहरूलाई मारिसकेको

विद्युद्रूपं समास्थाय गर्जतः स्म महारवौ।
तत्तेजसा प्रतिहतचक्षुषो वीरसञ्चयाः।
किमिदं किमिदमिति चुक्रुशुर्भृशविह्वलाः।।३४।।

एतस्मिन्नन्तरे प्राप्तौ शिबिकानिकटं तु तौ।
वाहाः पलायिताः सर्वे त्यक्त्वा तञ्च विनायकम्।।३५।।

धृतौ विनायकेनोभौ हस्ताभ्यां बलिनौ बलात्।
उत्पाटितुं धरण्यां स भ्रामयामास तावुभौ।।३६।।

करुणार्द्रमनाः पश्चात् स्थापयामास भूतले।
हन्तव्यः पुरुषेणासौ यः पराक्रमतोऽधिकः।।३७।।
मशके निहते कः स्यात् पुमर्थः पुरुषस्य ह।
ततः पप्रच्छ तौ कस्य दूतौ वा कथ्यतामिति।।३८।।
स्वशक्त्या तु कृते यत्ने न दोषः पुरुषस्य ह।
एवं तद्वचनं श्रुत्वा प्रोचतुः पुरतः स्थितौ।।३९।।
करुणाब्धिर्भवान् ख्यातो दीननाथः पिताऽसि नः।
सेकक्रुच्चोपनेता च विद्यादोऽभयदोऽपरः।।४०।।
अन्नदः पञ्च पितरो विख्याता भुवनत्रये।
आवां दूतौ गुप्तरूपौ नरान्तकसमीरितौ।।४१।।
तव विघ्नकरौ देव ! रक्षितौ कृपया त्वया।
भूतं भव्यं भवच्चैव सर्वं जानासि सर्ववित्।।४२।।
ये ये वैरेण त्वां याता हतास्ते क्षणमात्रतः।
एतस्मिन्नन्तरे पौरा विनायकमथाब्रुवन्।।४३।।
किमेतौ रक्षितौ देव ! दुष्टौ लोकभयङ्करौ।
अनयोरुपकारस्तु कृतोऽपकृतये भवेत्।।४४।।
पन्नगाय पयो दत्तं विषमेव हि जायते।

छ। तिनीहरूलाई मारेको प्रतिशोध हामीले लिनुपर्छ। यसरी परस्परमा कुरा गरेपछि ती दुबैले बिजुलीको रूप लिएर ठूलो गर्जन गरे। बिजुलीको तेजले आँखाको तेज मन्द भएका वीरहरूले के आइलाग्यो भन्दै व्याकुलता देखाए।।३३-३४।। त्यसपछि ती दुबै शूर र चपल भगवान् श्रीगणेशको पालकी नजिकै आए। तिनलाई देखेर पालकी बोक्ने मानिसहरू श्रीगणेशलाई एक्लै छाडी भागे।।३५।। त्यस बेला ती बलवान् दूतहरूलाई भगवान् श्रीगणेशले बलपूर्वक समात्नुभयो। तिनलाई चिरेर दुई टुक्रा बनाउने आशयले खुट्टामा समातो धेरै बेरसम्म रिंगाउनुभयो। त्यसपछि दया जाग्यो र भुइँमा थपक्क राखिदिनुभयो। वीर पुरुषले आफूभन्दा बलियो वीरलाई मार्नुपर्दछ। लामखुट्टेलाई मारेर पुरुषको कुन पुरुषार्थ हुन्छ ? त्यसपछि सोध्नुभयो - तिमीहरू को हौ, कहाँबाट आएका हौ र कसका दूत हौ ? आफ्नो शक्तिले कसैले प्रयत्न गर्छ भने त्यसको दोष हुँदैन। भगवान्‌का यी कुरा सुनेर ती दूतहरूले भने- 'हजुर करुणासागरका रूपमा प्रसिद्ध हुनुहुन्छ, दीन-दुःखीहरूका स्वामी हुनुहुन्छ र हाम्रा पितासमान हुनुहुन्छ। वीर्यदान गरेर जन्माउने, व्रतबन्धमा मन्त्र दिने, विद्या दिने, आपत्तिबाट रक्षा गरी अभयदान दिने र अन्न दान गरी प्राणको रक्षा गर्ने यी पाँचथरिका मानिस तीनै लोकमा पिताका रूपमा मानिन्छन्। हामी नरान्तकद्वारा पठाइएका गुप्तरूपमा विचरण गर्ने दूत हौं। तपाईंको जीवनमा र लीलामा विघ्न गर्न आएका हामीलाई तपाईंले कृपा गरेर जोगाउनुभयो। तपाईं सर्वज्ञ हुनुहुन्छ र भूत, भविष्य र वर्तमान कालको विषयमा सबै कुरा जान्नुहुन्छ।।३६-४२।। जुन-जुन दैत्यहरू तपाईंसँग द्वेष गरेर लड्न आए तिनलाई दृष्टिबाट मात्र एकछिनमा समाप्त पारिदिनुभयो। यसै बीचमा नगरवासीहरूले आई भगवान् श्रीगणेशलाई भने - 'हे श्रीगणेश ! तपाईंले यी दुष्ट दानवहरूलाई किन जोगाउनुभयो ? यी त संसारका लागि डरलाग्दा र खतरनाक दैत्य हुन्। यिनीहरूमाथि उपकार गर्नु त संसारको अपकार गर्नु हो। सर्पलाई दूध पियाएर त्यो सज्जन बन्दैन अपितु त्यसले विष नै ओकल्छ।'

मुनिरुवाच

अनुवाच ततो देवः पूर्वमेवानयोर्मया ।।४५।।
अभयं दत्तमधुना विपरीतं कथं भवेत् ।
इत्युक्त्वाऽमोचयत् तौ स ततो राजाऽब्रवीत् पुनः ।।४६।।
अपराधानसङ्ख्यातान् क्षान्त्वा तौ मोचितौ रिपू।
मरणे जीवने जन्तोरिच्छा ते कारणं मता।।४७।।
इत्युक्त्वा मन्दिरं प्राप्तौ काशिराजविनायकौ ।
नत्वा तौ सर्वलोकाश्च स्वं स्वं भवनमागमन् ।।४८।।
प्रशंसन्तो नृपं नानारूपिणञ्च विनायकम् ।।४९।।

**मुनिले भने** – ती नगरवासीहरूलाई भगवान् श्रीगणेशले भन्नुभयो – 'मैले पहिले नै यिनीहरूलाई अभयदान दिइसकेको थिएँ । तसर्थ अहिले विपरीत गर्नु राम्रो हुँदैन ।' त्यसो भनेपछि ती दुबै दूतलाई मुक्त गरेर पठाइदिनुभयो । तिनीहरू गएपछि काशिराजले भने- 'हे प्रभु ! यिनका असंख्य अपराधलाई क्षमा गरेर हजुरले मुक्त गर्नुभयो । वास्तवमा प्राणीहरूको जीवन र मरणमा हजुरको इच्छा नै प्रमुख कारण बनेको हुन्छ।।४३-४७।।' यस्ता कुरा गरेपछि काशिराजसहित भगवान् श्रीगणेश राजभवनमा जानुभयो। सबै नगरवासीहरू दुबैलाई नमस्कार गरेर काशिराजको भाग्य र भगवान् श्रीगणेशको विचित्र पुरुषार्थको प्रशंसा गर्दै आ-आफ्ना घरतर्फ लागे ।।४८-४९।।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे दूतमोचनं नाम पञ्चपञ्चाशोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'श्रीगणेशद्वारा शूर र चपलनामक दानवदूतहरूलाई जीवन दान' शीर्षकान्वित पचपन्नौं अध्याय पूर्ण भयो ।।५५।।

ॐ

## षट्पञ्चाशोऽध्यायः    { ५६ अध्याय }

मुनिरुवाच

तौ तु रौद्रपुरे रम्यां नरान्तकसभां गतौ।
सहस्रस्तम्भरुचिरां मणिमुक्ताविभूषिताम्।।१।।

अनेकवीरसम्बाधां नानाश्चर्यवतीं शुभाम्।
शतयोजनविस्तीर्णां तावदायामसंयुताम् ।।२।।

नानामणिमये रम्ये आसने स नरान्तकः।
उपविष्टस्तत्समये तस्यामात्यौ वरासने।।३।।

उभौ गगनसंलेहिमूर्धानौ बलिनां वरौ।
नत्वा तौ वदतः शूरश्चपलश्च गुणान् बहून् ।।४।।

वक्तव्यं दूतवर्येण यत् स्यात् साध्वितरच्च यत्।
अन्यथा दूतदोषः स्यात् स्वामिकोपश्च दारुणः ।।५।।

श्रुत्वा तत् स्वामिना कार्यं विचार्य स्वहितं शुभम् ।
आवां विनायके विघ्नान् कर्तुं यातः पुरीं तु ताम् ।।६।।

अतिगुप्ततरौ तत्र स्थितौ बालप्रतीक्षकौ ।
विघण्टो दन्तुरश्चाथ प्रथमं बालरूपिणौ ।।७।।

ताभ्यामालिङ्गितस्तौ स भस्म चक्रे विनायकः।
पतङ्गश्च विधूलश्च वायुरूपधरौ ततः।।८।।

यातौ बालकमुत्क्षेप्तुं शिर आक्रम्य नाशितौ।
पाषाणरूपी प्रबलः शतधा खण्डितोऽसुरः।।९।।

कामक्रोधौ द्वावसुरौ रासभं रूपमास्थितौ ।
हन्तुं बालन्तु मार्गे तौ चूर्णितौ धरणीतले ।।१०।।

ततः कुण्डिन्यास्तुवरः कौञ्जरं रूपमास्थितः।
मार्गमावृत्य सन्तस्थौ तत्कुम्भस्य विदारणात् ।।११।।

**मुनिले भने -** ती दुबै दूत रौद्रपुरमा बसेका नरान्तक दैत्यको रमणीय सभामा प्राप्त भए । नरान्तकको सभास्थल हजारौं स्तम्भले परिपूर्ण र मोती एवं मणिहरूले सिँगारिएको थियो । हजारौं वीरहरू यताउति गरिरहेका थिए । संसारका आश्चर्यजनक वस्तुहरू त्यहाँ कलात्मक रूपमा राखिएका थिए। त्यो सभाभवन एक सय योजन अथवा चार सय कोश लम्बाइ र चौडाइमा फैलिएको थियो ।।१-२।। त्यस सभाको बीचमा अत्यन्त चम्किलो मणिमय सिंहासनमा नरान्तक विराजमान थियो । त्यसको नजिकैमा अग्ला, मोटा, अत्यन्त बलवान् र आफ्नो शिरबाट आकाश स्पर्श गर्ने त्यसका दुई अमात्य बसेका थिए। ती दुबैलाई नमस्कार गरेर शूर र चपलनामक दूतहरूले श्रीगणेशको प्रशंसा गरे । वास्तवमा दूतले राजा र मन्त्रीको प्रशंसा गर्नुपर्छ अन्यथा दूतमा दोष आइलाग्छ । राजाले दूतको सन्देश सुनेर कर्तव्य र अकर्तव्यको विचार गर्नुपर्दछ अन्यथा राजाको भयङ्कर कोप हुनसक्छ ।।३-५।। त्यस बेला दूतहरूले भने- 'हे राजन्! हजुरहरूको आज्ञा पाएर हामी दुबै श्रीगणेशको लीलामा विघ्न पैदा गर्न यहाँबाट काशी नगरी गएका थियौं।।६।। बालक गणेशको प्रतीक्षा गर्दै अत्यन्त गुप्त रूपमा हामी त्यहाँ बस्यौं । एक दिन विघण्ट र दन्तुरले बालकको रूप धारण गरे । तिनले मार्न नियतले श्रीगणेशलाई आलिङ्गन गरे । त्यस क्रममा श्रीगणशले ती दुबैलाई खरानी तुल्याइदिए । त्यसपछि पतङ्ग र विधूल वायुरूप लिएर गए । तिनीहरूले श्रीगणेशलाई आकाशमा फ्याँकिर मार्न खोजेका थिए तर श्रीगणेशले शिर निमोठेर तिनीहरूलाई मारिदिए। त्यसपछि प्रबलासुर ढुङ्गाको रूप लिएर गएका थिए, श्रीगणेशले तिनलाई पनि सय टुक्रा पारेर फ्याँकिदिए ।।७-९।। काम र क्रोधनामक दुई राक्षस गधाको रूप लिएर काशी गएका थिए। तिनीहरूले पनि बालक श्रीगणेशलाई मार्न खोजे तर श्रीगणेशले तिनलाई पनि भुइँमा पछारेर मारिदिए ।।१०।। त्यसपछि कुण्डिनी नगरबाट आएर तुबर नामक दैत्यले श्रीगणेशलाई मार्न हात्तीको रूप लिई बाटो छेकेर बसेका थिए । तिनलाई

निहतः क्षणमात्रेण कुमारेण बलेन सः।
धर्मदत्तगृहं पश्चाद् जृम्भिणी हन्तुमागता।।१२।।

नारिकेलेन शिरसि हता मृत्युमवाप सा।
ज्वालाशुरो व्याघ्रतुण्डस्तृतीयस्तु विदारणः।।१३।।

आगता नाशितुं बालमाद्यो जज्वाल तां पुरीम् ।
अन्त्यः साहाय्यमकरोद् वायुरूपतयाऽस्य ह।।१४।।

विदार्यास्यं व्याघ्रतुण्डोऽभक्षयच्चाखिलान् जनान् ।
त्रयोऽपि निहतास्तेन बालेनाऽनन्तमायया।।१५।।

मेघनामा महादैत्यो गाणकं रूपमास्थितः।
निहतो मुद्रिकाघातात् तदद्भुतमिवाभवत् ।।१६।।

कूपश्च कन्दरश्चोभौ निहतौ मायिनौ बलात् ।
अम्भासुरोऽन्धकस्तुङ्गो नाशितुं बालमागताः।।१७।।

एकेनाकारि तु तमो धाराभिर्ववृषे परः।
अपरस्तुङ्गशिखरो न्यपतद् बालकोपरि।।१८।।

महाविहङ्गरूपेण दूरे क्षिप्तास्त्रयोऽपि च।
तेषां प्रतिकृतिं कर्तुं भ्रमरी नाम राक्षसी ।।१९।।

आगता भक्षितुं बालं दुष्टाशयवती शुभा ।
तदुरःस्थलमाक्रम्य प्राणान् जग्राह विघ्नराट् ।।२०।।

तत आवां तडिद्रूपमास्थाय बालकं गतौ।
विहन्तुं तेन विधृतौ करयोर्बलशालिना।।२१।।

कृपावता विमुक्तौ च पृष्ठा सर्वं चिकीर्षितम् ।
कथयित्वोदन्तममुमागतौ स्वामिनं प्रति।।२२।

एकदा नगरे तत्र सर्वैरिकः समाहृतः।
भोजनाय च शुक्लेन दरिद्रेण विनायकः।।२३।।

पनि श्रीगणेशले गाला च्यातेर तुरुन्तै मारिदिए । त्यसपछि श्रीगणेश धर्मदत्तको घरमा रहेको बेला जृम्भिणी राक्षसी श्रीगणेशलाई मार्न भनेर गएकी थिइन् । श्रीगणेशले तिनलाई पनि नरीवलको फलले टाउकोमा हानेर मारिदिए । ज्वालासुर, व्याघ्रमुख र विदारण नामक तीन राक्षसहरू श्रीगणेशलाई मार्न भनेर काशीमा गएका थिए । ज्वालासुरले काशीमा आगो लगाए, विदारणले वायुरूप लिएर तिनलाई सहयोग गरे र व्याघ्रमुख आफ्नो मुख फैलाई पर्वताकार भई रहे । तिनले आगलागी हुँदा भागदौडमा परेका मानिसहरूलाई निलेर पेटभित्र पुऱ्याए । यति गर्दागर्दै पनि तिनीहरूको केही लागेन । आखिर श्रीगणेशले आफ्नो अनन्त मायाशक्तिको प्रयोग गरेर तीनवटै दैत्यलाई मारिदिए ।।११-१५।। मेघ नामक महादैत्यले ज्योतिषीको रूप लिएर श्रीगणेशलाई भेट्न गए । तिनलाई पनि श्रीगणेशले औंठीले हानेर मारिदिए । त्यो अत्यन्त आश्चर्यजनक विषय थियो । श्रीगणेशलाई मार्ने मनसायले गएका कूप र कन्दर नामक दुवै मायावी राक्षसहरूलाई पनि श्रीगणेशले बलपूर्वक मारिदिए । अम्भासुर, अन्धकासुर र तुङ्गासुर यी तीन दैत्य फेरि श्रीगणेशलाई मार्न भनी काशी पुगेका थिए । अन्धकासुरले काशीमा अन्धकार फैलाए, अम्भासुरले ठूलो वर्षा गराए र तुङ्गासुरले अग्लो ठाउँबाट हाम्फालेर श्रीगणेशलाई च्यापे । त्यस बेला श्रीगणेशले ठूलो चराको रूप लिएर तीनवटै दैत्यलाई मारिदिए । त्यसपछि तिनीहरूको प्रतिशोध लिन भ्रमरी नामक राक्षसी वाराणसी गएकी थिइन् । अत्यन्त राम्रो स्वरूप लिएर ती राक्षसी बालक श्रीगणेशलाई खाने आशयले तिनको नजिकै पुगिन् । तर श्रीगणेशले सबै कुरा थाहा पाएर तिनको छातीमा आक्रमण गरी प्राणहरण गरिदिए ।।१६-२०।। त्यसपछि हामी दुवै दूत बिजुलीको रूप लिएर बालकलाई मार्न कोशिश गर्दै थियौं । त्यसै बेला बलशाली श्रीगणेशले हाम्रा हात समाते र हाम्रो क्रियाकलापको विषयमा सोधनी गरे । हामीले पनि तिनलाई सबै कुरा बतायौं । दयालु श्रीगणेशले हामीलाई जिउँदै छाडिदिए। अहिले हामी सबै कुरा बताउन हाम्रा राजाका सामु आएका छौं। एक दिनको कुरा हो, काशीनिवासीहरूले एकै पटक भगवान् श्रीगणेशलाई आ-आफ्नो घरमा भोजन गर्न आमन्त्रण गरेका थिए, तर श्रीगणेश तिनका घरमा नगएर

विशीर्णमोदनं भुक्त्वा सह तैलेन प्राग्विभुः।
पश्चाद् गतोऽनन्तकायो भोक्तुं सर्वगृहेषु सः।।२४।।

सर्वत्र काशिराजेन सहितो बुभुजे हि सः।
काशिराजेन मूढेन न ज्ञातं तद्विचेष्टितम् ।।२५।।

स्वामिन्नेतादृशी शक्तिः क्वापि दृष्टा न च श्रुता।
इदानीं यद्धितं ते स्यात् तद्धि सम्यग्विधीयताम् ।।२६।।

जानीवहे न जेताऽस्य त्रैलोक्ये विद्यते पुमान् ।

मुनिरुवाच

इत्थं श्रुत्वा तयोर्वाक्यं प्रजज्वाल सुरान्तकः।
वमति स्म मुखादग्निं विश्वमत्तुं प्रसारितात् ।।२७।।

कपिरुड्डानशीलोऽपि न सिंहं बाधते क्वचित् ।
बद्ध्वा तु भ्रुकुटीमुग्रामुवाच स नरान्तकः।।२८।।

ग्रासशीलश्चाजगरो न महीं ग्रसते क्वचित् ।
आश्चर्यं मम चित्ते तु भवद्वाक्यादुपागतम् ।।२९।।

खद्योतो राजते तावद् यावच्चन्द्रो न दृश्यते।
चन्द्रोऽपि राजते तावद् यावत्सूर्यो न दृश्यते।।३०।।

न दृश्यते यदा राहुस्तावत् सूर्योऽपि राजते।
न दृष्टः कालरूपोऽहं तावद् बालो महानयम् ।।३१।।

सकाशिराजं तं बालं जानीयातां दिवं गतम् ।
यत्र ते निहता दैत्या गतास्तत्र गमिष्यति ।।३२।।

मुनिरुवाच

एवमुक्त्वा समुत्तस्थौ जगर्ज गर्जयन् दिशः।
चकम्पे पृथिवी सर्वा तद्गर्जनरवाकुला ।।३३।।

गरीब शुक्ल ब्राह्मणका घरमा गई हिजोअस्ति पकाएर सुकाएको भातको धूलो तेलसित खाएर प्रसन्न र तृप्त भए । त्यसपछि मात्र तिनले अनेक रूप धारण गरी सबैका घरमा गएर दर्शन दिए । सबैका घरमा तिनले काशिराजसित सँगै बसेर भोजन गरे, श्रीगणेशको मायाबाट मोहित भएका काशिराजले म श्रीगणेशसँग सँगै खाइरहेको छु भन्ने होश पाएनन् र श्रीगणेशका चेष्टा पनि बुझ्न सकेनन् । हे स्वामी नरान्तक ! यस्तो शक्ति भएको मानिस हामीले कहीं पनि देखेका थिएनौं ।।२१-२६।। हे प्रभु ! यस्ता मानिसको विषयमा कहीं सुनेका पनि थिएनौं । हजुर अहिले जे गर्दा हित हुन्छ त्यो कार्य राम्ररी गर्नुहोस् । यस संसारमा ती बालकलाई जित्नसक्ने कुनै पुरुष छैन भन्ने कुरा हामीलाई लागेको छ ।

**मुनिले भने** - आफ्ना दूतहरूका यस्ता कुरा सुनेर नरान्तक साह्रै रिसायो । त्यसले आफ्नो फैलिएको मुखबाट संसारलाई नै खाने गरी आगो ओकलिरहेको थियो ।।२७।। नरान्तकले आफ्नो आँखीभौं कुटिल बनाएर भन्दै थियो - जति उड्न सके पनि बाँदरले सिंहलाई केही गर्न सक्तैन, नजिकमा आएका कीरा-फट्याङ्ग्रा र पशु-पक्षीहरूलाई एकै गासमा खाए पनि अजगरले पृथिवीलाई गास बनाउन सक्दैन । तिमीहरूका कुरा सुनेर मलाई आश्चर्य लागिरहेको छ ।।२८-२९।। तिमीहरूले कुरा बुझ्नुपर्छ कि जूनकीरी तबसम्म चम्किन्छ जबसम्म चन्द्रमाको उदय हुँदैन, चन्द्रमा पनि तबसम्म चम्किलो देखिन्छ जबसम्म सूर्यको उदय हुँदैन, सूर्य पनि तबसम्म चम्किन्छ जबसम्म त्यसलाई राहुले आफ्नो गास बनाउँदैन । यसैगरी जबसम्म म काल बनेर त्यस बच्चाका सामु जाँदै जान्न तबसम्म तिमीहरूजस्ता बुद्धि नभएका दैत्यहरूका लागि त्यो बालक महान् बन्दछ ।।३०-३१।। अब तिमीहरूले त्यो काशिराज र त्यस श्रीगणेशलाई मरेको ठाने हुन्छ । जहाँ श्रीगणेशद्वारा मारिएका दैत्यहरू गएका छन् त्यसै ठाउँमा ती दुबै जानेछन् ।।३२।।

**मुनिले भने**- यसरी आफ्ना कुरा भनेर नरान्तक उभियो र दिशा र देशान्तरहरूलाई शब्दायमान गराउँदै घोर गर्जन गर्‍यो । नरान्तकको त्यस गर्जनबाट व्याकुल भएकी पृथिवी काँपिन् ।।३३।। त्यसपछि नरान्तकले आफ्ना वीरहरूलाई

तत आज्ञापयत् सर्वान् वीरान् सज्जीभवन्त्विति ।
काशिराजस्य नगरीं यामि युद्धाय दंशित:।।३४।।

तस्मिन् वदति सेनेत्थं सन्नद्धा समुपागता।
सर्वशान्तिकरा घोरा चतुरङ्गध्वजान्विता।।३५।।

सैन्येन रजसा सर्वं व्याप्तमासीद् दिगन्तरम् ।
आच्छादिते दिनकरे न प्राज्ञायत किञ्चन ।।३६।।

पदातयोऽप्यसङ्ख्येया: सिन्दूरारुणमस्तका:।
उड्डीयोड्डीय धावन्तो मिथ्यायुद्धं प्रचक्रिरे ।।३७।।

मुक्तकेशा: खड्गहस्ता भुशुण्डीचर्मपाणय:।
पाषाणद्रुमखट्वाङ्गकृत्तिपाशकरा: परे।।३८।।

ततो ययौ गजानीकं घण्टानादविभूषितम् ।
सिन्दूरारुणसद्गण्डं दन्तावरणराजितम् ।।३९।।

नानाधातुविचित्रो नु पर्वतानां व्रजो व्रजन् ।
चीत्कारेण नदद्दन्तैर्भिन्दन्निव गिरिव्रजम् ।।४०।।

आधोरणा यदा न स्युस्तदा सर्वं हतं भवेत् ।
दानोदकेन तु रज: प्रशान्तमभवत् तदा ।।४१।।

अश्वारोहास्तयोर्जग्मुर्मुकुटाटोपमस्तका:।
भल्लिकाधर्मनिस्त्रिंशधनुर्बाणविभूषिता:।।४२।।

बृंहितैर्हेषितैर्व्योम कुर्वन्त: सगुणं भृशम् ।
कङ्कालैश्च तनुत्राणैस्त्रिशूलैश्च विराजिता:।।४३।।

गदामुद्गरपट्टीशमहापरशुपाणय:।
चक्रतोमरभल्लासिपाशसृणिकरा: परे।।४४।।

अश्वा अलङ्कृता नानालङ्कारैश्चामरैरपि।
मनोजवा वायुवेगा व्योमैवाक्रान्तुमिच्छव:।।४५।।

रथा: सुवर्णरजतमुक्तामणिविभूषितम् ।
सुवर्णाक्षैर्ध्वजैर्युक्तं नानालङ्कृतवाजिभि:।।४६।।

आज्ञा दिँदै भन्यो – तिमीहरू तयार बन, आफन्तहरूको वधबाट चोट खाएको म अब काशिराजको नगरी काशीमा युद्धका लागि जाँदैछु ।।३४।। यसरी नरान्तकले भनेपछि सबैलाई स्तब्ध तुल्याउने पैदल, अश्व, रथ र हात्तीसेनासहित शस्त्रास्त्रले सजिएर युद्धका लागि तयार भयो ।।३५।। त्यसका सेनाले उडाएको धूलोले चारै दिशामा अन्धकार छायो । त्यसबाट सूर्य ढाकिए र धर्तीमा कतै केही देखिएन । नरान्तकको पैदल सेनामा असंख्य वीर थिए । तिनीहरूले सिन्दूर लगाएर शिरलाई रातै तुल्याएका थिए । ती उडेझैं दौडिरहेका थिए । बलले उन्मत्त भएर ती वीरहरू आफू-आफूमा लडाइँको अभ्यास गरिरहेका थिए ।।३६-३७।। तिनीहरूका केश मुक्त थिए र हातमा तरवार नाचिरहेका थिए। कसैका हातमा बन्दुक, कसैका हातमा भाला, कसैका हातमा ढुङ्गाबाट बनेका अस्त्र, कसैका हातमा रूखका हाँगा, कसैका हातमा खाट र कसैका हातमा कृत्ति एवं पाश थिए । त्यसपछि नरान्तकको गजसेना देखियो । प्रत्येक हात्तीका घाँटीका घण्ट बजिरहेका थिए र प्रत्येक हात्तीको सूँढमा सिन्दूर लगाइएको थियो । प्रत्येक हात्तीका दाँतलाई बचाउन कवच लगाइएको थियो । हात्तीहरूको समूह हिंड्दा पर्वतको समूह नै हिंडेजस्तो लाग्थ्यो। ती हात्तीहरू चित्कार गर्दै पर्वत, चट्टान एवं रूख ढाल्दै अगाडि बढेका थिए । त्यहाँ माउतेहरू हुन्नथे भने ती हात्तीहरूले संसार नै सखाप पार्ने थिए । हात्तीहरूका गालाबाट झरेको मदधाराबाट धर्तीको धूलो शान्त भएको थियो ।।३८-४१।। हात्तीसेनापछि नरान्तकको अश्वसेना देखियो । मुकुटधारी अश्वसेनाका वीरहरू हातमा छुरी, ढाल, तरबार, धनु र बाण धारण गरी शोभायमान थिए। सिंहनाद, घोडाहरूको हिनहिनावटले आकाशलाई शब्दायमान तुल्याएको थियो । कसैका हातमा नरकङ्काल, कसैका हातमा कवच र कसैका हातमा त्रिशूल सजिएका थिए ।।४२-४३।। गदा, मुग्रो, बञ्चरो, चक्र, तोमर, तरवार, भाला, पाश र सृणि धारण गर्ने अश्वारोही वीरहरू पनि सुहाएका थिए ।।४४।। अश्वसेनामा रहेका घोडाहरू अनेक थरि अलङ्कार र चामरद्वारा शोभायमान थिए । ती मनझैं तीव्र गतिमा हिंडिरहेका थिए र आकाशलाई नै आक्रमण गर्न खोजेझैं आफ्नो गन्तव्यतर्फ हाम फालिरहेका थिए । त्यसपछि सुवर्णमय, युद्धका सामग्रीले

नानायुद्धसमूहैश्च धनुर्बाणशतैर्युतम् ।
कार्तस्वरमहाचक्रं किङ्किणीजालमण्डितम् ।।४७।।

महारथी महामात्यो रथमास्थाय निर्ययौ ।
कृष्णदेहो महाकायो वीरकङ्कणशोभितः।।४८।।

लसत्कुण्डलसुश्रोत्रो महामुकुटमण्डितः।
मुक्तासुवर्णमालाढ्यो मुद्रिकाखड्गमण्डितः।।४९।।

केशरागरुकस्तूरीकर्पूराङ्गविलेपनः।
शुचिरस्त्राणि सस्मार न प्रयुक्तानि कुत्रचित् ।।५०।।

वीरावेशेन स बभौ रोगी शोफां गतो यथा।
नानावादित्रनिर्घोषैर्नादयन् विदिशो दिशः।।५१।।

वीरा विनायकं जेतुं दृष्ट्वा गर्जन्त्यनेकशः।
बृंहितैर्हेषितैः क्ष्वेडै रथनेमिस्वनैरपि।।५२।।

निनादं तं समाकर्ण्य त्रस्ता देवा दरीं ययुः।
एवं नरान्तकः काशिराजस्य नगरीं ययौ।।५३।।

परिपूर्ण, सयौं धनु र बाणले सम्पन्न, अनेक प्रकारका घण्टीहरूको जालले जेलिएको रथसेना देखियो र त्यसमा महारथी वीरहरूका साथ प्रधानमन्त्री सवार भएको थियो । त्यो महामन्त्री सर्वाङ्ग कालो वर्ण र पर्वतझैं विशाल आकारको थियो । त्यसका कानमा कुण्डल सुहाएका थिए र शिरमा ठूलो मुकुट थियो । त्यसले घाँटीमा मोतीको हार धारण गरेको थियो । त्यसको हातमा तरवार र मुद्रिका सजिएका थिए । केशर, अगरु, कस्तूरी र कपूरको धूला त्यसले शरीरमा लेपन गरेको थियो । त्यसले कहिले कसैमाथि प्रयोग नगरेका पवित्र अस्त्रलाई धारण गरेको थियो ।।४५-५०।। त्यो अनेक थरि युद्धका बाजाको ध्वनिले दिशा र विदिशालाई ध्वनिमय तुल्याउँदै वाथरोगले सुन्निएको रोगीझैं वीरताको आवेशले उन्मत्त बनेको थियो । ती दैत्यहरू प्रसन्न भएर आज श्रीगणेशलाई जित्छौं भन्दै गर्जन गरिरहेका थिए । घोडाको शब्द, हात्तीको चीत्कार, सिंहनाद र रथका पहियाको शब्दले धन्किएको घनघोर गर्जन सुनेर डराएका देवताहरू आ-आफ्नो धाम छाडी पर्वतका गुफामा लुक्न गए । त्यसपछि नरान्तक पनि आफ्नो सेनाका साथ काशी नगरीमा पुग्यो ।।५१-५३।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे नरान्तकनिर्गमनं नाम षट्पञ्चाशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'श्रीगणेशसँग युद्ध गर्न नरान्तकको प्रस्थान' शीर्षकान्वित छपन्नौं अध्याय पूर्ण भयो ।।५६।।

ॐ

# सप्तपञ्चाशोऽध्याय: { ५७ अध्याय }

क उवाच

तस्मिन् प्रयाते दैत्येन्द्रे प्रागगुल्मेषु गता नरा:।
धावमाना नृपं प्रोचुर्भुक्तवन्तं नरान्तक:।।१।।

आगतो दैत्यराजोऽसौ चतुरङ्गबलान्वित:।
पौरा वादित्रनिर्घोषान् श्रुत्वा चक्रुर्महास्वनान् ।।२।।

कोलाहलो महानासील्लोकानां नगरे भृशम् ।
पलायिता दश दिशो लोका: प्राणपरीप्सया।।३।।

राजाऽथ भोजनं त्यक्त्वा प्रोत्तस्थौ स्पर्शवानिव।
कृत्वा युद्धक्षमं वेषं लोकानाज्ञापयत् पुरा।।४।।

सज्जीभवन्तु युद्धाय भेरीशब्दमकारयत् ।
खड्गचर्मधरो राजा निषङ्गी चापवान् बली।।५।।

तनुत्राणी च कङ्काली पुपूजे तं विनायकम्।
जयपूर्वञ्च तं स्मृत्वा नत्वा चाश्वं समारुहत् ।।६।।

तृतीयमानकारावं श्रुत्वा सेनाचरा ययु:।
सन्नद्धास्त्वरमाणाश्च पत्त्यश्वस्यन्दनैर्गजै:।।७।।

अतिप्रहृष्टास्ते योधास्त्रैलोक्यग्राससाहसा:।
नगर्या: पूर्वभागे स वेदिकायां स्थितो नृप:।।८।।

अमात्यान् सर्ववीरांश्च ददौ वस्त्रधनानि स:।
उवाच समयोऽयं वो दर्शयन्तु पराक्रमम् ।।९।।

**ब्रह्माजीले भन्नुभयो** - दैत्येन्द्र नरान्तकले काशीविजय र श्रीगणेशको पराजयका लागि प्रस्थान गरेपछि सैनिक शिविरमा गएका मानिसहरूले दगुर्दै आएर भोजन गरिरहेका काशिराजलाई भने- 'हे राजन्! दैत्यराज नरान्तक चार प्रकारका सैनिकले युक्त भएर काशी नगरीमा आइसकेको छ । नरान्तकका सैनिकहरूले बजाएका बाजागाजा सुनेर काशीनिवासी नर-नारीहरू डरले आकुल-व्याकुल भएर क्रन्दन गर्न थालेका छन्।' वास्तवमा काशीनिवासी नागरिकहरू ठूलो कोलाहल गरिरहेका थिए । नर-नारीहरू डराएर प्राणरक्षाका लागि दसै दिशातिर भागिरहेका थिए ।।१-३।। काशिराजले यो कुरा सुनेर आफूले खान लागेको भोजनसमेत त्याग गरी हावाको वेगमा उभिएर युद्धमा लगाउनुपर्ने वेषभूषा धारण गरी आफ्ना सैनिकहरूलाई आज्ञा गर्दै भने- 'हे सैनिकहरू! तिमीहरू युद्धका लागि तयार बन ।' त्यसपछि राजाले युद्धका बाजा बजाउन लगाए । आफूले तरबार, ढाल, धनुष, बाण र हाडबाट बनेको काँड धारण गरी शरीरमा सर्वत्र फलामका सुदृढ कवच धारण गरे। युद्धको मैदानमा प्रस्थान गर्नुअघि विधिपूर्वक भगवान् श्रीगणेशको पूजा गरे । श्रीगणेशको जयजयकार गरी उहाँको संझना गर्दै उहाँका पाउमा शिर राखी उभिएर आफ्नो समीपमा रहेको घोडामा सवार भए ।।४-६।। त्यसपछि एक, दुई, तीन गरी युद्धको दमाहा बज्यो । त्यो सुनेर सैनिकहरू युद्धका लागि अग्रसर भए। ती वीर सैनिकहरू शस्त्र-अस्त्रले सजिएका थिए । कुनै पैदल हिंडिरहेका थिए । तीमध्ये केही रथमा, केही घोडामा र केही हात्तीमा सवार भएर तीव्र वेगले युद्धको मैदानतर्फ गइरहेका थिए। काशिराजका ती बलवान् योद्धाहरू युद्ध गर्ने अवसर पाएर अत्यन्त प्रसन्न थिए। ती वीरहरू तीनै लोकलाई आफ्नो अधीनमा तुल्याउन ठूलो उत्साहका साथ अगाडि बढिरहेका थिए। नगरको पूर्व भागमा गएर त्यहाँ तयार गरिएको मञ्चमा काशिराज विराजमान भए ।।७-८।। त्यस बेला उनले आफ्ना सबै वीर योद्धा र अमात्यहरूलाई प्रसन्नतापूर्वक वस्त्र र धन वितरण गरे । त्यसपछि तिनले ती सबैलाई भने - 'तिमीहरूले आफ्नो पराक्रम देखाउने अवसर यही हो ।।९।। भगवान् श्रीगणेशको कृपाबाट हामीले सर्वत्र विजय प्राप्त

विनायकानुग्रहान्नो न भयं विद्यते क्वचित् ।
तथापि बलवान् दैत्यो बलाज्जिग्ये वसुन्धराम् ।।१०।।

जयस्य नियमो नास्ति दैवाधीनाश्च पूरुषाः।
न सेना लक्षभागे न विद्यतेऽतोऽब्रवीम्यहम् ।।११।।

क्व सागरः क्व कुम्भोदं क्व खद्योतः क्व वा रविः।
तेनैव रक्षिताः साम्ना स्थिता राज्यश्रिया वयम् ।।१२।।

अपराधाः सुबहवो जाता नो मस्तके ततः।
कियन्तो निहता दैत्या विनायकबलेन च।।१३।।

त्यक्त्वा साम प्रयातोऽसौ विचारः क्रियतां हितः।

मुनिरुवाच

तत्राब्रवीन् महामात्यो राजानं भयविह्वलम् ।।१४।।

चतुर्भिर्बुद्धिमद्भिस्त्वं याहि दैत्यं नरान्तकम् ।
शरणं स्वस्वकार्यार्थे नीचानुसरणं शुभम् ।।१५।।

बृहस्पतिमतं राजन् ! ब्रवीमि ते शृणुष्व तत् ।
श्रुत्वा तत्कुरु राजेन्द्र ! ततः क्षेमं भविष्यति।।१६।।

बृहस्पतिरुवाच

कन्याप्रदानसहभोजनवस्त्रदान-
सामाभिधाननमनप्रणयप्रणामैः ।
तत्कीर्तिकीर्तनतदाप्तजनानुवाद-
मुख्यैरुपायनिचयैरहितान् विहंस्यात् ।।१७।।

मुनिरुवाच

स चेद् विनायकं याचेद् दत्त्वा राज्यस्य रक्षणम् ।
कर्तव्यमिति मे भाति स्वहितं तद् विचिन्त्यताम् ।।१८।।

गर्नेछौं । हामीलाई कुनै कुराको डर छैन तापनि दैत्यराज नरान्तक बलवान् छ र त्यसले आफ्नो पराक्रमबाट पृथिवीलाई नै आफ्नो वशमा तुल्याएको छ भन्ने कुरा हामीले बिर्सनु हुँदैन । विजय कसको हुन्छ भन्ने कुरा लेखिएको हुँदैन।।१०।। लक्ष्य प्राप्तिका लागि पुरुषार्थ देखाउने विषयमा म सक्रिय नभएको होइन । त्यसै भएर म फेरि पुरुषार्थ देखाउन तिमीहरूलाई अभिप्रेरित गरिरहेको छु ।।११।। सागर कहाँ ? गाग्राको पानी कहाँ ? जूनकिरी कहाँ ? सूर्य कहाँ ? त्यस्तै नरान्तक कहाँ र श्रीगणेश कहाँ ? यो कुरा तिमीहरूले राम्ररी विचार गर्नेछौ । श्रीगणेशले नै सामको प्रयोगबाट हाम्रो रक्षा गर्नुभएको छ । हामी राज्यलक्ष्मीको उपभोग गर्दै आएका छौं । हामीहरूबाट पनि धेरै अपराध भएका छन् । श्रीगणेशकै शक्ति प्राप्त गरी हामीहरूले पटक-पटक दैत्यहरूलाई युद्धमा मारेका छौं । मधुर वचनद्वारा सन्धि र समन्वयको नीति परित्याग गरी नरान्तक आक्रमणका लागि जुर्मुराएको छ । यसबेला सबै वीरहरूले कसरी राष्ट्रको हित हुन्छ, त्यो काम गर्नुपरेको छ ।'

**मुनिले भने** – युद्धको सन्त्रासले भित्रभित्रै त्रस्त भएका राजालाई एक जना महामात्यले भने – 'हे राजन् ! तपाईँ चार जना बुद्धिमान् मानिसहरूलाई अगाडि लगाएर नरान्तक दैत्यका सामु जानुहोस् । आफूभित्र शङ्का र भय उत्पन्न भएको बेलामा युद्ध गर्नु उचित हुँदैन। आफ्नो कार्यसिद्धिका लागि नीच मानिसको अनुसरण पनि मङ्गलदायक हुन्छ । यस सम्बन्धमा बृहस्पतिको पनि यस्तै मत रहेको छ। त्यो म बताउँछु, तपाईँले राम्ररी सुन्नुहोस् र तदनुसार कार्य गर्नुहोस्। त्यसबाट कल्याण हुनेछ।।१२-१६।।'

**बृहस्पतिले भनेका छन्** – 'आफूभन्दा बलिया राजालाई अनुकूल तुल्याई आफ्नो राज्य र जनताको रक्षा गर्न राजाले अनेक प्रयत्नहरू गर्नुपर्दछ । ती प्रयत्नहरू यसप्रकारका हुनसक्छन् – बलियो विरोधी राजालाई आफ्नी छोरी दिनु, एउटै भान्सामा बसी सहभोजन गर्नु, उत्तम वस्त्र र वस्तुहरू उपहारका रूपमा टक्र्याउनु, विनम्रतापूर्वक प्रस्तुत भई कीर्तिगान गर्नु, विरोधी राजाका विश्वस्त भाइ-भारदारहरूको प्रशंसा गर्नु आदि मुख्य उपायबाट शत्रुको नाश गर्नुपर्दछ ।।१७।।'

**मुनिले भने** – हे काशिराज ! यदि नरान्तकले तपाईँसँग गणेशलाई माग्दछ भने तिनलाई सुम्पेर भए पनि राज्यको रक्षा गर्नुपर्दछ भन्ने मलाई लागेको छ । त्यस विषयमा पनि

ततः सर्वजनाः साधु साध्विति प्राब्रुवन्नृपम् ।
सम्यगुक्तममात्येन वैरच्छेदाय भो नृप ।।१९।।

विचारयत्सु तेष्वेवं दैत्यास्ते बलवत्तराः।
रुरुधुस्तां पुरीं सैन्यैः सर्वे ते शलभा इव।।२०।।

मध्ये गतान् नरान् दृष्ट्वा ददहुस्तां पुरीं खलाः।
प्रजज्वाल महानग्निश्चतुर्दिक्षु विदिक्षु च ।।२१।।

धूमेनाच्छादि तपनो न प्राज्ञायत किञ्चन ।
कल्पान्त इव तत्रासील्लोकानामतिदारुणः।।२२।।

ध्रियन्ते ते परैर्येऽग्निभयाद् यान्ति बहिर्नराः।
सबाला योषितश्चापि लिलिङ्गुश्च चुचुम्बिरे ।।२३।।

पतिव्रतास्त्यजुः प्राणाँल्लज्जयाऽतिपरिप्लुताः।
आरुह्य गोपुरं काश्चिद् देहत्यागं प्रचक्रिरे।।२४।।

अपरास्तत्यजुः प्राणान् शस्त्रैः पाशैर्विषैरपि।
अतिरम्या धृता दूतैर्नीतास्ताः स्वामिनं प्रति।।२५।।

नरान्तकेन भुक्त्वा ताः प्रेषिता नगरं स्वयम् ।
एवं तं प्रलयं दृष्ट्वाऽमात्यानूचे नृपः पुनः।।२६।।

अस्मत्समक्षं योषाश्चेन्नीता दुष्टैर्दुरात्मभिः।
तदाऽयशो महन्न स्यात् तस्माद् युध्यामहेऽसुरैः।।२७।।

एवमुक्त्वा स्वमश्वं स प्रेरयन् युद्धदुर्मदः।
सज्यं कृत्वा धनुः सद्यो बाणवृष्टिमथाकरोत् ।।२८।।

आच्छादितो रश्मिमाली दैत्या मोहमुपागमन् ।
धाराधरा यथा धारा विमुञ्चन्ति तथा धनुः।।२९।।

चिन्तन गर्नुहोस् ।।१८।। महामात्यका यी कुरा सुनेर राजाको नजिकमा रहेका अरू भारदारहरूले पनि महामात्यले राम्रो कुरा गर्नुभयो र उहाँले बताएका उपायको अवलम्बनबाट नरान्तकसँगको वैरभाव शान्त हुनेछ भने ।।१९।। यसरी मन्त्री, राजा र राजाका भारदारहरूले विचार गरिरहेकै बेला नरान्तक दैत्यका सेनाहरू सलहझैं आएर काशी पुरीलाई चारैतिरबाट घेर्न थाले ।।२०।। काशीनिवासी नर-नारीहरू डरले शहरको बीचमा आई बसेका थिए । नरान्तक दैत्यका सेनाहरूले त्यहाँ उपद्रव मच्चाई सबैलाई आतंकित गर्ने हिसाबले आगो लगाइदिए। काशीनगरीका दसै दिशामा आगाको ज्वाला दन्किन थाल्यो।।२१।। नगरका चारैतिर तल र माथि धूवाँमात्र देखियो। कसैले कसैलाई देख्न सकेन। कहाँ के भइरहेको छ भन्ने कुरा कसैले जान्न सकेन । काशीनिवासी मानिसहरूका निमित्त यो घटना प्रलय-कालसमान डरलाग्दो थियो ।।२२।। डरले आफ्ना बालबच्चा समातेर नगरबाट बाहिर जान चाहने नर-नारीहरूलाई दैत्य-वीरहरूले रोकिरहेका थिए । ती दैत्यहरूले अविवाहित युवती र विवाहित नारीहरूमाथि खनिएर आलिङ्गन र चुम्बन गरिरहेका थिए ।।२३।। दैत्यहरूको यो दुराशयपूर्ण व्यवहार देखेर पतिव्रता नारीहरूले प्राणपरित्याग गरे । दानवहरूद्वारा शीलहरण गरिंदा लाजले भुतुक्क भएका कति नारीहरूले त शहरका अग्ला ढोकाहरूमा चढेर हाम्फाली प्राणत्याग गरे ।।२४।। कसैले आफ्नै शरीरमा शस्त्रप्रहार गरी प्राणत्याग गरे, केही मानिसहरू पाश लगाएर मरे, कतिले विषपान गरे र केही सुन्दरीहरूलाई दानवहरूले जर्बजस्ती समातेर नरान्तकका सामु पुऱ्याए ।।२५।। नरान्तकले ती नारीहरूको सौन्दर्य उपभोग गरी तिनलाई नगरतर्फ पठायो । यस्तो प्रलयकालसमान दृश्य देखेर काशिराजले फेरि आफ्ना अमात्यहरूलाई भने - 'दुष्टहरूले हाम्रा समीपबाट पतिव्रता नारीहरूलाई उठाई लगे भने यो हाम्रा लागि ठूलो कलङ्क हो । अब सहेर बस्न सकिंदैन । त्यस कारण हामीले जुनसुकै उपायबाट पनि नरान्तकको सेनासँग युद्ध गर्नुपर्छ ।।२६-२७।।' यसरी अमात्यहरूलाई निर्देशन दिएर काशिराजले युद्धको आकांक्षाले अत्यन्त उद्वेलित भई धनु सजाएर शत्रुको सेनामाथि बाण बर्साउन थाले ।।२८।। काशिराजले बर्साएका बाणहरूबाट सूर्य पनि ढाकिए । त्यस बेला दैत्यहरू के गरौं र के नगरौं भन्ने किंकर्तव्य-विमूढ अवस्थामा पुगे । जसरी

मुञ्चति स्म शरैस्ते ते निहता दैत्यसञ्चयाः।
केचिन्मृताश्च भग्नाश्च केचिच्छिन्नचरणाः कृताः।।३०।।

केषाञ्चिदुदरं भग्नं परेषां बाहवो हताः।
केषाञ्चित् स्फोटिते नेत्रे केषाञ्चिदुरवोऽपि च।।३१।।

अमात्याः सेनया सार्द्धं काशिराजं समन्वयुः।
खड्गैः परश्वधैस्ते तान् परवीरान् निजघ्निरे ।।३२।।

तदाघातैर्हताः केचित् पतिता भूतले परे।
तेऽपि दैत्या महाशस्त्रैर्निजघ्नुस्तान् रणाजिरे।।३३।।

अन्धकारे महारौद्रे सेनाधूलिकृते परे।
निजघ्नुरेव शस्त्रैस्ते वीरान् स्वाँश्च परानपि।।३४।।

मल्लयुद्धञ्च चक्रुस्ते परस्परजिगीषया।
अश्वारूढैर्गजारूढै रथारूढैः पदातिभिः।।३५।।

पदाताश्च रथारूढा युयुधुः शस्त्रसायकैः।
एवं सम्भ्रान्तमभवत् तद् युद्धं तुमुलं परैः।।३६।।

प्रभग्ना दैत्यसेना सा तदा याता पराङ्मुखी।
सिंहनादञ्चकारोच्चैः काशिराजो जयान्वितः।।३७।।

हर्षात् सेनान्तरं यातो निघ्नन् युद्धे वरान् वरान् ।
भिन्दन् सेनां महाघोरां युद्धावेशी गजो यथा ।।३८।।

शतं सहस्रं वीराणां सेनामध्ये जघान सः ।
निघ्नन्तं तं तथा दृष्ट्वा रुरुधुः परसैनिकाः।।३९।।

आकाशबाट बादलले निरन्तर जलधारा बर्साउँछ त्यसैगरी काशिराजको धनुबाट पनि कोशौंसम्म भू-भाग ढाकिने गरी बाणको वर्षा भइरहेको थियो ।।२९।। त्यो बाणवर्षाबाट अनेकौं दैत्यहरू मरे, कतिपय दैत्यका हात-खुट्टा भाँचिए, केही दैत्यका घाँटी काटिए, कसैका आँखा फुटे र कसैका जाँघहरू छुट्टिए । यो घटनापछि काशिराजका अमात्यहरू पनि सेनालाई सघाउन युद्धभूमिमा आए । तिनले पनि राजाको प्रेरणा पाएर आ-आफ्ना बञ्चरा र तरवारद्वारा सयौं शत्रुवीरहरूको हत्या गरे ।।३०-३२।। अमात्यहरूद्वारा आक्रान्त दैत्यसेनाका जवानहरूमध्ये केही सन्त्रस्त भई भागे, केही मारिए र केही भुइँमा लडे । त्यसपछि थपिन आएको दैत्यसेनाका जवानहरूले पनि आ-आफ्ना कठोर शस्त्रहरूको प्रहार गरेर काशिराजका सैनिकहरूलाई मार्न थाले ।।३३।। घनघोर संग्राम भयो, चारैतिर अन्धकार छायो, सेनाको खुट्टाको पाउबाट उडेको धूलोले दिनलाई रात तुल्यायो । त्यस अवस्थामा वीरहरूले प्रहार गर्दा आफ्ना पक्षका र शत्रुपक्षका सैनिकहरूलाई चारैतिर धूलैधूलो भएका कारण नचिनेर समानरूपमा आक्रमण गरे । यो मेरो र यो तेरो भन्ने कुरा थाहा हुनसकेन ।।३४।। केही वीरहरू आपसमा मल्लयुद्ध गरिरहेका थिए । केही वीर घोडामा र केही वीर हात्तीमा सवार भएर नरान्तकका पैदल सैनिकहरूका साथ युद्ध गरिरहेका थिए । काशिराजको पैदल सेनाका वीरहरू पनि रथमा सवार भएका वीर र बाणधारी वीरहरूका साथ भयङ्कर युद्ध गरिरहेका थिए । यसरी त्यहाँ अत्यन्त डरलाग्दो युद्धको वातावरण सिर्जियो । काशिराजको सेनाबाट परास्त भएका दैत्यसैनिकहरू पिठ्यूँ फर्काएर भाग्न थाले । विजयी बनेका काशिराजले पनि विजयको हर्षमा सिंहनाद गरे । हर्षित भएका काशिराज आफैं शस्त्र लिएर युद्धको मैदानमा आएका शत्रुसेनाका ठूला-ठूला वीरहरूमाथि जाइलागे । जसरी उन्मत्त हात्तीले युद्धकालमा आफ्नो उन्मादले शत्रुको हात्तीमाथि आक्रमण गरिरहेको हुन्छ त्यसैगरी काशिराज पनि शत्रुसेनालाई भेदन गर्दै अगाडि बढे ।।३५-३८।। तिनले हजारौं हजार वीरहरूलाई मारे । विजयको उन्मादमा शत्रुसेनामाथि आक्रमण गरिरहेका काशिराजलाई दैत्य वीरहरूले आएर रोके ।।३९।।

राजाऽयमिति बुद्ध्वा ते सर्व एव समाययुः।
तच्छराणां महावृष्टिं सोढ्वा दध्रुर्बलादमुम् ।।४०।।

अमात्ययोस्तु पुत्राभ्यां सह ते दैत्यपुङ्गवाः।
सेनाचरा महाशब्दं धृतो राजेति चक्रिरे।।४१।।

ततः सेनाचरा राज्ञो धृताः केचित् पलायिताः।
मृताः केचित् क्षताः केचिच्छरणं केऽपि तान् ययुः।।४२।।

महावने महोक्षेव बलवद्भिर्वृकैरिव।
अमात्यपुत्रसहितं निन्युर्दूता नरान्तकम् ।।४३।।

दग्धा च नगरी सर्वाऽनिवार्यैः सैनिकैस्तु सा।
ततो नरान्तकः स्वीयान् जगाद वीरसत्तमान् ।।४४।।

यदर्थमागता वीरास्तत्कार्यं सिद्धमेव नः।
न मेऽस्ति गणना तस्य मुनिपुत्रस्य साम्प्रतम् ।।४५।।

जिते प्रभौ जिता सेना जिते दुर्गे जितं पुरम् ।
काशिराजे जिते बालो जित एव न संशयः।।४६।।

अथानेष्यति राजाऽयं बालं निग्रहतोऽधुना।
एवमुक्त्वा ययौ वाद्यनिर्घोषैः स तथा पुरीम् ।।४७।।

काशिराजं पुरस्कृत्य स्तूयमानोऽथ बन्दिभिः।
यच्छन् वस्तूनि बन्दिभ्यो ददौ विप्रेभ्य एव च ।।४८।।

दैत्यसेनाका वीरहरूले युद्धमा वीरता देखाउने व्यक्ति कुनै सामान्य वीर नभई स्वयं काशिराज हुन् भन्ने जानेर सबै एकै ठाउँमा एकत्रित भई काशिराजले प्रहार गरेको शस्त्र वर्षालाई सहन गर्दै काशिराजलाई बलपूर्वक समाते ।।४०।। अमात्यका पुत्रहरूको नेतृत्वमा लडिरहेका दैत्यवीरहरूले काशिराजलाई समातियो भनी हर्ष र उल्लासपूर्वक भयङ्कर गर्जन गरे ।।४१।। काशिराजका सैनिकहरूमध्ये केही समातिए, केही भागे, केही मरे, केही घाइते भए र केही शत्रुसेनाको शरणमा गए ।।४२।। घोर जङ्गलमा बलवान् ब्वाँसाहरूद्वारा समातिएको साँढेझैं शत्रुसेनाद्वारा समातिएका र अमात्यपुत्रहरूका साथ रहेका काशिराजलाई नरान्तकका दूतहरूले नरान्तकसामु पुऱ्याए ।।४३।। त्यसपछि नरान्तकका दुर्जेय बल भएका सैनिकहरूले सम्पूर्ण काशी नगरीमा आगो लगाइदिए । त्यसपछि नरान्तकले आफ्ना सैनिकहरूलाई सम्बोधन गर्दै भन्यो- 'हे वीरहरू ! हामी जुन उद्देश्यले काशीमा आएका थियौं त्यो उद्देश्य पूरा भएको छ। अहिले म कश्यपपुत्र गणेशलाई कुनै वीरको रूपमा गणना गर्न चाहन्नँ ।।४४-४५।। राजालाई जितेपछि त्यसको सेना स्वतः जितिन्छ । शत्रुका किल्ला कब्जा गरेपछि शत्रुको राजधानी पनि कब्जामा आएको हुन्छ। त्यसैगरी काशिराज-माथि विजय प्राप्त गरेपछि गणेशनामक बच्चालाई पनि जितिएको छ । यसमा कुनै सन्देह छैन ।।४६।। वास्तवमा हाम्रो वशमा परेको काशिराजले हाम्रो दबाब परेपछि आफै आएर गणेशनामक बच्चालाई यहाँ बुझाउनेछ ।' यसो भनेर नरान्तक विजयको बाजा-गाजाका साथ राजधानीतर्फ लाग्यो ।।४७।। बन्दी बनाइएका काशिराजलाई अगाडि लगाएर स्तुतिपाठकहरूद्वारा गरिएको प्रशंसा वचन श्रवण गर्दै राजधानी जान भनी हिँडिरहेको नरान्तकले स्तुतिपाठकहरूलाई उपहार र ब्राह्मणहरूलाई अनेक थरि दान प्रदान गऱ्यो ।।४८।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे राजनिग्रहो नाम सप्तपञ्चाशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'नरान्तकद्वारा बाँधिएका बन्दी काशिराजको चिन्तनीय स्थिति' शीर्षकान्वित सन्ताउन्नौं अध्याय पूर्ण भयो ।।५७।।

ॐ

## अष्टपञ्चाशोऽध्यायः { ५८ अध्याय }

क उवाच

अर्धमार्गं गतो यावद्धर्षेणाऽसौ नरान्तकः।
तावदेव श्रुतं काशिराजपत्न्या धृतो नृपः ।।१।।

अत्यन्तं सा शुशोचाथ पौरा ये चावशेषिताः।
आक्रन्दः सुमहानासीन्मत्स्यानां निर्जले यथा।।२।।

अम्बा सा पतिता भूमौ धृते भर्तरि वैरिभिः।
मूर्च्छिता च विवर्णाऽभूद् रम्भा वातहता यथा।।३।।

सखीभिः सहिताऽरोदीद् रुदती प्राब्रवीत् तदा ।

अम्बोवाच

सिंहखेलो गजानीकहन्ता यो रिपुमर्दनः।।४।।

शृगालतुल्यदैत्येन स कथं विधृतो बलात् ।
क्व गतं मत्तमातङ्गसहस्रबलशालिनः।।५।।

बलं भर्तुर्मदीयस्य दैत्यकोटिहरस्य ह।
कथं रुष्टो महेशो मे कदा द्रक्ष्ये निजं पतिम् ।।६।।

कं देवं शरणं यामि यस्तं शीघ्रं विमोचयेत् ।
कश्यपस्यास्य बालस्य वराद् युद्धं कृतं वरम् ।।७।।

तद्धि सर्वं वृथा जातं राज्ञि मूढत्वमागतम् ।
यो बालवचनाच्छ्रेष्ठैर्विरोधं कृतवान् वृथा ।।८।।

को जयेत् तं महादैत्यं भर्तृग्राहं नरान्तकम् ।
विना सर्वैः कथं कल्पकालः प्राप्तो हताशया ।।९।।

अहञ्च धरणी चापि कथं वैधव्यमागता।
न तादृशः क्वापि जातो करुणाब्धिः शरण्यदः ।।१०।।

**ब्रह्माजीले भन्नुभयो** - नरान्तकले काशिराजलाई बन्दी बनाई हर्षपूर्वक प्रस्थान गरी राजधानी पुग्न आधा बाटो काटिसकेपछि काशिराजकी पत्नी अम्बाले आफ्ना पतिलाई नरान्तकले बन्दी बनाएको कुरा सुनिन् ।।१।। त्यसपछि तिनले अत्यन्त पीर गरिन् । तिनका साथमा रहेका नगरवासीहरू पनि चिन्तामग्न भए । काशीमा ठूलो कोलाहल भयो । माछाहरू पानीबाट बाहिर आउँदा जसरी तड्पिन्छन् त्यसैगरी काशीका नर-नारीहरू तड्पिन थाले । आफ्ना श्रीमान्लाई दानवहरूले बन्दी बनाएको चोटले काशिराजकी पत्नी अम्बा भुइँमा लडिन् र केहीबेर मूर्च्छित भइन् । होशमा आएपछि पनि तिनको अनुहारको रङ्ग उडेकै थियो । जसरी हावाले हल्लाउँदा केराको थाम भुइँमा ढलेको हुन्छ, अम्बाको हालत त्यस्तै थियो ।।२-३।। ती सखीहरूका साथमा बसेर रुँदै भन्न लागिन् ।

**अम्बाले भनिन्** - मेरा श्रीमान् काशिराज सिंहसँग खेल्नुहुन्थ्यो, हात्तीका झुण्डलाई परास्त गर्नुहुन्थ्यो र शत्रुको बगाललाई लखेट्नु हुन्थ्यो । त्यस्ता मर्द राजालाई आज स्यालसमान तुच्छ दैत्यले कसरी बन्दी बनायो ? हजारौं हात्तीसमान बल धारण गर्ने पराक्रमी मेरा पति काशिराजको त्यो बल कहाँ गयो ? ।।४-५।। कुनै बेलामा करोडौं दैत्यको संहार गर्ने उहाँको सामर्थ्य देखेकी मैले आज उहाँ बन्दी बन्नुभएको कुरा कसरी पत्याऊँ ? किन भगवान् शङ्कर मसँग रिसाउनु भयो? म आफ्ना श्रीमान्लाई कहिले देख्न पाउनेछु ? ।।६।। आज म कुन देवताको शरणमा जाऊँ जसले मेरा पतिलाई मुक्त गर्न सक्छन् । कश्यप ऋषिका बालक पुत्रको वरदान पाएर मेरा श्रीमान्ले जुन युद्ध गर्नुभएको थियो त्यो सारा व्यर्थ भयो । मेरा श्रीमान् मोहमा पर्नुभयो र बालकका कुरा पत्याएर बलवान्सँग व्यर्थमा विरोध गर्नुभयो ।।७-८।। मेरा श्रीमान्लाई बन्दी बनाउने महादैत्य नरान्तकलाई कसले जित्न सक्ला ? आज आफ्ना श्रीमान् र उहाँका सहयोगीहरू नभएकी यो काशी नगरीमा निराश भएकी मैले कसरी कल्पसमान काल व्यहोर्नु पर्‍यो । आज पति नभएकाले म विधवासमान भएकी छु र काशीकी धर्ती पनि त्यस्तै भएकी छन् । करुणासागर मेरा पतिलाई मुक्त गराउने र शरण दिने महापुरुष कोही देखिँदैन ।।९-१०।।

मुनिरुवाच

एवं तच्छोकमाकर्ण्य कश्यपस्यात्मजो बली।
शब्देन महताऽगर्जद् ब्रह्माण्डस्फोटकारिणा।।११।।

प्रतिशब्देन गगनं जगर्ज च दिशोऽपि च।
चकम्पे धरणी सर्वा सपर्वतवनाकरा।।१२।।

पक्षिण: पतितास्तेन मृता भ्रान्ता जनास्तदा।
तत: सिद्धिं समालोक्य क्रोधव्याकुललोचन:।।१३।।

क्व गताऽसि महायुद्धप्रसङ्गे प्राह तामिति।
सा तदाशयमालक्ष्य चक्रे नानाविधाञ्चमूम् ।।१४।।

विकरालमुखा वीरा: प्रादुरासन् सहस्रश:।
हलदन्ता: सर्पजिह्वा नरा: पर्वतमस्तका:।।१५।।

दारितास्यास्तु भूगोलमकस्माद् ग्रसयिष्णव:।
आस्यानलं विमुञ्चन्त: शतनेत्रा महाबला:।।१६।।

येषां नासारन्ध्रगता न दृश्यन्ते महागजा:।
सूर्याचन्द्रामसौ येषां श्वासान्निपतितौ भुवि ।।१७।।

जटाभि: पृथिवी येषां सर्वा सम्मार्ज्यते भृशम् ।
सहस्रयोजनहस्ता द्विगुणाश्च तदङ्घ्रय:।।१८।।

तेषां तु नायक: क्रूरो विनायकसमीपत:।
आगत: परिपप्रच्छ किं कार्यं वद मे प्रभो ।।१९।।

देहि मे क्षुधितस्यादौ भक्ष्यं तृप्तिकरं प्रभो।
इत्युक्तवन्तं पुरुषमुवाच स विनायक:।।२०।।

भक्षयस्व महासेनां नरान्तकसुपालिताम् ।
हत्वा तु तच्छिरो मह्यमानयस्व त्वरान्वित:।।२१।।

नत्सैन्येन न तृप्तिश्चेद् दास्ये भक्ष्यान्तरं तव।
एवमाज्ञामनुप्राप्य नत्वा तं कश्यपात्मजम् ।।२२।।

**मुनिले भने** - महारानी अम्बाको शोकाकुल वचन सुनेर कश्यपपुत्र बलवान् भगवान् श्रीगणेशले तत्कालै ब्रह्माण्डलाई नै फुटाउन सक्ने घोर गर्जन गर्नुभयो ।।११।। त्यस गर्जनको ध्वनिले आकाश र दिशाहरू पनि प्रतिध्वनित भए। पर्वत, वन र खानीहरूले युक्त भएको सम्पूर्ण पृथिवीमण्डल काँप्न थाल्यो ।।१२।। त्यस गर्जनका कारण चराहरू रूखबाट खस्न थाले र बाटामा हिंडिरहेका बटुवाहरू चक्कर खाएर मर्न थाले । त्यस बेला श्रीगणेशले आफ्नी प्रियतमा सिद्धिलाई हेरेर क्रोधले राता आँखा गराउँदै भन्नुभयो- तिमी यस्तो महायुद्धको बेला कहाँ गएकी थियौ? आफ्ना पति श्रीगणेशको आशय जानेर सिद्धिले तत्कालै अनेक थरि सेना पैदा गरिन् ।।१३-१४।। डरलाग्दो अनुहार भएका असंख्य वीरहरू धमाधम प्रकट हुन थाले । तीमध्ये कसैका दाँत हलाको आकारका थिए, कसैका जिब्रा सर्पजस्ता थिए, कसैका टाउका पर्वतकै आकारका थिए । तिनीहरू मुख बाएर सम्पूर्ण भूगोललाई नै एकै गासमा निल्ने गरी क्रोध देखाउँदै आइरहेका थिए । तिनका मुखबाट अग्निज्वाला प्रकट भइरहेको थियो । कुनै हजार आँखा भएका महाबली वीरहरू पनि थिए । ती वीरहरूका नाकको प्वालभित्र पसेका हातीहरू त्यहीं बिलाउँथे। तिनीहरूका श्वासबाट सूर्य र चन्द्रमा पनि कम्पायमान भएका थिए।।१५-१६।। ती वीरहरूको जटाले एकैचोटिमा सम्पूर्ण पृथिवी बढारेजस्तो देखिन्थ्यो । तिनका हातहरू चारहजार कोश लामा थिए र खुट्टाहरू आठ हजार कोश लामा देखिन्थे ।।१७-१८।। करोडौंको संख्यामा रहेका सैनिकहरूका नायक क्रूरनामक वीरले भगवान् श्रीगणेशसामु आएर जिज्ञासा गरे - 'हे प्रभु ! म हजुरको कुन आज्ञा पालन गरूँ? म अहिले साह्रै भोको छु। सबभन्दा पहिले हजुरले मलाई तृप्त गराउने भोजनको व्यवस्था गर्नुहोस् ।' ती वीरपुरुषको कुरा सुनेर श्रीगणेशले भन्नुभयो - 'हे सेनानायक! नरान्तक दैत्यद्वारा रक्षित करोडौंको संख्यामा रहेको दैत्यसेनालाई खाएर तिमीले आफ्नो भोक मेटाऊ । त्यसपछि नरान्तकलाई मारी शीघ्रतापूर्वक त्यसको टाउको लिएर म भएको ठाउँमा आऊ ।।१९-२१।। नरान्तकका सम्पूर्ण सैनिकहरूलाई खाँदा पनि तिम्रो भोक मेटिएन भने म तिमीलाई अरू खानेकुरा दिनेछु ।' यसरी कश्यपपुत्र श्रीगणेशको आज्ञा

महाक्ष्वेडितशब्दन्तु कृत्वा यातो नरान्तकम् ।
तस्य क्ष्वेडितशब्दस्य तादृग्रूपेण सैनिकाः ।।२३।।

नरान्तकोऽपि भीतास्ते दुद्रुवुस्ते दिशो दश।
हस्ते धृत्वा तु तान् सर्वान् मुखमध्ये समाक्षिपत् ।।२४।।

उद्दुधूल रजो भौमं न प्राज्ञायत किञ्चन।
अन्धकारे महाघोरे दीपिकाभिर्व्यलोकयन् ।।२५।।

तं दृष्ट्वा पुरुषं घोरं केचित् प्राणान् प्रजह्रिरे।
ताँश्चापि जीवतः सर्वांस्त्वरया भक्षयत्यसौ ।।२६।।

नरान्तकस्तु दृष्ट्वैवं सर्वसैन्यविनाशनम् ।
अतर्कयत् स्वमनसा कृतान्तस्यान्तकोऽपरः।।२७।।

आगतः किं मया कार्यं दृश्यते बलवानयम् ।
एवं वदन् ददर्शाऽथ सेनामर्द्धान्तु भक्षिताम् ।।२८।।

प्रलयानलवच्चायं पृतनां हरते बलात् ।
निःशेषामेव कर्ताऽमुमगस्त्य इव वारिधिम् ।।२९।।

दैत्यसेनाचराः सर्वे महाशब्दान् प्रचक्रिरे।
केचिच्च भक्षितास्तेन चूर्णिताः पादघाततः।।३०।।

श्वासानिलाहताः केचित् केचिद् भीत्यैव मम्रिरे।
परस्परोपरि तदा वीरा निपतिताः परे।।३१।।

याहि याहीहि वल्गतुं चुक्रुशुस्तं नरान्तकम् ।
कराघातेन निहतान् भक्षयत्येष तत्क्षणात् ।।३२।।

असङ्ख्यभक्षणादस्य न शान्तो जठरानलः।
अश्वारोहा गजारोहाः पदाता रथसादिनः।।३३।।

पाएर ती वीर उहाँलाई प्रणाम गरी महासिंहनाद गर्दै नरान्तक दैत्यको समीपमा पुगे । तिनको सिंहनादको अद्भुत स्वर सुनेर नरान्तकका सैनिक र स्वयं नरान्तक पनि डराई दसै दिशातिर भाग्न थाले । क्रूरले ती सबैलाई हातमा समातेर आफ्नो मुखको गास बनाए ।।२२-२४।। त्यस बेला पृथिवीको समग्र वातावरण धूलैधूलाले ढाकिएको थियो । कहाँ के भइरहेको छ भन्ने कुरा कसैले पनि जान्न सक्दैनथ्यो । दिउँसै डरलाग्दो अन्धकार फैलिएपछि मानिसहरूले बत्ती बालेर वस्तुहरूलाई हेर्न सकेका थिए ।।२५।। घोर आकारका ती क्रूरनामक वीरलाई देखेर कति मानिसहरूले त डरले प्राणपरित्याग नै गरे । ती मरेका र अनि जिउँदा सबै प्राणीहरूलाई क्रूरले तीव्र वेगमा आफ्नो गास बनाइरहेका थिए ।।२६।। नरान्तकले आफ्ना सबै प्रकारका सैनिक र अरू प्राणीहरूको समेत नाश भएको देखेर मनमा विचार गर्दै भन्यो - 'के यो दोस्रो यमराज हो ? मैले अहिले के गर्नु उचित हुन्छ ? हेर्दा यो मभन्दा बलवान् छ ।' यसरी मनमा तर्क गरिरहेको नरान्तकले आफ्नो सेनाका आधाभन्दा बढी वीरहरूलाई क्रूरले खाएको कुरा पत्तो पायो ।।२७-२८।। प्रलयको अग्निसमान लाग्ने यो अनौठो वीरले मेरो सेना सखाप पारिरहेको छ । अगस्त्यले समुद्रपान गरेझैं यसले धर्तीलाई नै मानवरहित तुल्याउने त होइन ? यसरी नरान्तकले मनमा तर्क गरिरहेको थियो । त्यस बेला बाँचेका दैत्यसैनिकहरू ठूलो शब्दले त्रासपूर्ण कोलाहल गर्न थाले । तीमध्ये पनि केहीलाई क्रूरनामक वीरले खाए र केहीलाई खुट्टाले प्रहार गरेर धूलोपीठो बनाए ।।२९-३०।। कसैलाई तिनले श्वासको प्रहारबाट मारे । कति प्राणीहरू त तिनलाई देख्नासाथ डरले आफै मरे । मरेका वीरहरूका लाश एउटामाथि अर्को गरी खापिएका थिए ।।३१।। केही बाँचेका वीरहरू हे नरान्तक ! तपाईं हाम्रो रक्षा गर्न आउनुहोस् भनिरहेका थिए । उता क्रूरले आफ्नो बाहुको प्रहार गरेर बाँकी सेनालाई मार्दै खाँदै गरिरहेका थिए । नरान्तकका असंख्य सैनिकहरूलाई खाँदा पनि तिनको पेटको आगो शान्त भएको थिएन । तिनले घोडसवार सैनिक, हात्तीमा सवार सैनिक, रथमा सवार सैनिक र पैदल सैनिकहरू सबैलाई नै खाइसकेका थिए ।।३२-३३।। ती वीरले युद्धमा रहेका

भक्षिता निहता वाहा गजाश्चानेकशो मुने ।
एवं कोलाहलं श्रुत्वा सज्यं कृत्वा धनुर्बलात् ।।३४।।

धरण्यां जानुनी स्थाप्य शरानुभयतस्तथा।
आदाय धनुराकृष्य शरवृष्टिं तदाऽकरोत् ।।३५।।

ततोऽन्धकारमभवच्छरवृष्टिकृतं पुन:।
पक्षिण: पतिता भूमौ राज्ञो भृत्या अनेकश:।।३६।।

स गीलयति पुरुषो बाणान् दैत्यसमीरितान् ।
असङ्ख्याता: शरास्तस्य रोमकूपेषु निर्गता:।।३७।।

स्रवन्तो रुधिरं सर्वे न जानात्यणुवेदनाम् ।
प्रादुश्चक्रे ततोऽस्त्राणि पौरुषेण नरान्तक: ।।।३८।।

तान्यस्त्राण्यगिलत् सर्वाण्यण्डान्याजगरी यथा ।
कुण्ठितास्त्र: क्षीणशस्त्रो नष्टसायकसञ्चय: ।।३९।।

क्षीणशक्ति: पपालासौ दैत्यराजो नरान्तक:।
स कालपुरुषस्तस्य पृष्ठ एवालगत् तदा ।।४०।।

बभ्राम भूतले दैत्योऽपश्यत् पृष्ठे तु तं यदा।
तदा स्वर्गं जगामाशु भयात् तस्य नरान्तक:।।४१।।

पुन: पृष्ठे च तं दृष्ट्वा पपात धरणीतले।
तत्रापि तं ददर्शाथ प्राविशद्धरणीतलम् ।।४२।।

स कालपुरुष: केशे ततो दध्रे नरान्तकम् ।
विलं विशन्तमुरगं गरुडोऽतिबलं यथा।।४३।।

ततो नरान्तकं प्राह पुरुष: स बलान्वित:।
क्व गमिष्यसि दृष्ट: सन् ममाग्रे त्वं नरान्तक:।।४४।।

ईश्वरस्य वरान् मत्तो वृथा देवर्षिपीडनम् ।
मनुष्याणाञ्च संहारमनन्तानां महाखल।।४५।।

तव संहरणे दुष्टावतीर्णोऽस्ति विनायक: ।
अहङ्कारञ्च सकलं त्यक्त्वा तं शरणं व्रज।।४६।।

घोडा र हात्तीलाई मारिसकेका थिए । त्यहाँ जीवित प्राणीहरूको कोलाहल चलिरहेको थियो । त्यो सुनेर तिनले आफ्नो धनुषमा बाण सन्धान गरेर दुई घुँडाले पृथिवीमा टेकी धनुषको ताँदो खिचेर बाणवर्षा गराउन थाले ।।३४-३५।। बाणवर्षाका कारण युद्धभूमिमा कालो अन्धकार छायो । चराहरू भुइँमा खस्न थाले । राजाका अनेक अनुयायी र सेवकहरू पनि शस्त्रअस्त्रको प्रहारबाट मर्न थाले ।।३६।। नरान्तकले प्रतिकारको रूपमा बर्साएका बाणहरूलाई ती वीरले निल्न थाल्यो । क्रूरका रोमकूपहरूबाट असंख्य बाण पैदा हुन थाले ।।३७।। ती बाणहरूको प्रहारका कारण दैत्यसैनिकहरूका शरीरबाट रगतको धारा बग्न थाल्यो । नरान्तकले त्यो दृश्य देखेर आफ्नो पुरुषार्थबाट अनेकौं थरि अस्त्रहरूको आविष्कार गऱ्यो ।।३८।। ती सबै शस्त्र-अस्त्रलाई क्रूरले एकैचोटिमा निलिदिए । जसरी अजगरले अण्डाहरूलाई निल्ने गर्दछ त्यसैगरी तिनले पनि ती शस्त्र-अस्त्रलाई निलेका थिए । त्यसपछि अस्त्र कुण्ठित भएको, शस्त्र क्षीण भएको, बाणहरू सकिएको र शक्ति समाप्त भएको दैत्यराज नरान्तक निरुपाय भएर युद्धभूमिबाट भाग्यो । नरान्तक भाग्न लाग्दा ती कालपुरुष क्रूर पनि त्यसको पिठ्यूँमा सवार भए ।।३९-४०।। क्रूरलाई पिठ्यूँमा बोकेर त्यो दैत्य नरान्तक आत्तिदै धर्तीका सबै भागमा घुम्न थाल्यो । कहीं पनि त्यसले शान्ति पाएन । त्यसपछि त्यो स्वर्गमा पुग्यो । त्यहाँ पुग्दा पनि त्यसले आफ्नो पिठ्यूँमा रहेका क्रूरलाई देख्यो। त्यसपछि त्यो भयभीत भएर त्यहाँबाट धर्तीमा फर्क्यो ।।४१-४२।। धर्तीमा आउँदा पनि त्यसले आफ्नो पिठ्यूँमा क्रूरलाई देख्यो । जसरी प्वालभित्र गइरहेको सर्पलाई गरुडले समात्ने काम गर्दछ त्यसैगरी भाग्न लागिरहेको नरान्तकलाई ती क्रूरनामक कालपुरुषले केशमा समाते ।।४३।। त्यसपछि तिनले नरान्तकलाई भने - 'हे नरान्तक ! अब तँ मेरा आँखाका सामु परेको छस्, कहाँ जान सक्छस् ? भगवान् शङ्करको वरदान पाएर उन्मत्त भएको तैंले व्यर्थमा देवता र ऋषिहरूलाई दुःख दिइस्, असंख्य निरपराध प्राणीहरूलाई मारिस् । हे दुष्ट! तैरै संहार गर्नका निमित्त आज भगवान् श्रीगणेशले कश्यप ऋषिका पुत्रका रूपमा अवतार लिनुभएको छ । तँ यदि आफ्नो कल्याण चाहन्छस् भने सम्पूर्ण अहङ्कार त्याग गरेर उहाँको शरणमा जाने काम गर् ।।४४-४६।। श्रीगणेशका

अघानि ते विनश्यन्ति दृष्ट्वा तत्पादपङ्कजम् ।
इत्युक्त्वा तं बलाद् दैत्यमानिनाय नरान्तकम् ।।४७।।

विनायकस्य निकटे दैत्यराजं परं ततः।
उवाचाथ प्रणम्यासौ स्वामिनं तं विनायकम् ।।४८।।

भक्षितं सर्वसैन्यं त आज्ञां प्राप्य महत्तरम् ।
अत्यन्तं क्लेशितोऽनेन धृत्वैनं त्वां समानयम् ।।४९।।

मम निद्रास्थलं यच्छ श्रमापनुत्तये विभो !
सर्वेषाञ्च सुखायास्य मुक्तिं यच्छ विनायक ।।५०।।

एवं तद्वाक्यमाकर्ण्य तं विभुः प्रत्यभाषत ।
मम वक्त्रान्तर्गतस्त्वं निद्रां प्राप्नुहि स्वेच्छया ।।५१।।

इत्याकर्ण्य महावाक्यं विनायकमुखोद्गतम् ।
तन्मुखं प्रविवेशाथ तद्रूपं समपद्यत।।५२।।

यथा गन्धो धराजातस्तत्रैव परिलीयते ।
तथा विनायकाज्जातस्तत्रैव लयमाप्तवान् ।।५३।।

य इदं शृणुयाद् भक्त्या महदाख्यानमुत्तमम् ।
सर्वान् कामानवाप्याऽथ मुक्तिञ्च लभते ध्रुवम् ।।५४।।

चरणकमलको दर्शन पाएर तेरा सबै पाप नष्ट हुनेछन् ।' यसरी उपदेश दिएर कालपुरुष क्रूरले बलपूर्वक नरान्तकलाई समाती भगवान् श्रीगणेशका सामु पुर्‍याए । त्यहाँ पुगेर भगवान् श्रीगणेशका पाउमा प्रणाम गरी क्रूरले निवेदन गरे– 'हे प्रभु! हजुरको आज्ञा पाएर मैले दैत्यको ठूलो सेनालाई आफ्नो आहार बनाएको छु। नरान्तकले धेरै प्राणीहरूलाई पीडा दिएका कारण यसलाई जिउँदै समातेर हजुरका सामु ल्याएको छु ।।४७–४९।। अब हजुरले जे गर्नुपर्छ गर्नुहोस् । मलाई भने अत्यन्त थकाइ लागेको छ । कहाँ गएर म निदाउने हो त्यो ठाउँ मलाई बताउनुहोस् । हे प्रभु ! यो बाँचिरहेसम्म प्राणीमात्रले सुख र शान्ति प्राप्त गर्न सक्दैनन् । तसर्थ सबैको कल्याणका लागि यसको संहार गर्नुहोस् ।।५०।।' श्रीगणेशले कालपुरुषका वचन सुनेर भन्नुभयो – 'हे कालपुरुष! तिमीले मेरो मुखभित्र पसेर इच्छानुसार निद्रालाभ गर।' श्रीगणेशका मुखबाट निस्केको वचन सुनेपछि ती कालपुरुष क्रूरले श्रीगणेशका मुखभित्र प्रवेश गरे। प्रवेश गर्नासाथ ती श्रीगणेशकै रूपमा परिणत भए । धर्तीबाट पैदा हुने गन्ध जसरी धर्तीमै बिलाउँछ त्यसैगरी श्रीगणेशबाट पैदा भएका ती कालपुरुष श्रीगणेशमै विलीन भए ।।५१–५३।। जसले यो उत्तम आख्यान भक्तिपूर्वक सुन्दछ त्यसले आफ्ना सम्पूर्ण कामनाहरूका फल प्राप्त गर्दछ । अन्तमा भगवान् श्रीगणेशको कृपाबाट मुक्ति पनि प्राप्त गर्दछ । यसमा कुनै सन्देह छैन ।।५४।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे नरान्तकनिग्रहो नामाष्टपञ्चाशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'श्रीगणेशद्वारा कालपुरुष रूपधारण र नरान्तकमाथि निग्रह' शीर्षकान्वित अन्ठाउन्नौं अध्याय पूर्ण भयो ।।५८।।

ॐ

## ऊनषष्टितमोऽध्यायः { ५९ अध्याय }

मुनिरुवाच

विनायकेन बालेन कृतः स पुरुषः कृतः।
येन तद् भक्षितं सैन्यमानीतः स नरान्तकः ।।१।।
एतन्मे प्रकटं ब्रूहि संशयोऽत्र महान् मम ।

क उवाच

यन्निर्गुणं परं ब्रह्म तदेतत् सगुणं बभौ ।।२।।
विनायकस्वरूपेण ब्रह्मविष्णुशिवात्मकम् ।
भूभारहरणार्थाय दुष्टानां निधनाय च।।३।।
पालनाय स्वधर्मस्य बिभ्रतेऽनन्तरूपताम् ।
स एव सृजते विश्वं पाति हन्ति स्वतेजसा ।।४।।
अपेक्षते स लोकानां निमित्तं नियतिं पराम् ।
न चात्र संशयः कार्योऽनेकमायामये विभौ ।।५।।
तदिच्छया सर्वमिदं जगद्धि परिवर्तते।
इदानीं तस्य मायान्ते कथयिष्यामि विस्तरात् ।।६।।
अमात्यपुत्रसहितो नरान्तकधृतो नृपः।
यावन्न पत्तनं प्राप तावत्कालं पुमानसौ।।७।।
भक्षयामास तां सेनां दैत्येन परिपालिताम् ।
विनायकेन पुरुषो मुखेऽसौ निहितस्तदा।।८।।
राजामात्यकुमारौ च सोऽपि ते सर्व एव तु।
जठरे तस्य देवस्य ददृशुः सकलं जगत् ।।९।।
सप्तद्वीपवतीं पृथ्वीं पर्वतद्रुमसंयुताम् ।
सरित्सागरवापीभिस्तडागैर्मानवैः श्रिताम् ।।१०।।
देवगन्धर्वमुनिभिः सिद्धयक्षनिशाचरैः।
पन्नगैरप्सरोभिश्च शोभितं स्वर्गमण्डलम् ।।११।।
पातालानि च सप्तानि भ्रमन्तो ददृशुस्तदा ।
एवं ते जठरे तस्य कोष्ठे कोष्ठे पृथक् पृथक् ।।१२।।

(२५) **मुनिले भने**- कश्यपका छोरा बालक श्रीगणेशले त्यस्तो विचित्र पुरुषार्थ भएका पुरुषको रचना कसरी गर्नुभयो? कसरी त्यस पुरुषले नरान्तकका सेनाको संहार गर्‍यो र त्यसलाई श्रीगणेशका सामु ल्यायो ? यस विषयमा मलाई ठूलो सन्देह छ । तपाईँले प्रत्यक्ष रूपमा चित्त बुझाएर मेरो सन्देह निराकरण गर्नुहोस् ।

**ब्रह्माजीले भन्नुभयो**- जुन निर्गुण परब्रह्म हुनुहुन्छ उहाँ नै मायाको आश्रय लिई सगुणका रूपमा सुहाउनुहुन्छ।।१-२।। आज उहाँ भूभारहरण गर्न र दुष्टहरूको विनाश गर्न ब्रह्मा, विष्णु एवं शिव तीनवटै देवताका पुञ्जीभूत स्वरूप श्रीगणेश बनेर प्रकट हुनुभएको छ।।३।। उहाँले स्वधर्मको रक्षाका लागि अनन्त स्वरूप धारण गर्नुहुन्छ । उहाँले नै विश्वब्रह्माण्डको रचना गर्नुहुन्छ, पालन गर्नुहुन्छ र आफ्नै तेजले त्यसको संहार पनि गर्नुहुन्छ ।।४।। श्रीगणेशले मानिसहरूको नियति र कर्मका कारणहरू केलाएर तदनुसारका कर्मफल प्रदान गर्नुहुन्छ । अनेक मायाका स्वामी, सर्वव्यापक परमेश्वर श्रीगणेशका क्रियाकलापको विषयमा कसैले पनि सन्देह गर्नुहुँदैन ।।५।। श्रीगणेशकै इच्छाबाट सम्पूर्ण जगत् परिवर्तित हुन्छ । अहिले म तपाईँलाई विस्तारपूर्वक उहाँको मायाशक्तिका विषयमा उपदेश गर्नेछु ।।६।। मन्त्री र छोरासहित नरान्तकद्वारा बन्दी बनाइएका काशिराज काशी नगरीमा नपुग्दासम्म गणेशद्वारा निर्मित कालपुरुषले दैत्यसेनाको संहार गरिरहेका थिए । भगवान् श्रीगणेशले ती पुरुषलाई पछिबाट आफ्नो मुखभित्र विलीन गराउनुभयो ।।७-८।। काशिराज, तिनका मन्त्री र पुत्र सबैले भगवान् श्रीगणेशकै पेटभित्र सम्पूर्ण ब्रह्माण्ड अडिएको देखिरहेका थिए ।।९।। पर्वत र वृक्षले सम्पन्न, सात द्वीपले बनेको, नदी; सागर; तलाउ र सरोवरले सुहाएको, अनेक मानवहरूको आश्रयस्थल पृथिवी, देवता, गन्धर्व, मुनि, सिद्ध, यक्ष, निशाचर, सर्प, अप्सरा आदिद्वारा शोभायमान स्वर्गमण्डल र सातै प्रकारका पातालहरूसमेत भगवान् श्रीगणेशको पेटभित्र चक्कर काटिरहेका थिए । भगवान्का पेटभित्र शरण लिएका काशिराज आदि दर्शकहरूले श्रीगणेशका पेटका प्रत्येक

ददृशुर्भ्रान्तमनसो ब्रह्माण्डनिचयान् बहून् ।
खिन्नास्ते शरणं जग्मुर्देवदेवं विनायकम् ।।१३।।

मनसा प्रार्थयामासुस्तदा देवं विनायकम् ।
भ्रान्तानां खिन्नचित्तानां कृपां कुरु कृपानिधे ।।१४।।

ततस्तान् बालरूपेण मार्गमादर्शयद् विभुः।
ततो रोमाञ्चमार्गेण बहिर्याता यथा पुरा।।१५।।

ददर्श काशिराजः स्वं नगरं भद्रमेव च ।
कश्यपस्यात्मजं बालं क्रीडन्तं तं विनायकम् ।।१६।।

तत्प्रसादादाप्तबुद्धिर्नुनाव परया मुदा।
ज्ञाता ते परमा माया मया कुक्षिगतेन च।।१७।।

त्वमेव कर्ता देवानां मनुष्याणां दिशामपि।
सर्गाणां सागराणाञ्च सरितां बलिसद्मनाम् ।।१८।।

यतस्ते रोमकूपेषु ब्रह्माण्डानां हि कोटयः।
दृष्टा भ्रान्तेन च मया प्रसादात् तव नाथ भोः ।।१९।।

आश्चर्यं बहुधा दृष्टं मया तव च विश्ववित् ।
अहं युद्धाय सम्प्राप्तो ध्वजिनी पुनरागता।।२०।।

नरान्तकस्य सैन्येन सा जिता तत्क्षणादनु ।
अमात्यपुत्रसहितो नरान्तकमुपाद्रवम् ।।२१।।

विधृतस्तेन सहसा सैन्यं जित्वा मम क्षणात् ।
दग्धा च नगरी सर्वा दृष्टः स कालपूरुषः ।।२२।।

तेनापि भक्षिता तस्य सेना नानाविधा क्षणात् ।
धृत्वा नरान्तकं यातः पुरुषः स तवान्तिकम् ।।२३।।

सर्वे त्वदुदरं यातास्तत्र दृष्टोऽसि मे प्रभो ।
सर्वं दृष्टञ्च तत्रापि जम्बुद्वीपं सविस्तरम् ।।२४।।

एवं कोष्ठान्तरे दृष्टं भूतलञ्च सविस्तरम् ।
ततो हि खिन्नास्त्वां याताः शरणं जगदीश्वर ।।२५।।

ग्रन्थिभित्र अलग-अलग अनेक ब्रह्माण्डहरूको दर्शन गरे । यसको रहस्यबाट अपरिचित र खिन्न भएका ती सबै अन्तमा देवदेव श्रीगणेशको शरणमा गए ।।१०-१३।। तिनीहरूले मनबाट भगवान् श्रीगणेशको प्रार्थना गर्दै भने – 'हे प्रभु ! हामी भ्रान्तिमा पर्‍यौं, हाम्रो चित्त खिन्न छ, हामीमाथि कृपा गर्नुहोस् ।।१४।।' त्यसपछि भगवान् श्रीगणेशले तिनीहरूलाई बालकको रूपमा दर्शन दिएर मार्गदर्शन गराउनुभयो। अनि भगवान् श्रीगणेशकै रोमाञ्चमार्गबाट ती सबै बाहिर आए । बाहिर आउँदा काशिराजले मङ्गलमय काशी नगरीको दर्शन गरे र त्यहाँ खेलिरहेका कश्यपनन्दन श्रीगणेशको पनि दर्शन पाए।।१५-१६।। उहाँकै कृपाबाट बुद्धि प्राप्त गरेका काशिराजले परम प्रसन्नताका साथ श्रीगणेशलाई वन्दना टक्र्याए । हात जोडेर प्रार्थना गर्दै भने- 'हे प्रभु! हजुरकै शरीरको काखीभित्र विलीन भएका हामी सबैले हजुरको आदि-अन्तहीन मायाको ज्ञान गर्ने अवसर पायौं। हजुर देवता, मनुष्य, दिग्दिगन्तर, सृष्टि, सागर, नदी, पाताल आदि सबैका कर्ता हुनुहुन्छ । हजुरका रोमकूपहरूमा कोटिकोटि ब्रह्माण्डहरू अवस्थित छन् । ती सबैको दर्शन गरेर म भ्रान्तिमा परें । हजुरको कृपा भएपछि मात्र मायाको महत्त्व बुझें । हे विश्वका ज्ञाता! मैले त्यहाँभित्र अनेक आश्चर्यहरूको दर्शन पाएँ। हे प्रभु ! मेरा कुरा हजुरलाई निवेदन गर्दछु । म नरान्तकसँग युद्ध गर्न आएको थिएँ । मेरा पछिपछि मेरो विशाल सेना पनि आइपुग्यो ।।१७-२०।। नरान्तकको सेनाले तत्कालै मेरो सेनामाथि विजय प्राप्त गर्‍यो । मन्त्री र छोरासमेत मलाई बन्दी बनायो। त्यसले काशीमा आगो लगायो । त्यसपछि हजुरको कृपाले मैले कालपुरुषको दर्शन पाएँ। कालपुरुषले नरान्तकको असंख्य सेनालाई तत्काल खाएर समाप्त पारे । नरान्तकलाई समातेर ती कालपुरुष हजुरका सामु आए । त्यसपछि हामी हजुरकै पेटभित्र विलीन भयौं । त्यहाँ मैले हजुरको दर्शनका साथै हजुरका पेटभित्र असंख्य ब्रह्माण्डहरूको पनि दर्शन पाएँ र विस्तारपूर्वक मैले जम्बूद्वीपका अङ्ग-प्रत्यङ्ग देख्ने अवसर पाएँ । हजुरकै पेटको अर्को कोष्ठमा मैले विस्तारपूर्वक पृथिवीको पनि सम्पूर्ण रूपमा दर्शन पाएँ। हजुरको र हजुरका मायाको आदि र अन्त जान्न नपाएर म हजुरकै शरणमा आएको थिएँ ।।२१-२५।।

तदाज्ञया तु रोमाञ्चद्वारेण निर्गता बहिः।
दृष्टोऽसि बालस्त्वं निजञ्च भवनं महत् ।।२६।।

किमिदं कौतुकं देव! मायाजालमिदं विभो।
कश्चासौ पुरुषो देव ! येनाभक्षि महाचमूः।।२७।।

केनासौ विधृतो दैत्यो रक्षितश्चापि केन च।
केनादर्शि च रोमाञ्चद्वारं निर्गमनाय च ।।२८।।

इति मे संशयं देव ! नुद भक्तस्य यत्नतः ।

क उवाच

एवं तेन कृतः प्रश्नो मस्तके तस्य धीमतः ।।२९।।

विनायकः करतलं कृपया निदधार ह।
दिव्यज्ञानोऽभवद् राजा काशिराजस्तु तत्क्षणात् ।।३०।।

तुष्टाव परया भक्त्या देवदेवं विनायकम्।

राजोवाच

त्वमेव ब्रह्मा विष्णुश्च महेशो भानुरेव च।।३१।।

त्वमेव पृथिवी वायुरन्तरिक्षं दिशो द्रुमाः।
त्वत्तः सहिताः सिद्धा गन्धर्वा यक्षराक्षसाः।।३२।।

मुनयो मानवाश्चापि स्थावरं जङ्गमं जगत् ।
त्वमेव सर्वं देवेश ! सचेतनमचेतनम् ।।३३।।

जन्मान्तरीयपुण्येन दृष्टोऽसि कश्यपात्मज।

क उवाच

एवं ब्रुवति राजेन्द्रे मोहयामास तत्क्षणात् ।।३४।।

ततो राजा पुपूजैनं विनायकमनामयम् ।
ततः पौरा हर्षयुता राजानं द्रष्टुमाययुः।।३५।।

नत्वा नत्वा ददुस्तस्मै वस्त्राण्याभरणानि च।
राजाऽपि दापयामास तेभ्यो वस्त्राण्यनेकशः।।३६।।

विसृज्य लोकांस्तान् सर्वान् जननीमभ्यगात्ततः।
तव प्रसादान्मातस्ते दृष्टं पादयुगं मया।।३७।।

त्यसपछि हजुरको आज्ञाले अमात्य र पुत्रसहित म हजुरको शरीरबाट रोमकूपको द्वार उघारी बाहिर आएँ। अहिले काशीमा आउँदा हजुरलाई कश्यपका बालक पुत्रका रूपमा देख्न पाएँ र आफ्नो राजभवनको पनि दर्शन पाएँ ।।२६।। हे प्रभु ! हजुरको कस्तो कौतूहलपूर्ण यो मायाजाल हो ? जसको आदि अन्त मलाई थाहा छैन । ती कालपुरुष को हुन् ? जसले नरान्तकको सम्पूर्ण सेनालाई खाइदिए, कसले दैत्यलाई समात्यो, हाम्रो रक्षा गऱ्यो र हामीलाई रोमाञ्चको द्वारबाट बाहिर निस्कने बाटो देखायो? मेरा यी प्रश्नका विषय हुन् । हजुरले निराकरण गरिदिनुहोस्।'

**ब्रह्माजीले भन्नुभयो** - काशिराजका प्रश्न सुनेर बाल विनायकले बुद्धिमान् काशिराजको शिरमा कृपापूर्वक आफ्नो वरदहस्त राखिदिनुभयो । श्रीगणेशको वरदहस्त शिरमा पर्नासाथ काशिराजलाई दिव्य ज्ञान प्राप्त भयो ।।२७-३०।। तिनले परम भक्तिपूर्वक देवताका पनि देवता श्रीगणेशको स्तुति गरे ।

**काशिराजले भने-** 'हे विनायक ! हजुर नै ब्रह्मा, विष्णु, शङ्कर र सूर्य पनि हुनुहुन्छ ।।३१।। हजुर नै पृथिवी, वायु, अन्तरिक्ष, दिशा र वृक्ष पनि हुनुहुन्छ । हजुर नै सिद्ध, गन्धर्व, यक्ष, राक्षस, पर्वत, मुनि र मानव पनि हुनुहुन्छ । हे प्रभु ! धेरै के भनूँ ? आँखाबाट देखिने स्थावर र जङ्गम रूपमा रहेको यो जगत् नै हजुर हुनुहुन्छ । हे विनायक ! चेतन र अचेतन सम्पूर्ण पदार्थ हजुरकै रूप हुन् ।।३२-३३।। हे कश्यपनन्दन! आज मैले जन्म-जन्मान्तरका पुण्यले हजुरको दर्शन पाएँ ।'

**ब्रह्माजीले भन्नुभयो** - काशिराजले यसरी प्रार्थना गरेपछि भगवान् श्रीगणेशले तिनलाई मोहमा पार्नुभयो ।।३४।। त्यसपछि तिनले निर्मल स्वरूपले सुहाउनुभएका श्रीगणेशको पूजा गरे । काशीनगरका निवासीहरू पनि काशिराजको आगमन भएको कुरा थाहा पाएर दर्शनका लागि सहर्ष आए ।।३५।। ती सबैले काशिराजलाई प्रणाम गरेर वस्त्र र आभूषण प्रदान गरे । काशिराजले पनि आफ्नो दर्शनका लागि आएका नर-नारीहरूलाई अनेक थरि वस्त्र प्रदान गरे । त्यसपछि सबैलाई बिदा गरी काशिराज आफ्नी आमाको दर्शन गर्न गए । आमाका सामु प्रार्थना गर्दै भने - 'हे आमा ! हजुरको कृपाबाट आज मैले चरणकमलको दर्शन गर्ने अवसर पाएँ ।।३६-३७।।

गृहीतो दैत्यराजेन देवदेवेन रक्षितः।
ततो हर्षयुता माताऽऽलिलिङ्ग तं चिरागतम् ।।३८।।

अमात्यौ राजपत्नीं तां नत्वाऽऽहतुरुभौ तदा।
तव पुण्यप्रभावेण दृष्टन्ते चरणाम्बुजम् ।।३९।।

विनायकस्य मायाभिर्मोहिता मोचिताश्च ह ।
ततस्तत्र ययौ राजा भार्यामम्बां जगाद च।।४०।।

निवृत्तेषु च लोकेषु हर्षगद्गदया गिरा ।

राजोवाच

परमं कष्टमापन्नो धृतो दैत्येन तत्क्षणात् ।।४१।।

मोचितो माययाऽनेन प्रापितो नगरं निजम् ।

क उवाच

शुशुभे नगरं तच्च नानावादित्रनिस्वनैः।।४२।।

पताकाभिरनेकाभिर्विविधैश्च महोत्सवैः।
प्रत्यानीतैः सर्वलोकैर्विनायकबलेन च।।४३।।

कुमाराः कन्यकाश्चापि योषितः पतयोऽपि च ।
जनकाश्च जनन्यश्च पुत्राश्च भ्रातरस्तथा।।४४।।

लिलिङ्गुश्च जहृषुश्च ददुर्दानान्यनेकशः ।
बुभुजुर्भोजयामासुर्लुलोकुश्च पपुर्जगुः।।४५।।

मलाई दैत्यराज नरान्तकले बन्दी बनाइसकेको थियो । मेरो जीवनको कुनै भरोसा थिएन, तर दयालु देवता श्रीगणेशले मेरो रक्षा गर्नुभयो ।' छोराका यी कुरा सुनेर खुसी भएकी आमाले धेरै कालपछि आफ्नासामु आएका छोरालाई आलिङ्गन गरिन्।।३८।। दुवै अमात्यहरूले पनि राजमाताको दर्शन र वन्दन गर्दै भने - 'हे महारानी ! हजुरका पुण्यप्रतापले चरणकमलको दर्शन गर्ने मौका पायौं ।।३९।। हामीलाई श्रीगणेशको मायाले मोहित गरायो र त्यसै मायाले छुटायो पनि ।' सबै मानिसहरू आ-आफ्नो स्थानमा गएपछि काशिराजले आफ्नी रानी अम्बासमक्ष गई हर्षले गद्गद वचनको उच्चारण गर्दै आफ्नो सम्पूर्ण वृत्तान्त सुनाए ।

**राजाले भने** - 'हे प्रियतमा ! ब्रह्माण्डको सबभन्दा बलियो दैत्यले मलाई बन्दी बनाएको हुँदा म अत्यन्त ठूलो कष्टमा थिएँ, तर श्रीगणेशको शक्ति र पराक्रमका कारण दैत्यको बन्धनबाट मुक्त भई म आज काशीमा आउन पाएँ ।'

**ब्रह्माजीले भन्नुभयो**- काशिराज नरान्तकको बन्धनबाट मुक्त भई काशीमा आएको खुसियालीमा बजेका बाजाहरूको ध्वनि, ध्वजापताका र अनेक थरि उत्सवहरूका आयोजनाका कारण काशी शोभायमान भयो । फेरि श्रीगणेशको शक्तिका कारण नरान्तकबाट मुक्त भएका मानिसहरूको उपस्थितिबाट पनि काशी रमणीय देखियो । त्यस बेला वीरहरूको आगमनबाट कुमार, कुमारी, पति, पत्नी, बाबु, आमा, छोरा, भाइ सबै प्रसन्न थिए । तिनले आफन्तहरूलाई आलिङ्गन गरे, खुसी मनाए, वस्तु दिने र लिने काम गरे, खाए, खुवाए अनि हेरे र पेय पदार्थको पान गरे-गराए ।।४०-४५।।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे राजमोक्षणं नामैकोनषष्टितमोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'श्रीगणेशको कृपाद्वारा नरान्तकको बन्धनबाट मुक्त काशिराजको काशी प्रत्यागमन' शीर्षकान्वित उनन्साठीऔं अध्याय पूर्ण भयो ।।५९।।

ॐ

## षष्टितमोऽध्याय:

क उवाच

ततो नरान्तको दृष्ट्वा विनायकविचेष्टितम् ।
मेधया तर्कयामास दृष्टमस्याद्भुतं महत् ।।१।।
काशिराजे धृते तेन निर्मित: कालपूरुष:।
अखिला वाहिनी तेन भक्षिता मम सर्वश:।।२।।
अमात्यपुत्रसहितो राजाऽसावुदरं गत:।
अव्यङ्गी बहिरानीतोऽदर्शि विश्वं नृपस्य ह।।३।।
अस्माद् भुक्तिश्च मुक्तिश्च भविता मे न संशय:।
तस्मादेनं हनिष्यामि मामयं वा हनिष्यति।।४।।
इत्येवं निश्चयं कृत्वा प्रोवाच स विनायकम् ।

दैत्य उवाच

ऐन्द्रजालिकविद्येयं दर्शिता बहुधा त्वया।।५।।
नाहं बिभेमि तस्यास्तु मायावी च नरान्तक:।
यस्य निश्वसितेनापि निपतन्ति महाद्रय:।।६।।
भ्रूक्षेपमात्रेण च मे ब्रह्माण्डं कम्पते भृशम् ।
यस्य हस्ततलाघाताद् भूगोलोऽपि द्विधा भवेत् ।।७।।
तेन त्वं बालरूप: सन् कथं युद्धं करिष्यसि।
यो व्याघ्रसम्मुखं गच्छेत् स कथं सुखमेष्यति।।८।।

क उवाच

इति ब्राह्मीं समाकर्ण्य नरान्तकसमीरिताम्।
अब्रवीत् परमात्माऽसौ बालरूपी विनायक:।।९।।

विनायक उवाच

किमर्थं वल्गसे मूढ! यदा ते पृतनाऽखिला।
भक्षिता क्व गता शक्तिर्यदर्थं कथ्यते मुहु:।।१०।।
शूरा: शौर्यं दर्शयन्ति न गां परबलारुजाम्।
वृश्चिकेनाल्पकायेन मृगेन्द्रो हन्यते क्षणात् ।।११।।
अल्पेन हि प्रदीपेन नश्यते प्रबलं तम:।
यस्य सन्निहितो मृत्यु: सन्निपातात् स लीयते।।१२।।

## { ६० अध्याय }

**ब्रह्माजीले भन्नुभयो** - नरान्तक दैत्यले श्रीगणेशको लीला देखेर बुद्धिद्वारा अनुमान गर्‍यो - 'यी ठूलो पराक्रम भएका अद्भुत पुरुष हुन् । यिनको अद्भुत कर्म मैले देखें । काशिराजलाई बन्दी बनाएपछि तिनलाई छुटाउन श्रीगणेशले अत्यन्त शक्तिशाली वीर कालपुरुषको रचना गरे । त्यस कालपुरुषले मेरा करोडौंको संख्यामा रहेका सैनिकहरूलाई खायो । अमात्य र छोरासहित काशिराज पनि श्रीगणेशको पेटभित्र विलीन भए । आफ्नो शरीरभित्र विलीन भएका राजालाई श्रीगणेशले जस्ताको तस्तै रोममार्गबाट बाहिर निकाले र विश्वब्रह्माण्डको दर्शन गराए।।१-३।। अवश्य नै गणेशबाट मैले भुक्ति र मुक्ति पाउनेछु । यसमा सन्देह छैन। म विरोधीको रूपमा चिनिइसकें । त्यस कारण म श्रीगणेशसँग युद्ध गर्दछु। सके तिनलाई मार्छु, नसके तिनकै हातबाट मर्छु। मलाई दुबै दृष्टिबाट कल्याण नै प्राप्त हुनेछ।' नरान्तकले यसरी निश्चय गरेर श्रीगणेशलाई भन्यो ।।४।।

**नरान्तकले भन्यो** - 'हे गणेश ! तिमीले धेरै प्रकारका जादूविद्या मलाई देखायौ। म तिम्रो जादूबाट डराउने प्राणी होइन। म पनि ठूलो मायावी छु । मैले श्वास लिंदा पर्वतहरूबाट पहिरो जान्छ, मैले आँखीभौं कपाउँदा ब्रह्माण्ड काँप्न थाल्दछ र मैले एक थप्पड लगाउँदा पृथिवी पनि दुई टुक्रामा परिणत हुनसक्छ। तिमी बालक छौ । मसँग कसरी युद्ध गर्छौ ? जुन बच्चा बाघको नजिकमा जान्छ, के त्यो बाँच्न सक्छ?'।।५-८।।

**ब्रह्माजीले भन्नुभयो** - नरान्तकले भनेको वाणी सुनेर परमात्मा बालरूप श्रीगणेशले भन्नुभयो ।।९।।

**विनायकले भन्नुभयो** - 'हे मूर्ख ! तँ किन बक्‌बक् गरिरहेको छस् ? जब तेरो विशाल सेनालाई एउटा कालपुरुषले आएर खाइरहेको थियो त्यस बेला तेरो शक्ति कहाँ गयो? शूरहरूले शूरता देखाएर आफ्नो शक्ति प्रमाणित गर्छन्, बोलेर होइन। सानो बिच्छीले पनि ठूलो सिंहलाई मार्न सक्छ ।।१०-११।। सानो बत्तीले विशाल अन्धकारलाई नाश गर्न सक्छ र सानो आँकुसेले हात्तीलाई वशमा तुल्याउँछ । तैंले सानो भनेर हेला गर्नु हुँदैन।

अल्पेन सृणिना मत्तमातङ्गो हि नियम्यते ।

क उवाच

इति श्रुत्वा तु वाक्यानि देवप्रोक्तानि दैत्यराट् ।।१३।।

चकम्पे परया भीत्या जगर्ज घनवद् दृढम् ।।१४।।

भीषयन् रोदयन् रावैः कम्पयन् भूमिमण्डलम् ।
अधावत् परमावेशो हन्तुकामो विनायकम् ।।१५।।

यथा पतङ्गो दीपार्चिर्हन्तुं याति त्वरान्वितः।
त्रिवक्रां भ्रुकुटीं बद्ध्वा वमन्नास्येन पावकम्।।१६।।

तं तथा यान्तमालोक्य काशिराजो निजं धनुः।
सज्जीचकार सहसा कर्णमाकृष्य सायकम्।।१७।।

उवाच साम्ना दैत्यं तं निर्लज्जं बद्धमोचितम् ।
मा जीवं त्यज दैत्येन्द्र ! जीवन् भद्राणि पश्यसि।।१८।।

परावृत्य प्रयाहि त्वं नो चेन्मृत्युं प्रयास्यसि।

क उवाच

इति तद्वाक्यमाकर्ण्य प्राह दैत्यो रुषा ज्वलन् ।।१९।।

नरान्तकेति मे नाम त्वादृशानां हि भक्षणात् ।
इदानीं शरणं याहि यदि जीवितुमिच्छसि।।२०।।

पुनर्नृपोऽब्रवीद् वाक्यं मुमूर्षुं तं नरान्तकम् ।
विनाशसमये मूढ ! विपरीता मतिर्भवेत् ।।२१।।

मित्राणि शत्रुतां यान्ति विपरीतेऽप्यनेहसि।
त्वयाप्याचरितं पापं वरगर्वादनेकशः।।२२।।

वरस्यैव प्रभावेण न वज्रं गणितं त्वया।
इदानीमवतीर्णोऽयं त्वादृशानां वधाय च।।२३।।

कश्यपस्यात्मजो भारं हर्तुं भूमिगतं दृढम् ।
वरः पुण्यञ्च शिथिलं जातं ते पापसञ्चयात् ।।२४।।

सानै लगामबाट पनि उन्मत्त गजराजलाई नियन्त्रणमा ल्याउन सकिन्छ । जसको नजिकै मृत्यु हुन्छ त्यो पागल बनेर अनावश्यक कुरा बोलिरहेको हुन्छ । मलाई लाग्छ, तेरो मृत्यु नजिकमा आइसकेको छ' ।।१२।।

**ब्रह्माजीले भन्नुभयो** - श्रीगणेशका यी कुरा सुनेर डरले दैत्यराज नरान्तक थर्थर काँप्यो तर बादलझैं ठूलो स्वरले कठोर गर्जन गर्न भने छोडेन ।।१३-१४।। त्यसपछि सम्पूर्ण संसारलाई भयभीत तुल्याउँदै, प्राणीहरूलाई रुवाउँदै र दसै दिशामा घोर आवाज प्रतिध्वनित गराउँदै ठूलो क्रोधको आवेशका साथ गणेशलाई मार्ने इच्छाले नरान्तक दौडियो ।।१५।। जसरी पतङ्ग वेगपूर्वक बत्तीको आगो निभाउन जान्छ त्यसैगरी त्यो दानव आफ्नो बाङ्गो आँखीभौं देखाउँदै र मुखबाट आगो ओकल्दै श्रीगणेशका सामु आक्रान्ता बनेर आइपुग्यो । श्रीगणेशमाथि आक्रमण गर्न आउने त्यस दानवलाई देखेर काशिराजले पनि कानसम्म बाण खिचेर आफ्नो धनुलाई बाण प्रहारका लागि तम्तयार बनाए।।१६-१७।। तिनले दैत्यलाई भने- 'हे दैत्य! तँ मृत्युको मुखमा आउने प्रयास नगर् । मृत्युभन्दा जीवन नै भलो हुन्छ। जिउँदो मानिसले अनेक कल्याणकारी कुराहरू देख्न सक्छ ।।१८।। त्यस कारण तँ फर्केर जा, नत्र मृत्युको मुखमा पर्नेछस्।'

**ब्रह्माजीले भन्नुभयो** - काशिराजका यी कुरा सुनेर रीसको आगोमा डढेको नरान्तकले भन्यो - 'हे काशिराज ! तँजस्ता मानिसहरूलाई मृत्युको मुखमा पुऱ्याउने स्वभाव भएकै कारण मेरो नाम नरान्तक रहेको हो । तँ जीवन चाहन्छस् भने मेरो शरणमा आउनुपर्छ' ।।१९-२०।। नरान्तकका कुरा सुनेर काशिराजले फेरि भने – 'हे नरान्तक ! तेरो मृत्यु नजिकै छ । त्यस कारण तेरो बुद्धि विपरीत भएको छ। समय विपरीत भएपछि मित्र पनि शत्रु बन्दछन् । तैंले शिवबाट प्राप्त वरदानको घमण्डले अनेक पाप गरिस् ।।२१-२२।। वरकै प्रभावले तैंले इन्द्रका वज्रको पनि वास्ता गरिनस् । अहिले तँजस्ता दुष्टहरूको वध गर्न र पृथिवीको भार हरण गर्न भगवान् श्रीगणेश कश्यपका छोरा बनेर आउनुभएको छ । तैंले गरेका पापराशिका कारण तैंले पाएको वरदान पनि शक्तिहीन भएको छ । तेरा पुण्यहरू निष्क्रिय बनेका छन् ।।२३-२४।। काशिराजका यी कुरा सुनेर

[illegible]नामेवमाश्रुत्य चकम्पे हृदि दैत्यराट् ।
[illegible]यित्वा नृपकराब्जगृहे सशरं धनुः।।२५।।

[illegible]च्चिक्षेप भूमौ तच्छतधा च व्यशीर्यत।
[illegible]मुष्टिघातेन तं नृपं स नरान्तकः।।२६।।

[illegible]: स धरापृष्ठे वज्राहत इवाचलः।
[illegible] विनायकोऽधावत् सृणिहस्तो महाबलः।।२७।।

[illegible]न् गगनं सर्वं दिशश्च विदिशः स्वनैः।
[illegible] पृथिवी सर्वा दिशः प्रज्वलिता इव।।२८।।

[illegible] परशोस्तस्य सर्वदृष्टिहरेण च।
[illegible] दैत्यशिरो यथेन्द्रो गिरिमुत्कटम् ।।२९।।

[illegible] हतो दैत्यराजो निपपात महीतले।
[illegible] महतीं प्राप्तो मर्मभिन्नो यथाश्मना ।।३०।।

[illegible] क्षणाद् दैत्यो हस्ताभ्यां पर्वतावुभौ।
[illegible] च प्रचिक्षेप विनायकजिघांसया ।।३१।।

[illegible] चूर्णितौ तेन मुदा परशुघातिना।
[illegible] दैत्यराजोऽथ नानारूपधरोऽभवत् ।।३२।।

[illegible] रूपञ्चकाराशु तत् तद् रूपं विनायकः।
[illegible] चकाराशु तेन तेन महासुरम् ।।३३।।

[illegible] शस्त्राणि संवार्य तथाऽस्त्रैरस्त्रसञ्चयम् ।
[illegible] मल्लयुद्धेन युयुधाते परस्परम् ।।३४।।

[illegible]गेनैव हस्तं हस्तेन जघ्नतुः।
[illegible] जानुनी चोभौ पुष्पिताविव किंशुकौ।।३५।।

[illegible] चैव वक्षश्च पेततुर्धरणीतले।
[illegible] बलिनौ कूर्पराभ्यां निजघ्नतुः।।३६।।

[illegible] महादेवं स्मृत्वा वृक्षानवासृजत् ।
[illegible] धावन्तौ ललाटेन ललाटकम् ।।३७।।

दैत्यराज नरान्तक मनमनै काँप्यो । त्यसले दौडेर गई काशिराजको हातमा रहेको धनु खोस्यो । धनुलाई भुइँमा प्रहार गर्दा त्यो सयौं टुक्रा भएर फैलियो। त्यसपछि नरान्तकले अत्यन्त रिसाएर काशिराजको ज्यानमा मुड्की प्रहार गर्‍यो । त्यो मुड्की खप्न नसकी काशिराज भुइँमा लडे। काशिराजलाई त्यस अवस्थामा देखेर हातमा अँकुसे लिनुभएका महाबली भगवान् श्रीगणेश आफ्नो गर्जनबाट आकाश, दिशा र विदिशालाई प्रतिध्वनित गराउँदै दौडेर आउनुभयो । भगवान् श्रीगणेशको सबैका आँखाको तेज हरण गर्ने परशुको तेजबाट पृथिवीमा कम्पन भयो र दिशाहरू अग्निज्वालाले परिपूर्ण देखिए ।।२५-२८।। श्रीगणेशले अत्यन्त चम्किलो बञ्चरो हातमा लिएर इन्द्रले प्राचीन समयमा पर्वतहरूका प्वाँख काटेझैं त्यस दैत्यको टाउको काट्नुभयो । टाउको काटिंदा घाइते भएको दैत्यराज नरान्तक भुइँमा लड्यो । ढुंगाले च्याँपिएको मानिसले जसरी मर्मान्तक पीडा भोग्दछ त्यसैगरी मर्मान्तक पीडा भोग्न नसकेर त्यो मूर्च्छित भयो। केही बेरपछि होशमा आएको नरान्तकले आफ्ना हातबाट दुईवटा ठूला पर्वत उचालेर श्रीगणेशमाथि प्रहार गर्‍यो । परशुधारी श्रीगणेशले परशुको प्रहारबाट ती दुबै पर्वतलाई सय-सय टुक्रामा परिणत गराउनुभयो । त्यसपछि दैत्यराज नरान्तक मायाको प्रयोग गरी अनेक रूपमा प्रकट भयो ।।२९-३२।। त्यसले जुन-जुन र जस्ता-जस्ता रूप लियो, श्रीगणेशले पनि त्यस्तै रूप धारण गर्नुभयो । आफ्ना ती ती रूपहरूबाट श्रीगणेशले नरान्तकको घमण्ड तोडिदिनुभयो ।।३३।। त्यसपछि श्रीगणेश र नरान्तकको बीचमा शस्त्रशस्त्र र अस्त्रअस्त्रबाट युद्ध भयो। ती दुबै वीरहरूले शस्त्रद्वारा शस्त्र र अस्त्रद्वारा अस्त्र काटिरहेका थिए। त्यसपछि तिनीहरूले मल्लयुद्ध गरे ।।३४।। खुट्टाले खुट्टामा, हातले हातमा, घुँडाले घुँडामा प्रहार गरिरहेका ती वीरहरू पलाशको फूलझैं रक्ताम्य भए।।३५।। त्यसपछि दुबै वीर छातीले छातीमा प्रहार गर्दै भुइँमा लडे । फेरि उठेर तिनीहरूले कुहिनाले कुहिनामा प्रहार गर्न थाले ।।३६।। त्यसपछि नरान्तक दैत्यले भगवान् शङ्करको ध्यान गरेर अनेक प्रकारका रूखहरूको सृष्टि गर्‍यो। ती दुबै वीर एकले अर्कामाथि रूखको प्रहार गर्दै युद्ध गर्न

स्रवन्तौ रुधिरञ्चोभौ गुल्फाभ्यां गुल्फमेव च।।३८।।

पर्वताँश्च सवृक्षाँश्च विनायकजिघांसया।
अप्राप्तानेव तान् सर्वाँश्चिच्छेद स विनायकः।।३९।।

पद्मपाशाङ्कुशाघातैः परशोर्दृढकर्मणा।
तस्यां निवारितायान्तु दैत्योऽमुञ्चत् तथा पराम् ।।४०।।

वृष्टिमन्यां तथा चान्यां निरस्तां वीक्ष्य चापराम् ।
काशिराजो ययौ दूरं मृतं ज्ञात्वा विनायकम् ।।४१।।

विनायकोऽपि संक्लेशाद् हृदि चिन्तामथाकरोत् ।
असङ्ख्यातबलो दैत्यो जयोपायो न दृश्यते।।४२।।

कदा देवाः स्वनिलयं प्राप्स्यन्ति निहतारयः।
नरान्तकोऽपि सञ्जातो देवानामप्यथान्तकः।।४३।।

एवं चित्ते चिन्तयति वारं वारं विनायके।
तूणेषु पतिता बाणाः कालदण्डोपमा दृढाः।।४४।।

पिनाकोऽष्टापदमयः पुरस्तस्य पपात ह।
शोभयँस्तेजसा स्वेन दिशश्च विदिशोऽपि च।।४५।।

कार्मुकं तु स्फुरत्कान्ति दृष्ट्वा सर्वं जहर्ष सः।
मेने जितं तञ्च दैत्यं सिद्धञ्च देवकाङ्क्षितम् ।।४६।।

जग्राह बाणान् कोदण्डं कृत्वा क्ष्वेडितमुच्चकैः।
पिनाकं तोलयामास सज्यञ्चक्रे धनुस्तदा ।।४७।।

पृथिव्यां जानुनी स्थाप्य तूणौ चोभयतस्तथा।
तद्धनुःशब्दमाकर्ण्य चकम्पे भुवनत्रयम् ।।४८।।

थाले । पिण्ढ्यूँद्वारा पिण्ढ्यूँमा र निधारद्वारा निधारमा प्रहार गरेर ती दुबै वीर युद्ध गरिरहेका थिए । दुबैका शरीरबाट रगतका धारा बगिरहेका थिए । त्यसपछि दुबै आ–आफ्ना गोलीगाँठाबाट गोलीगाँठामा प्रहार गर्न थाले । नरान्तक दैत्यले श्रीगणेशलाई मार्ने इच्छाले प्रहार गरेका पर्वत र रूखलाई श्रीगणेशले आफूमाथि नलाग्दै बीचमा नै काटिदिनुभयो ।।३७–३९।। त्यसपछि श्रीगणेशले पद्म, पाश र अङ्कुशको प्रहार गर्दै बञ्चरो उचालेर त्यसमाथि प्रहार गर्नुभयो । त्यसपछि नरान्तक दैत्यले आफ्नो मायाबाट मुसलधारे वर्षा गऱ्यो । त्यसलाई पनि श्रीगणेशले निवारण गर्नुभयो । दैत्यले फेरि शस्त्रको वर्षा गर्दा त्यसलाई श्रीगणेशले निवारण गर्नुभयो । यसैगरी अनेक पटक वृष्टि गर्ने र निरोध गर्ने क्रम त्यहाँ चलिरहेको थियो । त्यस बेला भगवान् श्रीगणेशलाई नरान्तकले मारेको शङ्काले काशिराज उद्विग्न भए। भगवान् श्रीगणेश पनि अत्यन्त क्लेशको अनुभव गर्दै हृदयमा चिन्ता गर्न लाग्नुभयो- 'यो दैत्य असङ्ख्य बलसम्पन्न छ। यसलाई जित्ने उपाय केही देखिंदैन ।।४०–४२।। देवताहरू यस नरान्तक दैत्यको कारागारमा रहेर दुःखका दिन काटिरहेका छन् । ती शत्रुको नाश गरी कहिले आफ्नो धाममा फर्किन पाउनेछन् ? नाम त यसको नरान्तक हो तर यो देवताहरूका निमित्त पनि यमराज बनिरहेको छ ।' यसरी श्रीगणेशले बारबार मनमा कुरा खेलाइरहनुभएको बेला अचानक असंख्य बाण खसेर श्रीगणेशका ठोक्राहरू भरिए । त्यसपछि आफ्नो तेजद्वारा चारै दिशा र विदिशालाई सौन्दर्यमय तुल्याउने स्वर्णमय पिनाकनामक धनु पनि श्रीगणेशका सामु खसेको देखियो । चमत्कारजनक कान्तिले सुन्दर पिनाक धनु देखेर श्रीगणेश प्रसन्न हुनुभयो । त्यसपछि उहाँले मनमा सोच्नु भयो – 'अब मैले अवश्य नै नरान्तकलाई जित्नेछु र देवताहरूको चाहना पनि परिपूर्ण हुनेछ।' श्रीगणेशले आफ्ना दुबै घुँडा जमिनमा टेकाएर आफ्ना दुबै काँधमा ठोक्रो धारण गरी पिनाक धनु उचालेर त्यसलाई युद्धका लागि सजाउनुभयो । उहाँले एक–एक गरी ठोक्राबाट बाण झिकेर धनुमा सन्धान गर्दा गम्भीर धनुष्टङ्कार प्रकट भयो । धनुको टङ्कारले स्वर्ग, मर्त्य र पाताल यी तीनै लोक काँपे ।।४३–४८।। श्रीगणेशले दायाँ र बायाँ

सव्यदक्षिणहस्ताभ्यामाकृष्य सायकद्वयम् ।
मुमोच दैत्यमालक्ष्य मुञ्चन्नग्निकणान् मुहुः ।।४९।।

[illegible]ान दैत्यभुजयोरकस्मात् सायकद्वयम् ।
गर्जन् प्रकाशयद् व्योम संहरज्जीवसञ्चयान् ।।५०।।

[illegible]केव पातयामास भुजौ वृक्षाविवास्य तत् ।
[illegible]न्द्रो वज्रघातेन पर्वतस्येव सानुनी ।।५१।।

[illegible]न्तकद्वारदेशे महानेकोऽपतत् करः।
अपरस्त्वपितुर्द्वारि चूर्णयन् प्राणिसञ्चयान् ।।५२।।

अन्यावास्तां करौ तस्य ददर्श च विनायकः।
अभ्यधावत् पुनर्दैत्यो व्यादितास्य इवान्तकः ।।५३।।

[illegible]स्ताभ्यां तत्र पादाभ्यां चिक्षेप पादपान् बहून् ।
[illegible]णाञ्च महावृष्टिं प्राक्षिपत् स विनायके ।।५४।।

अन्धकारं महच्चासीन्न प्राज्ञायत किञ्चन।
[illegible]ोऽब्रवीद् दैत्यराजं दृष्ट्वा वीर्यं विनायकः ।।५५।।

हातबाट कानसम्म ताँदो खिचेर दैत्यलाई लक्षित गरी बाणको तीखो टुप्पाबाट अग्निका कण बर्साउँदै सर्वप्रथम दुईवटा बाण प्रहार गर्नुभयो । ती दुई बाणहरूले टङ्कार गर्दै, आकाशलाई चम्काउँदै र जीवहरूका प्राणहरण गर्दै उल्काकै रूपमा नरान्तकका वृक्षसमान दुई हातलाई टुक्र्याए ।।४९-५०।। यो घटना इन्द्रको वज्रप्रहारबाट पर्वतका चुचुरा खसेझैं देखियो। नरान्तक दैत्यको घरको ढोकामा त्यसको एउटा विशाल हात खस्यो भने अर्को हात प्राणीहरूलाई धूलोपीठो बनाउँदै त्यसकै पिताका घरको ढोकामा पुगेर खस्यो ।।५१-५२।। त्यस बेला नरान्तकका अरू दुई हात देखिए । भगवान् श्रीगणेशले तिनलाई राम्ररी हेर्नुभयो । त्यसपछि त्यो दैत्य यमराजझैं मुख बाएर श्रीगणेशमाथि जाइलाग्यो।।५३।। त्यसले हात र खुट्टाद्वारा अनेक रूख उचालेर श्रीगणेशमाथि वर्षा गर्‍यो ।।५४।। त्यस बेला युद्धभूमिमा घोर अन्धकार छायो । त्यहाँ के भइरहेको छ भन्ने कुरा जान्ने स्थिति रहेन। त्यसपछि श्रीगणेशले दैत्यराज नरान्तकको पराक्रम देखेर त्यसलाई सम्बोधन गर्दै भन्नुभयो ।।५५।।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे श्रीगणेशनरान्तकयुद्धवर्णनं नाम षष्टितमोध्याय:**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'श्रीगणेश र नरान्तकको युद्धवर्णन' शीर्षकान्वित साठीऔं अध्याय पूर्ण भयो ।।६०।।

ॐ

## एकषष्टितमोऽध्यायः { ६१ अध्याय }

विनायक उवाच

नेदृशो दृष्टपूर्वो मे बली च वीर्यवत्तरः।
इदानीं पौरुषं पश्य मम बालस्य चेष्टितम् ।।१।।

इत्युक्त्वा पुनरेवासौ बाणं तूणादकर्षयत् ।
आकर्ण धनुराकृष्य प्राक्षिपत् तं नरान्तकम् ।।२।।

प्रकाशयन् व्योमतलं पातयन् वृक्षसञ्चयम् ।
आन्दोलयन्निव ययौ पुष्पवत् तं नरान्तकम् ।।३।।

स बाणोऽच्छेदयत् तस्य चरणौ स पपात ह।
अर्धकाये निपतिते दैत्येऽगर्जद् विनायकः।।४।।

चरणौ व्योममार्गेण भ्रमन्तौ पतितौ गृहे।
देवान्तकस्य महति चूर्णयन्तौ बहून् जनान् ।।५।।

अर्द्धकायः स दैत्येन्द्रो मुखं कृत्वा भयानकम् ।
अभ्यधावद् बलेनासौ ग्रसन्निव जगत्त्रयम् ।।६।।

तथैव चरणावस्य मायया सम्बभूवतुः ।
विनायकस्य निकटे बभाषेऽभ्येत्य दैत्यराट् ।।७।।

त्वया यद् दर्शितं मह्यं पौरुषं कायभेदनात् ।
छेत्स्ये तवापि चाङ्गानि पश्य मे पौरुषं तथा।।८।।

श्रुत्वा वाक्यं पुनस्तस्य जगर्जासौ विनायकः ।
शरवृष्टिं पुना रौद्रां सोऽसृजद् दैत्यपुङ्गवे।।९।।

सोऽपि तां भक्षयामास सङ्ख्यातीतां महाबलः।
तत एकं महाबाणमभिमन्त्र्य विनायकः।।१०।।

अग्नितुण्डं रुक्मपुङ्खं गर्जमानं भयानकम् ।
आकर्ण ज्यामपाकृष्य तत्याज दैत्यमस्तके ।।११।।

स ययौ वायुवेगेन दारयन्निव पर्वतान् ।
संहरन् पक्षिसङ्घातान् पातयन् वृक्षसञ्चयान् ।।१२।।

(**श्रीगणेशले भन्नुभयो** - 'हे दैत्यराज ! तिमीजस्तो पराक्रमी र बलवान् पुरुष मैले आजसम्म देखेको थिइन । अब तिमीले म बालकको पनि पुरुषार्थ र युद्धकौशल हेर' ।।१।। यसरी आफ्नो विषयमा बताएर श्रीगणेशले ठोक्रोबाट बाण तान्नुभयो । कानसम्म धनुको ताँदो तानेर नरान्तकमाथि बाणको प्रहार गर्नुभयो ।।२।। आकाशलाई जाज्वल्यमान तुल्याउँदै, वृक्षहरूलाई भुइँमा खसाउँदै र नरान्तकलाई आन्दोलित अथवा कम्पित तुल्याउँदै फूलझैं हलुका लाग्ने त्यस बाणले लक्ष्यभेदन गर्ने क्रममा नरान्तकका दुवै खुट्टा छिनालिदियो । खुट्टा काटिएको त्यो दैत्य अचानक भुइँमा लड्यो । दैत्यको आधा शरीर चुँडिएको देखेर श्रीगणेशले गर्जन गर्नुभयो ।।३-४।। त्यसका दुवै खुट्टा आकाशमार्गमा चक्कर काट्दै र देवान्तकको विशाल दरबारमा रहेका अनेक दानवहरूलाई घाइते बनाउँदै खसेका थिए ।।५।। खुट्टा काटिनाले आधा शरीरमात्र बाँकी रहेको त्यो दैत्यराज नरान्तक आफ्नो मुख भयानक बनाएर बलपूर्वक स्वर्ग, मर्त्य र पाताललाई निल्न खोज्दै श्रीगणेशमाथि जाइलाग्यो ।।६।। खुट्टा काटिए तापनि माया प्रयोगबाट त्यसका नयाँ खुट्टा तयार भए । त्यसपछि श्रीगणेशका सामु आएर त्यसले भन्यो- 'हे गणेश ! तिमीले जसरी मेरो शरीर टुक्र्याएर आधा बनाएका छौ त्यसरी नै मैले पनि तिम्रा अङ्ग-प्रत्यङ्ग काटिदिनेछु । अब तिमीले पनि मेरो पुरुषार्थ हेर'।।७-८।। नरान्तकका यस्ता वचन सुनेर श्रीगणेशले गर्जन गर्नुभयो । त्यसपछि उहाँले दैत्यराजमाथि भयानक बाणवर्षा गर्नुभयो ।।९।। महाबली नरान्तकले पनि श्रीगणेशले बर्साएका असंख्य बाणलाई काटिदियो । त्यसपछि श्रीगणेशले एउटा विशाल बाणलाई अभिमन्त्रित गर्नुभयो । उहाँले धनुषको ताँदोलाई कानसम्म खिचेर टुप्पाबाट आगो बर्साउने, फेदमा सुवर्ण जडिएको र भयानक गर्जन गर्ने त्यस बाणलाई नरान्तकको मस्तक ताकेर प्रहार गर्नुभयो।।१०-११।। त्यो बाण वायुवेगले पर्वतहरूलाई टुक्रा-टुक्रा बनाउँदै, चरा-चुरुङ्गीहरूलाई मार्दै र वृक्षराशिलाई भुइँमा लडाउँदै लक्ष्यमा पुग्यो । बाणको स्वर सुनेर नरान्तक दैत्यका सैनिकहरू चारैतिर भाग्न थाले । त्यस बाणले पर्वतका

श्रुत्वा तदीयनिनदं ययु: सेना दिशो दश।
पपात दैत्यकण्ठे स गिरिसानौ यथा पवि:।।१३।।

तदाघाताच्छिरोऽप्यस्य पक्षिवद् गगनं ययौ।
न्यपतत् परिकूजत् तत् पितुर्गेहे भयानकम् ।।१४।।

पुनरन्यच्छिरोऽस्याभूदच्छिन्नमिव पूर्ववत् ।
तत: कोपेन दैत्योऽपि चक्रे क्ष्वेडितमुच्चकै:।।१५।।

बिभ्यु: सुरा: पक्षिसङ्घा: सर्वे च जनसञ्चया:।
शरवृष्टिं पुना रौद्राञ्चक्रे तस्मिन् विनायके ।।१६।।

स सर्वान् बाणवृष्ट्यैव मध्ये चिच्छेद लाघवात् ।
अहोरात्रमभूद् युद्धं गिरिबाणमयं नवम् ।।१७।।

परिशश्राम देवोऽपि सोऽपि दैत्यो महाबल:।
चिन्तामवाप महतीं प्रजज्वाल च तेजसा ।।१८।।

ततो जग्राह परशुं ज्वालामालाशमाकुलम् ।
तोलयामास बलवाँश्चकम्पे धरणी तदा।।१९।।

विमानगा: सुरा: सर्वे युद्धं द्रष्टुमुपागता:।
चकम्पिरे तदा शेषो बिभाय च रसातले ।।२०।।

अवासृजद् दैत्यपतौ स तस्याशु शिरोऽहरत् ।
पुनरन्यदभूच्चारुशिरोमुकुटकुण्डलम् ।।२१।।

पुनस्तत् पातयामास शिर: क्रुद्धो विनायक:।
पुनरन्यदभूत्तस्य छिन्ने तस्मिन् पुन: पुन: ।।२२।।

एवं शतसहस्राणि शिरांसि सोऽच्छिनद् विभु:।
पुनश्च चिन्तयामास मृतौ दैत्यस्य कारणम् ।।२३।।

मोहयामास सहसा मायया तं नरान्तकम् ।
शिवस्य वरदानेन गर्वितं बलवत्तरम् ।।२४।।

नाज्ञासीच्च तदा दैत्य: परञ्चात्मानमेव च।
क्षणाच्च भासते रात्रि: क्षणाच्च दिनमेव च।।२५।।

टाकुरामा इन्द्रको वज्र खसेझैं नरान्तकको घाँटीमा वेधन गर्‍यो। त्यसको टाउको छुट्टिएर चीत्कार गर्दै चराझैं आकाशमा उड्न थाल्यो । टुक्रिएको त्यो डरलाग्दो टाउको नरान्तकका बाबुको घरमा गई खस्यो ।।१२-१४।। श्रीगणेशले टाउको टुक्र्याए तापनि नरान्तक दैत्यको मायाबाट फेरि अर्को टाउको तयार भयो । त्यसको टाउको केही नभएजस्तो देखियो। त्यसपछि त्यसले चर्को स्वरबाट सिंहनाद गर्‍यो ।।१५।। सिंहनाद सुनेर देवता, पशु, पक्षी र मानिसहरू सबै डराए । त्यसले डरलाग्दो शैलीमा फेरि श्रीगणेशमाथि बाणको वर्षा गर्‍यो । बाणको वर्षाद्वारा त्यसले श्रीगणेशबाट प्रहार गरिएका सम्पूर्ण बाणहरूलाई बीचमै काटेर निष्फल तुल्यायो । यसरी श्रीगणेश र नरान्तक दैत्यको बीचमा अहोरात्र युद्ध चलिरहेको थियो ।।१६-१७।। युद्धका कारण श्रीगणेश थाक्नुभयो । त्यो बलवान् दैत्य पनि चिन्तित भयो। त्यो दैत्य क्रोधको ज्वालामा बलिरहेको थियो । त्यसपछि श्रीगणेशले आफ्नो हातमा अग्निज्वालाले ज्योतिर्मय बनेको बञ्चरो लिनुभयो । जुन बेला श्रीगणेश बञ्चरो उचालेर प्रहार गर्दै हुनुहुन्थ्यो, त्यस बेला पृथिवीमा कम्पन भयो । विमानमा सवार भई युद्धदर्शन गर्न आएका देवता पनि डरले काँप्न थाले र पातालमा रहेका शेषनाग पनि भयभीत भए।।१८-२०।। श्रीगणेशले नरान्तकमाथि बाण प्रहार गरी फेरि पनि त्यसको शिर काटिदिनुभयो । शिर काटिनासाथ कुण्डल र मुकुटसहितको अर्को शिर तयार भयो । रिसाएका श्रीगणेशले मुकुटसहितको त्यस शिरलाई पनि टुक्र्याइदिनुभयो । नरान्तकको फेरि नयाँ शिर तयार भएको देखियो । त्यसलाई पनि श्रीगणेशले काटिदिनुभयो । यसै रीतिबाट हजारौं शिर तयार भए र तिनलाई अन्तर्यामी श्रीगणेशले टुक्र्याउनुभयो । त्यसपछि श्रीगणेशले दैत्यलाई मार्ने उपायको विषयमा चिन्तन गर्नुभयो ।।२१-२३।। यसरी चिन्तन गरेपछि श्रीगणेशले आफ्नो मायाको प्रयोग गरेर नरान्तकलाई मोहित बनाउनुभयो । शिवको वरदान पाएर अभिमानी बनेको त्यस बलवान् दैत्यले श्रीगणेशको मायामा परेर को आफू र को अर्को भन्ने छुट्याउन पनि सकेन । त्यसका आँखाका सामु एकै छिनमा रात्रि देखिन्थ्यो र अर्को छिनमा दिन तयार हुन्थ्यो। त्यसका सामु उत्तिखेरै स्वर्गको दृश्य आउँथ्यो र केहीबेरमा नै त्यो स्वर्ग पृथिवी बनेको हुन्थ्यो । त्यो पृथिवी

क्षणाच्च भासते स्वर्गं पृथ्वी पातालमेव च।
जागरश्च सुषुप्तिश्च तुरियः स्वप्न एव च।।२६।।

विनायकोऽपि देवो वा नारी वा पुरुषोऽपि वा।
गुह्यको वाथ सिद्धो वा यक्षो राक्षस एव च।।२७।।

स्वकीयो वा परो वापि पिता वा जननी तु वा।
निर्जीवो वा सजीवो वा भ्रमादेवममन्यत।।२८।।

चिन्ताञ्च परमामाप तर्कयामास चेतसि ।
एवं मे तु वरा दत्ताः शिवेन शूलधारिणा ।।२९।।

अयञ्च समयः प्राप्तः प्रायो मृत्युर्भविष्यति।

क उवाच

एवं यावच्चिन्तयते पुरस्तावद् ददर्श सः।।३०।।

विनायकं विराड्रूपं गगनोर्ध्वगमस्तकम् ।
पातालव्याप्तचरणं दिक्छ्रोत्रं वृक्षरोमकम् ।।३१।।

भ्रमद्ब्रह्माण्डरोमाञ्चपयोधिश्रमविन्दुकम्।
नखाग्रे यस्य देवानां भान्ति त्रिंशत्त्रिकोटयः।।३२।।

उदरे भान्त्येकदेशे भुवनानि चतुर्दश।
ततो विनायको दैत्यं मर्दयामास तत्क्षणात् ।।३३।।

पादाङ्गुष्ठनखाग्रेण मत्कुणं बालको यथा।
ततो देवाश्च मुनयो जयशब्दैर्मुहुर्मुहुः।।३४।।

तुष्टुवुर्मुमुचुः पुष्पवृष्टिं भक्त्या प्रहर्षिताः ।
अन्तर्हिते तु वैराटे रूपेऽगाद् धरणी विभुम् ।।३५।।

पनि एकछिनमै पातालको रूपमा परिणत हुन्थ्यो । जागरण अवस्था, सुषुप्तिमा बदलिन्थ्यो। सुषुप्ति अवस्था स्वप्नमा परिणत हुन्थ्यो ।।२४-२६।। स्वयं श्रीगणेशलाई त्यसले कुनै बेला श्रीगणेशकै रूपमा देख्थ्यो, त्यसको केहीबेरपछि उहाँलाई सामान्य देवताको रूपमा दर्शन गर्थ्यो । एक छिनपछि श्रीगणेशको स्वरूपलाई त्यसले नारीरूपमा परिणत भएको पाउँथ्यो । त्यो नारीस्वरूप पनि केही बेरमै पुरुषको रूपमा परिणत हुन्थ्यो । एकैछिनमा त्यो पुरुषको स्वरूप पनि गुह्यकको रूपमा बदलिन्थ्यो । गुह्यक सिद्धको रूपमा, सिद्ध यक्षको रूपमा र यक्ष राक्षसको रूपमा बदलिएको दृश्य पनि उसले देखिरहेको हुन्थ्यो । नरान्तकले कुन आफ्नो मानिस र कुन पराई मानिस छुट्याउन सकेन । माता-पितामध्ये कुन माता र कुन पिता भन्ने पनि पहिचान गर्न सकेन । वस्तुहरूमा पनि कुन निर्जीव र कुन सजीव भन्ने छुट्याउन सकेन ।।२७-२८।। आफूलाई यस्तो अवस्थामा पाएर नरान्तक चिन्तित भयो । त्यसले मनमा तर्क गर्‍यो - 'मलाई त्रिशूलधारी शिवले यस्तै वरदान दिनुभएको थियो ।।२९।। अब मलाई लाग्छ मेरो मृत्युसमय नजिकमै आएको रहेछ ।'

**ब्रह्माजीले भन्नुभयो -** यसरी तर्क गरिरहेको नरान्तकले तत्कालै विराट् रूप धारण गर्नुहुने भगवान् श्रीगणेशको दर्शन गर्‍यो ।।३०।। आकाशको सर्वोपरि भागलाई आफ्नो मस्तकले स्पर्श गर्ने, पाउलाई पातालसम्म व्याप्त गराउने, दसै दिशालाई कानका रूपमा व्यवहार गर्ने, वृक्ष र वनस्पतिलाई रोमराशि बनाउने, घुमिरहेका अनन्त ब्रह्माण्डलाई रोमाञ्च र विशाल महासागरलाई पसिनाका थोपाको रूपमा व्यवहार गर्ने विराट् रूपधारी भगवान् विनायक हुनुहुन्थ्यो । उहाँका नङहरूका टुप्पामा ३३ कोटि देवताहरू सुहाएका थिए र उहाँको पेटमा चौध भुवन अवस्थित थिए । यसरी आफ्नो स्वरूपलाई विराट् रूपमा परिणत गराउनुहुने भगवान् श्रीगणेशले तत्कालै आफ्ना पाउको बूढी औँलाको नङको टुप्पाले प्रहार गरी कुनै बालकले उडुस मारेझैं नरान्तकलाई मारिदिनुभयो । खुसी भएका देवता र मुनिहरूले भक्तिपूर्वक भगवान् श्रीगणेशको जयजयकार गर्दै स्तुति र पुष्पवर्षा पनि गरे । भगवान् श्रीगणेशले आफ्नो विराट् रूपलाई अन्तर्धान गराउनु भएपछि पृथिवी भगवान्

पृथ्वी प्रोवाच देवेशमर्धभारो हृतो मम।
पूर्णे हृते परा प्रीतिर्मे स्यात् तस्मात् सदा कुरु ।।३६।।

तस्यामन्तर्हितायान्तु काशिराजः पुपूज तम् ।
उवाच च प्रसन्नात्मा विनयावनतो नृपः।।३७।।

अत्याश्चर्यं विभो ! दृष्टं मनोवाण्योरगोचरम् ।
अवतीर्णोऽसि भूभारं हर्तुं तच्च कृतं त्वया।।३८।।

त्रयस्त्रिंशत्कोटिदेवैरवध्योऽयं हतो यतः ।
अनेकपुण्येन दृष्टं ते विराड् रूपं सुरेश्वर।।३९।।

क उवाच

एवं ब्रुवति राजेन्द्रे पौराः सर्वेऽब्रुवँस्तदा।
धन्योऽसि बालभावेन सर्वान्नो भ्रामयस्यहो।।४०।।

कर्मणः प्रथयितुं सर्वं कृतमेतद् विभो ! त्वया।
पूपूजुश्च महाभक्त्याऽप्रार्थयन्निति तं विभुम् ।।४१।।

भक्तिं ते देहि नो देव ! स्ववियोगञ्च मा कुरु।
ततो राजा च ते लोका ददुर्दानान्यनेकशः।।४२।।

ब्राह्मणान् प्रार्थयामासुरेवमेव जयोऽस्तु नः।
उपायनानि च तदा ददू राज्ञे परस्परम् ।।४३।।

श्रीगणेशका नजिकमा गइन् ।।३१-३५।। तिनले प्रणाम गरेर प्रार्थना गरिन्- 'हे भगवन्! हजुरले मेरो आधा भार हलुका गराउनु भएको छ। पूरा भार हरण गर्नुभएपछि म ज्यादै सन्तुष्ट हुनेछु । तसर्थ हजुरले सम्पूर्ण भार हरण गरिदिनुहोस् ।' यसरी पृथिवी पनि आफ्ना भावना व्यक्त गरेर अन्तर्धान भएपछि काशिराजले श्रीगणेशको पूजा गरे । प्रसन्न भएका र नम्रताले नुहेका ती काशिराजले भने - 'हे प्रभु! आज मैले मन र वाणीबाट पनि चिताउन र भन्न नसकिने आश्चर्यको कुरा देखें। हजुर पृथिवीको भार हरण गर्न अवतरित हुनुभएको हो र त्यो कार्य पूरा गर्नुभयो ।।३६-३८।। आज हजुरले तेँत्तीस कोटि देवताहरूद्वारा पनि वध गर्न नसकिने दैत्यलाई मारिदिनुभयो। हे देवताका पनि देवता ! जन्मजन्मान्तरका पुण्यले मैले आज हजुरको विराट् रूप देख्न पाएँ ।।३९।।

ब्रह्माजीले भन्नुभयो - काशिराजले यसरी श्रीगणेशको स्तुति गरेपछि काशीनिवासी नर-नारीहरूले भने - 'हे परमेश्वर! हजुर धन्य हुनुहुन्छ । हजुरले सानो बालक बनेर हामीलाई आफ्नो मायामा घुमाइरहनु भएको छ ।।४०।। हे प्रभु ! हजुरले उत्तम कर्मको कीर्ति फैलाउन यो लीला गर्नुभएको हो ।' यसरी स्तुति गरेपछि ती सबैले ठूलो श्रद्धा र भक्तिका साथ भगवान् श्रीगणेशको पूजा गरी प्रार्थना गर्दै भने - 'हे देव ! हामीलाई हजुरको भक्ति दिनुहोस् र हामीबाट अलग भएर कहिल्यै पनि नबस्नुहोस् ।' त्यसपछि काशिराज र काशीनिवासी नर-नारीहरूले पनि ब्राह्मणहरूलाई अनेक थरि दान दिए ।।४१-४२।। तिनीहरूले ब्राह्मणहरूको प्रार्थना गर्दै भने - 'तपाईंहरूको तपस्याबाट हामी सबैको जय होस् ।' त्यसपछि ती सबै नर-नारीले काशिराजलाई पनि अनेक उपहार टक्र्याए ।।४३।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे दैत्यदमनविराड्रूपदर्शनं नामैकषष्टितमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'श्रीगणेशद्वारा विराट् रूप प्रदर्शन र नरान्तकको संहार' शीर्षकान्वित एकसट्ठीऔं अध्याय पूर्ण भयो ।।६१।।

ॐ

## द्विषष्टितमोऽध्यायः { ६२ अध्याय }

क उवाच

रौद्रकेतोस्तु या भार्या शारदाख्या द्विजस्य सा।
वृष्यां समुपविष्टा सा सखीभिः कौतुकान्विता।।१।।

नरान्तकस्य च शिरोऽकस्मात् ताभिरदृश्यत ।
पतितं प्राङ्गणे कर्णकुण्डलाभ्यां विराजितम् ।।२।।

नादयत् पत्तनं सर्वं शिखरं पार्वतं यथा ।
श्यामलं हिमसंसृष्टं विशोभं कमलं यथा।।३।।

बिभ्यतो रौद्रकेतुश्च शारदा चातिविह्वला।
सावधानौ ददृशतू रुदतः स्म भृशं तदा।।४।।

लुण्ठतः स्म धरण्यां तौ ताडयन्तौ च वक्षसि।
मूर्च्छामवापतुरुभौ मुहूर्तादिव चेतनाम् ।।५।।

माता शुशोच च तदा हृदि संस्थाप्य तच्छिरः।
चक्रन्दे विह्वला सा गौर्मृतवत्सा यथा भृशम् ।।६।।

शारदोवाच

वीरश्रिया व्याप्ततनू रणायैव समुत्सुकः ।।७।।

प्रोक्तवात्र हि किञ्चिन्मामिदानीं गिरमाहर।।८।।

क्व गतः परकायस्ते शिरसैव समागतः।
एकाकी कथमायातः क्व ते सैन्यं महत्तरम् ।।९।।

क्व ते जलधरा दासाश्छत्रचामरधारिणः।
यं दृष्ट्वा वरकामिन्यो म्लायन्ते विरहाग्निना।।१०।।

स कथं म्लानतां यातो रविरस्तानुगो यथा।
किं मया ह्यपराद्धन्ते पित्रा वा वत्सलेन च।।११।।

किमर्थं वदसे नैव रुदतश्रु प्रमार्ज्य नः।
पराार्ध्यास्तरणोपेते मञ्चके स्वापतत्परः।।१२।।

क्वेदानीं परिसुप्तोऽसि खिद्यते मे मनो भृशम् ।
विनाभूतौ त्वया नेशावास्यं सन्दर्शितुं सुत।।१३।।

**ब्रह्माजीले भन्नुभयो -** नरान्तक र देवान्तकका पिता रौद्रकेतु ब्राह्मणकी पत्नी शारदा आफ्ना सँगिनीहरूका साथ आनन्दपूर्वक घरमा कुशासनमा बसिरहेकी थिइन् ।।१।। अकस्मात् कर्णकुण्डलमण्डित शिर उडेर घरको आँगनमा आई खसेको दृश्य सँगिनीका साथ तिनले देखिन् । पर्वतको चुचुरो खस्दा त्यसले सम्पूर्ण प्राणीहरूलाई शब्दायमान गराएझैं नरान्तकको शिर आँगनमा खस्दा सम्पूर्ण नगर शब्दायमान भएको थियो । त्यो शिर तुसारो पर्दा शोभाहीन बनेको कमलझैं कालो र कान्तिहीन थियो। रौद्रकेतु र शारदा त्यो टाउको देखेर अत्यन्त भयभीत भए। सावधान भएर नजिकै गई तिनीहरूले त्यो शिर हेरेर बारबार रुन थाले।।२-४।। ती दुबै छाती पिटेर भुइँमा लडे, त्यसपछि मूर्च्छित भएर एक मुहूर्तपछि चेतना प्राप्त गरे । शोकव्याकुल शारदाले आफ्नो छोराको शिर काखमा राखेर बाच्छो मरेको गाईझैं बारबार विलाप र क्रन्दन गरिन् ।।५-६।।

**शारदाले भनिन् -** 'वीर सुहाउँदो कान्तिले अङ्ग-अङ्गमा शोभायमान र जहिले पनि युद्ध गर्न मात्र उत्सुक रहने हे पुत्र ! तिमी युद्धका लागि प्रस्थान गर्दा मसँग केही पनि बोलेनौ । अब त केही बोल ।।७-८।। तिम्रो शरीरको तल्लो भाग कहाँ गयो ? अहिले शिरमात्र लिएर मेरासामु आएका छौ। तिमी एक्लै कसरी आयौ ? तिम्रा सैनिकहरू कहाँ गए ? तिमीलाई जल टक्र्याउने दासहरू कहाँ गए ? छत्र र चामर धारण गर्ने सेवकहरू कहाँ गए ? तिमीलाई देखेर सुन्दरीहरू विरहको आगोमा बलेर ओइलाउने गर्थे, आज आफै तिमी अस्ताचलमा जान लागेका सूर्यझैं किन ओइलाएका छौ ? ।।९-११।। हे पुत्र ! मैले र तिम्रा दयालु पिताले के अपराध गर्‍यौं ? तिमी किन बोल्दैनौ ? हाम्रा आँसु पुछिदिएर सान्त्वना किन दिँदैनौ ? बहुमूल्य वस्त्रले सजिएको पलङ्गमा शयन गर्ने बानी परेका तिमी आज यहाँ आएर किन भुइँमा सुतिरहेका छौ ? मेरो मन अत्यन्त खिन्न छ । हे पुत्र ! तिमीविना तिम्रा बाबुआमा हामी दुवै संसारका सामु मुख देखाउन असमर्थ छौं ।।१२-१३।।

क उवाच

शारदायाः शुचं श्रुत्वा रौद्रकेतुः शुशोच ह।
विना वृत्तान्तकथनात् क्व गतोऽसि प्रियात्मज।।१४।।

प्रत्यहं सर्ववृत्तान्तं जातं भाविनमेव च।
संश्रावयसि स्वस्थानमिदानीं किन्न भाषसे ।।१५।।

यदि त्वं सम्मुखे युध्यन् धारापूतो दिवं गतः।
मामपृच्छ्य च मां त्यक्त्वा कथं त्वं परिजग्मिवान् ।।१६।।

कथं त्वया कृता पित्रोः पुत्रता शत्रुतापि च।
यदा त्वं सेवककरात् खड्गं गृह्णासि स्वं करे ।।१७।।

तदा सपर्वतवना सस्वर्गा कम्पते च भूः।
स केन पातितो मह्यां न जाने कालपर्ययम् ।।१८।।

दैवं हि बलवल्लोके पौरुषं तु निरर्थकम् ।।
भूषणं मम वंशस्य लोकस्य च गतं क्व नु।।१९।।

लोकस्यापि च यः कालः पञ्चास्योऽरिगजस्य यः।
स कथं त्वं द्विधाभूतो वाताहत इव द्रुमः।।२०।।

प्रतापसविता राजँस्तूलदाहहुताशनः।

क उवाच

एवं नानाविधं शोकं रौद्रकेतुश्च शारदा।।२१।।

कृत्वा मूर्धानमादाय देवान्तकमगच्छताम् ।
भद्रासनात् समुत्थाय त्वरया तौ तथाविधौ।।२२।।

दृष्ट्वा कण्ठं समालिङ्ग्य रुरोदावरजं तदा ।
तत्परीवारभूता ये दैत्याः कालयमोपमाः।।२३।।

रुरुदुः सुस्वरं तत्र दृष्ट्वा नारान्तकं शिरः।
मातुर्हस्ताच्छिरो गृह्य तत्स्वे हृदि निधाय च।।२४।।

चक्रन्द कुररीवासौ भ्रातृस्नेहेन दुःखितः।

**ब्रह्माजीले भन्नुभयो** - शारदाले शोक गरेको सुनेर रौद्रकेतुले पनि विलाप गर्दै भने- 'हे पुत्र! कुनै समाचार नदिईकन र हामीसँग बिदा नै नलिईकन तिमी कहाँ गयौ ? ।।१४।। तिमीले दिनदिनै हामीलाई बिहानदेखि सायंकालसम्मका सबै खबर सुनाउने गर्थ्यौ, भएका घटना बताउँथ्यौ र सम्भावित घटनाहरूको बारेमा जानकारी दिन्थ्यौ, अहिले हाम्रासामु आफ्ना मनका कुरा किन बोल्दैनौ ? ।।१५।। यदि तिमी शत्रुका सामु लड्दालड्दै शस्त्रको धारामा नुहाएर स्वर्ग गएका छौ भने नसोधीकन हामी सबैलाई छाडेर एक्लै किन गयौ ? ।।१६।। तिमीले आफ्ना पिताको मान-प्रतिष्ठा कायम गर्न, असल छोराको रूपमा आफूलाई साबित गर्न र मेरा शत्रुहरूसँग शत्रुता कायम गर्न समेत कहिल्यै चुकेनौ । जब तिमीले सेवकको हातबाट तरबार खोसेर आफ्नो हातमा धारण गरी त्यसलाई रिंगाउँथ्यौ तब पर्वत र वनसहित पृथिवी काँप्ने गर्थिन् । यस्ता पराक्रमी मेरा छोरालाई कसले धर्तीमा यो हालतमा पुऱ्यायो ? कालको प्रतिकूल स्वभावलाई म जान्न सक्तिनँ ।।१७-१८।। संसारमा दैव बलवान् रहेछ र पुरुषार्थको केही नलाग्ने रहेछ । तिमी मेरो कुल र संसारका पनि एउटा उज्ज्वल अलङ्कार थियौ । हे बाबु! आज तिमी कुन देशमा गयौ ? ।।१९।। हात्तीका लागि जसरी बाघ कालरूप बन्दछ त्यस्तै तिमी पनि सम्पूर्ण शत्रुहरूका लागि काल नै थियौ, तर आज तिम्रो शरीर कसरी हावाले ढालेको रूखजस्तै दुई टुक्रा भयो ? ।।२०।। तिमी प्रतापका सूर्य थियौ र कपासको राशि डढाउने अग्निझैं भयानक पनि थियौ।'

**ब्रह्माजीले भन्नुभयो** - शारदा र रौद्रकेतुले यसरी अनेक थरि विलाप गरे। त्यसपछि त्यो टाउको हातमा लिई ती दुबै देवान्तकको नजिकमा गए । देवान्तकले पनि ती दुबै माता-पितालाई त्यसरी छोराको टाउको लिएर आएको देखेर सिंहासनबाट उठी दुबैलाई अङ्कमाल गऱ्यो । आफ्ना भाइको त्यो अवस्था देखेर धेरै बेरसम्म रोइराख्यो। त्यसका परिवारका अङ्ग बनेका यमराजझैं डरलाग्दा दैत्यहरू पनि नरान्तकको टाउकोलाई त्यो हालतमा देखेर शोकको स्वरमा रुन थाले । देवान्तकले आफ्नी आमाको काखबाट भाइको टाउको खोसेर आफ्नो छातीमा टाँस्यो र भाइको प्रेमले दुःखित भई न्याउली चरीझैं विलाप गर्न लाग्यो ।

देवान्तक उवाच

समं भुक्तं समं पीतं क्रीडितं सुप्तमुत्थितम् ।।२५।।

समं तप्तं समं जप्तं क्व गतोऽसि विहाय माम् ।
यस्य ते दर्शनान्मर्त्याः सुरा यान्ति दिशो दश ।।२६।।

स कथं निहतः केन दुष्टेन च बलीयसा।
रसा रसातलञ्चैव तवैव च निवेदितम् ।।२७।।

विहाय मां कथं स्वर्गं गतोऽसि भ्रातृवत्सल।
यस्य ज्याघोषमाकर्ण्य कम्पते स्म चराचरम् ।।२८।।

असङ्ख्याता नृपा यस्य साम्ने द्वारगता बभुः।
स कथं पितरौ हित्वा गतश्च सुन्दरीं स्त्रियम् ।।२९।।

एवं तत्क्रन्दनं श्रुत्वा वीरलोकाः समाययुः।
हेतुभिर्वारयामासुर्बलाद् धृत्वा तु तं करैः।।३०।।

जना ऊचुः

न वीराः परिशोचन्ति वीरे युद्धे हते नृप।
निघ्नन्ति तं बलाद् गत्वा येनासौ निहतो भवेत् ।।३१।।

मृत्युस्तु सर्वजन्तूनां सह देहेन जायते।
सोऽद्य वर्षशतेनापि भविष्यति न संशयः।।३२।।

स्वस्य वान्यस्य वा राजँस्तत्र का परिदेवना।
श्रुत्वा वाक्यन्तु लोकानां तदा देवान्तकोऽसुरः ।।३३।।

सावधानमना भूत्वा पितरौ प्राह धर्मवित् ।
मा शोचतमहं यामि ग्रसितुं तं निजं रिपुम् ।।३४।।

वदतं क्व निवासोऽस्य येन बन्धुर्हतो मम।
तं हत्वा सुखमेष्यामि बन्धुं यास्यामि वा मृतः।।३५।।

मम भ्रूभङ्गमात्रेण कम्पते भुवनत्रयम् ।
मयि क्षुब्धे तु कस्त्राता लोकानां पितरौ यतः।।३६।।

देवान्तकले भन्यो - 'हे भाइ ! बालककालदेखि सँगै खायौं, सँगै पियौं, सँगै खेल्यौं, सँगै सुत्यौं, सँगै जाग्यौं, सँगै कर्म गर्‍यौं, सँगै तपस्या गर्‍यौं, सँगै मन्त्रणा गर्‍यौं र सँगै वार्तालाप पनि गर्‍यौं, तर आज जाने बेलामा तिमी मलाई एक्लै छाडेर कहाँ गयौ ? तिम्रो वीरस्वरूपको दर्शन गर्दा मानिस र देवताहरू पनि डराएर ज्यान जोगाउन दसै दिशामा भाग्ने गर्दथे ।।२१-२६।। तिमीजस्ता वीरपुरुषलाई कुन बलवान् दुष्टले मार्‍यो ? कसरी मार्‍यो ? पातालमा र धर्तीमा तिम्रो सम्पूर्ण अधिकार थियो । मलाई असाध्यै माया गर्ने हे मेरा प्यारा भाइ ! मलाई एक्लै छोडी तिमी कहाँ गयौ ? तिम्रा धनुको ताँदीको स्वर सुनेर स्थावर र जङ्गम सबै काँप्दथे ।।२७-२८।। असंख्य राजाहरू ढोकामा जसको स्तुति गर्दथे त्यस्ता शक्तिशाली तिमी आज आफ्नी अत्यन्त सुन्दरी पत्नी र आफूलाई माया गर्ने बाबु-आमासमेत छाडी कहाँ गयौ ? ।।२९।।' देवान्तकले यसरी विलाप गरेको सुनेर अरू वीरहरू पनि त्यहाँ आइपुगे। तिनले भाइको शोकले विह्वल भएका देवान्तकलाई अनेक युक्ति र दृष्टान्त दिएर हात समाती शोक गर्न निषेध गरे ।।३०।।

वीरहरूले भने - 'हे राजन् ! युद्धको मैदानमा वीरगति प्राप्त गर्ने योद्धाका लागि वीरहरूले शोक गर्दैनन् बरु जसले हत्या गर्‍यो त्यससँग बदला लिन डटेर अगाडि बढ्छन् ।।३१।। मानिस जन्मदा मृत्युलाई पनि सँगै लिएर आएको हुन्छ । जन्मने मानिसको आज अथवा सय वर्षपछि मृत्यु हुन्छ नै, यसमा कुनै सन्देह छैन ।।३२।। आफ्नो पनि मृत्यु हुन्छ र अरूको पनि मृत्यु हुन्छ । त्यस कारण मृत्युको विषयमा के विलाप गर्नु ?' वीरहरूका यी कुरा सुनेर देवान्तकले सावधान भई आफ्ना बाबु-आमालाई भन्यो - 'हे पिता ! हे माता ! तपाईं दुवैले शोक नगर्नुहोस् । जसले नरान्तकको हत्या गर्‍यो त्यस शत्रुलाई मार्न म जानेछु ।।३३-३४।। बरू तपाईंहरूलाई थाहा छ भने भन्नुहोस् मेरो भाइको हत्या गर्ने त्यो शत्रु कहाँ बस्छ ? त्यसलाई मारेर मैले सुख पाउनेछु अथवा त्यससँग गरिने लडाईंमा म आफै मरें भने पनि भाइसँग गएर बस्न पाउनेछु ।।३५।। हे माता-पिता ! मैले आँखीभौं नचाउँदा स्वर्ग, मर्त्य र पाताल यी तीनै लोक थर्थर काँप्ने गर्दछन् । म रिसाउँदा संसारमा कसले कसको रक्षा गर्न सक्छ ?' ।।३६।।

क उवाच

श्रुत्वा देवान्तकवच आश्वस्तौ तावुभौ तदा।
शोकसागरमग्नौ तावुद्धृतौ तेन वाक्यतः ।।३७।।

ऊचतुः परमं वाक्यं ज्येष्ठपृष्टौ सविस्तरम् ।
काशिराजेति विख्यातो राजा परमधार्मिकः।।३८।।

वैवाहिको महोत्साहस्तद्गृहे समपद्यत।
आकारिताः सर्वंजनाः कश्यपस्यात्मजोऽपि च ।।३९।।

स बाल एव वलवान् विनायक इति स्मृतः।
तेन [illegible] हतो भ्राता धूम्राक्षो मम पुत्रक।।४०।।

तस्य प्रत्याम्नायकृते प्रेषिता वीरसम्मताः।
[illegible] ययुस्ते च सहस्त्रार्द्ध निशाचराः।।४१।।

सप्तवर्षेण ते सर्वे नाशिता मुनिसूनुना ।
तेषां प्रत्याम्नायकृते स्वयं यातो नरान्तकः।।४२।।

अनेकशस्त्रसम्पन्नश्चतुरङ्गबलान्वितः।
एकोऽपि नागतस्तस्मादकस्माद् ददृशे शिरः।।४३।।

शोकं कृत्वा नव पुर आनीतं तच्छिरोऽधुना ।

क उवाच

इति तद्वाक्यमाकर्ण्य चकम्पे रक्तलोचनः।।४४।।

देवान्तकश्चोदतिष्ठद् ग्रसन्निव जगत्त्रयम् ।
उवाच गर्वमोहेन पितरं वेगवत्तरम् ।।४५।।

कालं हनिष्येऽखिलघ्नं न्युब्जां पृथ्वीं विधाय च।
[illegible] क्रोधदृष्ट्यैव ब्रह्माण्डं भस्मसात् क्षणात् ।।४६।।

इत्युक्त्वा क्ष्वेडितं कृत्वा जगतीं कम्पयन्नथ ।
देवाधिकारे ये दैत्यास्तान्सर्वानाजुहाव च।।४७।।

नत्वा तौ पितरौ वाक्यं प्रोचे देवान्तकस्तदा ।
इदानीं मुनिपुत्रं तमानयिष्यामि सत्वरम् ।।४८।।

**ब्रह्माजीले भन्नुभयो** - देवान्तकका यी कुरा सुनेर रौद्रकेतु र शारदा आश्वस्त भए । शोकको सागरमा डुबेका ती दुबै बाबु-आमाको देवान्तकले आफ्ना वीर वाक्यहरूद्वारा उद्धार गऱ्यो ।।३७।। त्यसपछि ती दुबैले आफ्नो छोराले सोधेका विषयमा विस्तारपूर्वक भने- 'हे पुत्र ! काशीमा राज्य गर्ने काशिराज-नामक परम धार्मिक राजा छन् ! तिनका घरमा विवाह महोत्सवको आयोजना गरिएको थियो । त्यस बेला तिनले सबै आफ्ना बन्धु-बान्धवहरूलाई निम्ता दिएर कश्यपका छोरा गणेशलाई पनि बोलाए। ती कश्यपका छोरा बालक भए तापनि बलवान् भएकाले तिनलाई विनायक भन्ने गरिएको थियो । हे छोरा ! ती विनायकले नै मेरा भाइ धूम्राक्षको हत्या गरेका हुन् ।।३८-४०।। तिनका हत्याको प्रतिशोध लिन हामीले धेरै वीरहरूलाई काशीमा पठायौं। सयौं राक्षसहरू विनायकसँग युद्ध गर्न दौडिंदै काशी गएका थिए। तिनलाई सात वर्षको उमेरका कश्यपका छोरा विनायकले मारेर सखाप पारे । तिनीहरूको प्रतिशोध लिन तिम्रा भाइ नरान्तक आफै गएका थिए ।।४१-४२।। अनेक शस्त्रले युक्त भई चार प्रकारको सेना साथमा लिई ती सबै युद्धको मैदानमा गएका थिए । तीमध्ये एउटा पनि फर्केर आएका छैनन् । तिम्रा भाइको शिर भने अचानक आई मेरा घरको आँगनमा खसेको देखियो। तिम्रा मृतक भाइको शिर साथमा लिएर शोक गर्दै आज हामी तिम्रो घरमा आएका छौं ।'

**ब्रह्माजीले भन्नुभयो** - बाबु-आमाका यी कुरा सुनेर रीसले आँखा राता गराउँदै देवान्तक काँप्न थाल्यो ।।४३-४४।। केही बेरपछि वेगपूर्वक उठ्यो र तीनै लोकलाई एकैचोटि निल्न लागेसरि चारैतिर हेऱ्यो । त्यसपछि गर्व र मोहका साथ पितालाई सम्बोधन गर्दै भन्यो - 'हे पिताश्री ! मैले संसारलाई स्वाहा पार्ने काललाई पनि मार्नेछु, अरूको त के कुरा ? पृथिवीलाई डल्लो पारेर आफ्नो क्रोधपूर्ण दृष्टिबाट ब्रह्माण्डलाई खरानी तुल्याउनेछु ।।४५-४६।।' यसरी आफ्ना भाव व्यक्त गरेर सिंहनादद्वारा पृथिवी कपाउँदै देवलोकमा कार्यरत दैत्यवीरहरू समेतलाई बोलाएर जम्मा गरी आफ्ना माता-पिताको पाउमा प्रणाम गरेर भन्यो - 'मैले अहिले छिट्टै कश्यपपुत्र गणेशलाई यहाँ ल्याउनेछु ।।४७-४८।। त्यसको टाउको टुक्र्याएर मेरा

सहैव तेन दास्यामि मूर्ध्न्यस्य च धनञ्जयम् ।
एवमुक्त्वा बलात् सर्वे उड्डीय सहसा च ते ।।४९।।

देवान्तकोऽप्यसङ्ख्याता विहङ्गा इव शीघ्रगाः।
काशिराजपुरीं प्राप्ता वेष्टयेयुः समन्ततः।।५०।।

कोलाहलो महानासीद् रजसाच्छादिता दिशः।
न प्रकाशो रवेरासीत् पौराश्च चुक्रुशुर्भृशम् ।।५१।।

नरान्तके हते द्वित्रिदिवसा नैव यद्गताः।
तत्कथं पुनरायातः प्रलयोऽत्र जनापहः।।५२।।

कोऽयं प्रचण्डदेहेन दुष्प्रेक्ष्यो वै समागतः ।
क्षमः कालं कलयितुं भक्षितुं वा जगत्त्रयम् ।।५३।।

दैत्यानां परिखा जाताः प्रेषिता वीरपुङ्गवाः।
हतास्तेनाथ ते सर्वे गन्तुं मार्गो न विद्यते ।।५४।।

एवं वदत्सु पौरेषु तावद् दूताः समागताः ।
काशिराजं कथयितुं देवान्तकसमागमम् ।।५५।।

भाइ नरान्तकको टाउकाका साथै दागबत्ती दिने काम पनि म आफै गर्नेछु ।' यसरी क्रोधपूर्ण वचन सुनाएर देवान्तक वायुवेगले उडेसरी काशीतर्फ गयो । त्यसका साथ चराझैं उडिरहेका असंख्य वीरहरू पनि गए। ती सबैले काशी नगरीमा गएर चारैतिरबाट काशीलाई घेरा हाले ।।४९-५०।। काशीमा ठूलो कोलाहल भयो । धूलोले सबै दिशा ढाकिएका थिए । सूर्यको प्रकाश थिएन । नगरवासीहरू अत्यन्त व्याकुल भएर भन्दै थिए ।।५१।। 'नरान्तक मरेका दुई-तीन दिनमात्र बितेका छन्, तर आज फेरि जनसंहारकारी महाप्रलयको दिन आइसक्यो । नरान्तकभन्दा पनि प्रचण्ड कुन दैत्य आयो? जसको अनुहार हेर्न पनि सकिंदैन। यस पुरुषले काललाई पनि निल्न सक्छ र तीनै लोकलाई आफ्नो गास बनाउन सक्छ । काशी नगरीका वरिपरि घेरा हालिरहेका दैत्यहरूबाट नै चारैतिर पर्खाल तयार भएको छ । यस वीरले आफ्ना सामु आएका सबै वीरहरूको हत्या गरेको छ र हिंड्ने बाटो पनि छैन'।।५२-५४।। यसरी नगरवासीहरूले आत्तिएर आफ्ना कुरा भनिरहेको बेला काशिराजका दूतहरू पनि त्यहाँ आइपुगे र तिनले सबै कुरा देखे । त्यसपछि त्यो वृत्तान्त बताउन ती दूतहरू राजदरबारतर्फ लागे ।।५५।।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे नगरीनिरोधो नाम द्विषष्टितमोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'देवान्तकद्वारा काशी नगरीको घेराउ' शीर्षकान्वित बैसट्ठीऔं अध्याय पूर्ण भयो ।।६२।।

ॐ

## त्रिषष्टितमोऽध्यायः { ६३ अध्याय }

दूता ऊचुः

देवान्तको महारौद्रो रौद्रैर्दैत्यैः समावृतः।
अन्यैर्नानाविधैः कालभीतिदैर्व्योममस्तकैः ।।१।।

वयं तद्दर्शनभ्रान्ताः पलाय्य त्वामुपागताः।
नगरी वेष्टिता राजन् ! यत् करिष्यसि तत्कुरु ।।२।।

क उवाच

श्रुत्वा दूतमुखाद् राजा वृत्तान्तं समकम्पत।
अतिम्लानतया यातो बालकं स विनायकम् ।।३।।

क्रीडन्तं शिशुमध्ये तं वृत्तान्तं सर्वमब्रवीत् ।

राजोवाच

परब्रह्मन् ! नमस्तेऽस्तु लीलामानुषविग्रह ! ।।४।।

जगद्गुरो ! नानालीलाकर ! नमोऽस्तु ते।
अनेकशो वयं त्रातास्त्वया बालस्वरूपिणा।।५।।

इदानीमपि रक्षास्मानस्माद् देवान्तकात् प्रभो।

क उवाच

एवं सम्प्रार्थितस्तेन काशिराजेन बालकः।।६।।

देहं कृत्वा विशालं स सिंहारूढो धनुष्करः।
सिद्धिबुद्धियुतो गर्जन् नादयन् गिरिकन्दराः।।७।।

तेजसा लोपयन् सूर्यं वमन्नग्निकणान्मुखात् ।
बाणं खड्गञ्च परशुं धनुर्हस्ते व्यधारयत् ।।८।।

व्योममार्गेण नगराद् वहिर्यातो विनायकः।
सिंहनादेन स दैत्यानां मनांसि परिकम्पयन् ।।९।।

**दूतहरूले भने -** 'हे काशिराज ! दैत्यराज देवान्तक डरलाग्दो छ र डरलाग्दा योद्धाहरूले घेरिएको छ। ती योद्धाहरू असंख्य छन् र काललाई पनि भयभीत गराउने शक्ति र सामर्थ्य राख्दछन्। ती अग्ला र चौडा छन्। तिनका टाउकाले आकाश छोइरहेको प्रतीत हुन्छ। हामी देवान्तकको दर्शन गरेपछि भ्रान्तिमा पर्यौं र डराएर भाग्दै हजुरका सामु आइपुगेका छौं। देवान्तकको सेनाले काशी नगरीलाई चारैतिरबाट घेरिसकेको छ। हे राजन्! यस अवस्थामा के गर्न उचित हुन्छ त्यो गर्नुहोस् ।।१-२।।'

**ब्रह्माजीले भन्नुभयो-** दूतहरूका मुखबाट देवान्तक दैत्यको विषयमा समाचार थाहा पाएर काशिराज मनमनै काँप्दै अत्यन्त दीन र विवर्ण भई बालक विनायकका नजिकमा पुगे। बालकहरूको बीचमा खेलिरहेका श्रीगणेशलाई आफूले सुनेको सबै वृत्तान्त बताए।

**राजाले भने -** 'आफ्नो दैवी मायाद्वारा मानवरूपमा विहार गर्नुहुने हे परब्रह्मरूप भगवन् श्रीगणेश ! हजुरका पाउमा प्रणाम गर्दछु ।।३-४।। हे चराचरका स्वामी ! अनेक थरि लीला गर्नुहुने लीलानाथ हजुरलाई नमस्कार छ। बालकरूप लिएर काशी नगरीलाई अलङ्कृत गर्नुहुने हजुरले अनेक विपत्तिहरूबाट हाम्रो रक्षा गर्नुभएको छ ।।५।। हे प्रभु ! अहिले पनि देवान्तकनामक डरलाग्दो दैत्यबाट हाम्रो रक्षा गर्नुहोस्।'

**ब्रह्माजीले भन्नुभयो -** यसरी काशिराजद्वारा प्रार्थना गरिएपछि बालक श्रीगणेश विशाल शरीर बनाई हातमा धनु धारण गरी सिंहमा सवार हुनुभयो। सिद्धि र बुद्धिलाई वरिपरि राखी, आफ्नो गर्जनबाट पर्वतका गुफाहरूलाई शब्दायमान बनाउँदै, आफ्नो तेजबाट सूर्यलाई पनि मन्द तुल्याउँदै र मुखबाट अग्निका ज्वाला छुटाउँदै उहाँले आफ्नो हातमा बाण, तरबार, बञ्चरो र धनुसमेत धारण गर्नुभयो ।।६-८।। त्यसपछि उहाँ आकाशमार्गबाट काशीनगरदेखि बाहिर जानुभयो। आफ्नो सिंहनादबाट दैत्यका मनहरू कँपाउँदै पुग्नुभएका श्रीगणेशले अतुलनीय पराक्रमी देवान्तक दैत्य र त्यसको सेनालाई देख्नुभयो।

ददर्श दुष्टसैन्यं तं देवान्तकममर्षणम् ।
असङ्ख्यातास्तदा दैत्या बभ्रमुः शलभा इव।।१०।।

दृष्ट्वा नानाविधं सैन्यं सिद्धिं प्रोवाच विघ्नराट्।
एकाकिना न साध्येयं सेना नाना विधीयताम् ।।११।।

स्वकीया साधितुं दैत्यं कुरु शीघ्रमिदं वचः।

क उवाच

ततः सिद्धिर्नमस्कृत्वा परमात्माङ्घ्रिपङ्कजम् ।।१२।।

देवान्तकं योधयितुं ययौ चाथ जगर्ज च।
निनादैः सर्वजन्तूनां दैत्यानां भयदायिनी।।१३।।

चचाल शेषो द्यौश्चापि पर्वता वृक्षसञ्चयाः।
तद्गर्जितमहारावैः प्रतिशब्दैरनेकशः ।।१४।।

सस्मार चाष्टसिद्धीः सा ताश्च याता मुदान्विताः।
अणिमा प्रथमं प्राप्ता गरिमा तदनन्तरम्।।१५।।

महिमा लघिमा चापि सम्प्राप्ते तदनन्तरम् ।
प्राप्तिश्चैव तु प्राकाम्यं वशित्वञ्च समाययौ।।१६।।

ईशित्वं तदनु प्राप्तं तासां सैन्यमभूदनु ।
गजाश्वरथपादातं नानायुधविराजितम् ।।१७।।

वर्षाकाले यथा नद्यः सागरं यान्ति सर्वतः।
तथा सैन्यं दश दिशो याति स्म युद्धलालसम् ।।१८।।

असङ्ख्यवाद्यनिर्घोषं वीरशब्दैर्नदद् भृशम् ।
कृतान्तसदृशान् वीरान् भूगोलप्राशनोत्सुकान् ।।१९।।

दृष्ट्वा देवान्तकः स्वान्तं चिन्तयामास चेतसा ।
बालं क्षणेन जेष्यामीत्येवं युद्धाय चागतः।।२०।।

श्रीगणेश त्यहाँ पुग्नुभएपछि उहाँका वरिपरि असंख्य दैत्यहरू सलहझैं घुम्न थाले ।।९-१०।। दैत्यको अनेक थरि सेना देखेर विघ्ननाशक श्रीगणेशले आफ्नी प्रियतमा सिद्धिलाई भन्नुभयो– 'हे सिद्धि! म एक्लै यो सेनाको संहार गर्न समर्थ छैन। तिमीले अनेक थरि सेनाहरूको सृष्टि गर।।११।। दैत्यसेनालाई आफ्नो पक्षमा ल्याउन तिमीले मेरो वचन पालन गर ।'

**ब्रह्माजीले भन्नुभयो –** त्यसपछि सिद्धिले श्रीगणेशको चरणकमलमा प्रणाम गरेर देवान्तकलाई युद्धमा होम्न भनी प्रस्थान गरिन् र भयङ्कर गर्जन गरिन् । आफ्नो गर्जनबाट ती दैत्यहरूका निमित्त डरलाग्दी भएर अगाडि बढिन् । सिद्धिले गर्जन गर्दा निस्केको ठूलो स्वर र त्यसको प्रतिध्वनिबाट शेषनाग कम्पित भए, आकाश थर्कियो र पर्वत एवं वृक्षका पङ्क्तिहरू पनि कम्पायमान भए ।।१२-१४।। सिद्धिले त्यस बेला योगशास्त्रमा बताइएका अष्टसिद्धिको ध्यान गरिन् । त्यसको लगत्तै ती अष्टसिद्धि पनि सहर्ष त्यहाँ आइपुगे । सबभन्दा पहिले अणिमा आइन् र त्यसपछि गरिमा । क्रमैले महिमा र लघिमा पनि आइपुगे । तिनको आगमनपछि प्राप्ति, प्राकाम्य र वशित्व शक्ति पनि त्यहाँ देखिए ।।१५-१६।। तिनीहरूको आगमनपछि ईशित्वनामक शक्ति पनि त्यहाँ आइपुगिन् । ती शक्तिहरूका साथमा हात्ती, घोडा, रथ र पैदलसेनामा विभाजित अनेक थरि शस्त्र-अस्त्रले सजिएका सैनिकहरू पनि आएका थिए । वर्षाकालमा जसरी खोला र नदीहरू सागरतर्फ दौडिरहेका देखिन्छन् त्यसैगरी सिद्धिको सेना पनि युद्ध गर्ने इच्छाले युक्त भएर दसै दिशामा फैलिएको थियो ।।१७-१८।। सिद्धिको सेना असंख्य वाद्यघोषले सम्पन्न र नानाथरिका जयकारले शब्दायमान थियो । त्यस सेनामा रहेका वीरहरू यमराजजस्ता डरलाग्दा र पृथिवीलाई नै खान तयार देखिन्थे ।।१९।। सिद्धिको सेनालाई नजर गरेर देवान्तक दैत्यले मनमनै भन्यो – 'गणेशनामक बालकलाई म एकै छिनमा जित्न सक्छु, किन डराइरहनु पर्‍यो ?' यसरी मनमा विचार गरेर देवान्तक युद्ध गर्न रणभूमिमा आयो ।।२०।। त्यहाँ आएर सिद्धिका

अकस्मादीदृशं सैन्यं कुत एतद् विनिर्गतम् ।
दृष्टं विचित्रसामर्थ्यं बालस्य मायया कृतम् ।।२१।।

मरिष्ये मारयिष्ये वा जीवस्त्याज्यो यशो न हि।
एवं वदति दैत्येन्द्रे सेनान्यः प्राब्रुवन् वचः।।२२।।

वयं योत्स्यामहे सैन्यै रक्ष पृष्ठं जयो भवेत् ।
पीत्वा वाक्यामृतं तेषां हृष्टो देवान्तकोऽब्रवीत् ।।२३।।

सम्यगुक्तं महावीरा यान्तु युद्धाय यामि च।
जयोऽस्तु मम वाक्येन भवतां पुण्यकर्मणाम् ।।२४।।

आशिषं परिगृह्यैव नमस्कृत्य सुरान्तकम् ।
कर्दमो नाम दैत्योऽथ ययौ व्यूहं रथाकृतिम् ।।२५।।

दीर्घदन्तो ययौ चक्रव्यूहं परमदुर्जयम् ।
गरिम्णा वीरमुख्यैस्तु रचितं वीरमोहनम् ।।२६।।

प्रथिम्ना पालितं व्यूहं तालजङ्घो ययौ मुदा ।
महिम्ना रचितं व्यूहं यक्ष्मनामा समाययौ।।२७।।

प्राप्त्या विरचितं व्यूहं ययौ घण्टासुरो महान् ।
प्राकाम्यरचितं व्यूहं रक्तकेशो बलान्वितः ।।२८।।

कालान्तको ययौ व्यूहं वशितारचितं परम् ।
ईशितारचितं व्यूहं दुर्जयोऽभिययौ बली।।२९।।

तेषां वचसाऽशक्यं वक्तुं सामर्थ्यमञ्जसा।
अष्टौ व्यूहानयुध्यन्त दैत्या अष्टौ महाबलाः।।३०।।

सेनाको समूहलाई देखेर मनमनै विचार गऱ्यो 'अकस्मात् यो विशाल सेना कहाँबाट आइपुग्यो ? अवश्य पनि बालक गणेशको मायाद्वारा यस सेनाको रचना भएको हुनुपर्छ । आज मैले त्यस बालकको विचित्र शक्ति देख्ने मौका पाएँ ।।२१।। युद्ध त गर्नैपऱ्यो, कि मर्नेछु कि मार्नेछु, दुइटा कुरामा एउटा कुरा अवश्य हुन्छ । रणभूमिमा प्राणत्याग गर्नु उचित हुन्छ तर कीर्तिको त्याग गर्नु उचित हुँदैन ।' यसरी दैत्यराजले मनमा विचार गरिरहेको बेलामा त्यसका सेनापतिहरू आएर भन्न थाले– 'हे महाराज ! गणेशको सेनासँग हामी लड्न तयार छौं । पछाडिबाट हजुरले रक्षा गर्नुहोस्, हाम्रो अवश्य विजय हुनेछ ।।२२-२३।।' सेनापतिहरूको वाक्य सुनेर देवान्तकले भन्यो – 'हे महावीरहरू! तिमीहरूले राम्रो कुरा भन्यौ । तिमीहरू युद्ध गर्न अगाडि बढ। म पछिपछि आउँछु । मेरो आशीर्वादले पुण्यकर्म गर्ने तिमीहरूको विजय हुनेछ ।।२४।।' यसरी आशीर्वाद लिएर देवान्तकलाई प्रणाम गरी कर्दमनामक दैत्य रथव्यूह बनाएर अगाडि बढ्यो । त्यसपछि दीर्घदन्तनामक सेनापति पनि अजेय चक्रव्यूह बनाएर अगाडि बढ्यो। त्यस बेला गरिमानामक शक्ति र तिनका वीरहरूले देवान्तकका वीरहरूलाई मोहित गराउन मायाको प्रयोग गरे । प्रथिमानामक शक्तिले आफ्ना सैनिकहरूका चक्रव्यूहको रक्षा गरिन् । तिनका साथमा युद्ध गर्न तालजङ्घनामक दैत्यसेनापति सहर्ष विचरण गरिरहेको थियो । महिमानामक शक्तिले चक्रव्यूहको रचना गरिन् । तिनका साथमा युद्ध गर्न यक्ष्मनामक दैत्यसेनापति खटिएको थियो ।।२५-२७।। प्राप्तिनामक शक्तिले त्यस्तै चक्रव्यूहको रचना गरिन् र तिनका साथमा युद्ध गर्न घण्टासुरनामक दैत्य नियुक्त भएको थियो । प्राकाम्यनामक शक्तिले चक्रव्यूहको रचना गरिन् र तिनका साथमा युद्ध गर्न शक्तिशाली दैत्ययोद्धा रक्तकेश हिंडिरहेको थियो । वशितानामक शक्तिले चक्रव्यूहको रचना गरिन् । तिनका साथमा युद्ध गर्न कालान्तकनामक दैत्य हिंडिरहेको थियो । ईशितानामक शक्तिले पनि चक्रव्यूह बनाइन् र तिनका साथमा युद्ध गर्न दुर्जयनामक दैत्य हिंडिरहेको थियो । उक्त शक्तिहरूको सामर्थ्य वचनले बताएर सकिंदैन । आठ प्रकारका व्यूहको रचना भयो । आठ व्यूहमा आठ जना महाबली दैत्यहरू युद्ध

परस्परं विनिघ्नन्तः परान् परमदुर्जयान् ।
शरधारा विमुञ्चन्तो जलधारा यथा घनाः।।३१।।

चिच्छिदुरुत्तमाङ्गानि शस्त्रैर्नानाविधैर्भटाः।
निहतैश्च तदा वीरैर्गजैरश्वैर्वसुन्धरा ।।३२।।

ऊरुभिर्जानुभिर्हस्तैश्छिन्नैरासीत् सुदुर्गमा।
खेटानि पुरतः कृत्वा जघ्नुः पादाँश्च केचन ।।३३।।

उड्डीय गिरिवत् केचित् पेतुर्वीरेषु चूर्णितुम् ।
रजोऽन्धकारे नाज्ञासीत् स्वीयः स्वीयं परस्परम् ।।३४।।

ततो निपेतुः सहसा दैत्या देवहता भुवि।
देवा हताश्च दैत्याश्च कुर्वते भैरवान् रवान् ।।३५।।

कबन्धा युयुधुस्तत्र मुमुदुश्चाप्सरोगणाः।
शुशुभुः शस्त्रसङ्घातैः पुष्पिताः किंशुका यथा ।।३६।।

शुक्रस्तत्र मृतान् दैत्यानुज्जीवयति विद्यया।
अष्टौ व्यूहा ययुश्चिन्तां मृतशेषा बलान्विताः ।।३७।।

ईशितायै ततः प्रोचुः सर्वे ते शुक्रचेष्टितम् ।
तस्याः क्रोधवशादेका कृत्यास्यान्निर्गता पुरः ।।३८।।

कटाक्षेण तयाऽऽज्ञप्ता भार्गवं तु निजे भगे।
कृत्वा तदाऽन्तर्दधे सा पश्चात् तत्याज बर्बरे ।।३९।।

गरिरहेका थिए ।।२८-३०।। ती दैत्य र सिद्धिका व्यूहहरूमा रहेका वीरहरूले परस्परमा प्रहार गर्दै भयङ्कर युद्ध गरे । त्यहाँ गरिएको युद्धमा बाणका धाराहरू वर्षाकालीन मेघको धाराझैं बर्सिरहेका थिए । वीरहरूले अनेक शस्त्रहरूबाट एक-अर्काका टाउका काटिरहेका थिए । साधन-वाहनको सर्वनाश भइरहेको थियो । मरेका वीर, हात्ती र घोडाले पृथिवी ढाकिएको थियो । वीरहरूका काटिएका जाँघ, घुँडा र हातजस्ता अङ्गहरूका कारण रणभूमि दुर्गम बनेको थियो । कसैले ढाल अगाडि तेर्स्याएर शत्रुहरूका खुट्टा काटिरहेका थिए, कुनै वीर उडेर पर्वतबाट पहिरो गएझैं अरू वीरहरूलाई धूलो-धूलो बनाइरहेका थिए । चारैतिर धूलो उडेको थियो । कसैले पनि कसैलाई चिन्न सक्ने परिस्थिति थिएन ।।३१-३४।। देवसेनाद्वारा हत्या गरिएका दैत्यहरू धमाधम भुइँमा लडिरहेका थिए । घाइते भएका देवता र दैत्यहरू पीडाले छट्पटिएर घोर क्रन्दन गरिरहेका थिए ।।३५।। युद्धको अवस्थामा काटिएका टाउकाहरू एक-आपसमा जुझिरहेका थिए । अप्सराहरूले देवसेनाको विजयको उपलक्ष्यमा खुसियाली मनाए। विजयी वीरहरू शस्त्र समूहद्वारा चम्किए । युद्धको अवस्थामा लागेको रगतका कारण सबै वीर फुलेका पलाशका फूलजस्ता देखिन्थे ।।३६।। त्यस बेला एउटा विचित्र घटना घट्यो । दैत्यका गुरु शुक्राचार्य त्यहाँ आइपुगे । तिनले मरेका सम्पूर्ण दैत्यवीरहरूलाई सञ्जीवनी विद्याको प्रयोग गरेर ब्यूँताए। त्यो देखेर सिद्धिका आठै व्यूहका जीवित वीरहरू चिन्तित भए । सातवटी शक्तिले मिलेर आठौं शक्ति ईशितासँग शुक्राचार्यले गरेको क्रियाकलाप बताए । त्यसपछि ईशिता रिसाइन् र तिनले आफ्नो मुखबाट राक्षसकै आकारकी एउटी कृत्या पैदा गरिन् । ती कृत्या त्यहाँबाट निस्किएर युद्धमैदानततर्फ लागिन् ।।३७-३८।। ईशिताको आँखाको ईशारा पाएकी तिनले शुक्राचार्य भएको ठाउँमा गएर तिनलाई समाती आफ्नो योनिभित्र घुसाएर च्यापिन् । त्यसपछि ती त्यहाँबाट अन्तर्धान भइन् । तिनले अरब देशको मरुभूमिमा गएर आफ्नो योनिभित्र च्यापिएका शुक्राचार्यलाई फ्याँकिदिइन् ।।३९।। यस कारण

तेन बर्बरदेशीयं तं वदन्ति मनीषिणः।
ततो मुमुदिरे देवा युयुधुश्च बलान्विताः।।४०।।

निहन्यमाना दैतेयाः पलायनपरा ययुः।
केचिच्च शरणं प्राप्ता रक्ष रक्षेति चापरे।।४१।।

प्रत्यूचुर्देवगन्धर्वानणिमादिकृताँस्तदा ।
कदा विजयिनो दैत्याः कदाचिद् देवतागणाः।।४२।।

अभवन् युद्धनिरताः परस्परजयैषिणः ।
द्वन्द्वयुद्धमभूद् घोरं तस्मिन्नुपरते युधि।।४३।।

नै मानिसहरू शुक्राचार्यलाई बर्बर देशमा पैदा भएका दैत्यगुरु भनेर चिन्दछन् । शुक्राचार्य फ्याँकिएपछि देवताहरू खुसी भए। देवताहरूद्वारा अनेकौं दैत्य मारिए । युद्धमा घाइते भएका दैत्यहरू भाग्न थाले। केही दैत्यहरू हाम्रो रक्षा गर भन्दै देवसेनाको शरणमा आए ।।४०-४१।। तिनीहरूले आएर अणिमा आदि शक्ति, देवता र गन्धर्वहरूले गरेको पुरुषार्थको बयान गरे । युद्ध चलिरहेकै थियो । त्यसमा कहिले देवताहरू विजयी हुन्थे भने कहिले दैत्यहरूको विजय हुन्थ्यो । दुबै पक्ष विजय प्राप्त गर्न लालायित थिए । शस्त्र-अस्त्रको युद्ध गरी थाकेपछि दुबैतर्फका वीरहरू मल्लयुद्ध गर्ने गर्दथे ।।४२-४३।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे बालचरिते शुक्रत्यागो नाम त्रिषष्टितमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'कृत्याद्वारा शुक्राचार्यलाई देशनिकाला' शीर्षकान्वित त्रिसट्ठीऔं अध्याय पूर्ण भयो ।।६३।।

ॐ

## चतु:षष्टितमोऽध्याय: { ६४ अध्याय }

क उवाच

कालान्तकेन दैत्येन प्राकाम्येन परस्परम् ।
कालान्तको विजयते प्राकाम्यं यावदेव हि।।१।।

तावत् साहाय्यमकरोद् वशित्वं वेगवत्तरम् ।
तत्याज गिरिशृङ्गं तन्मस्तके हस्तलाघवात् ।।२।।

तेन कालान्तको भूमौ सहसा निपपात ह।
रुधिराक्तं द्विधाभूतं दृष्ट्वा कालान्तकं तदा।।३।।

हाहाकारो महानासीद् दैत्यसेनाचरेष्वथ।
मुसलो नाम दैत्येशो भल्लश्चैबापरोऽसुर:।।४।।

महिमा चैव चत्वारो ययुर्युद्धाय सादरा:।
प्राकाम्येन युयुधिरेऽनेकशस्त्रप्रहारिण: ।।५।।

असङ्ख्याता हता देवा: पतिता भग्नवृक्षवत् ।
असृग्जलप्रवाहिन्य आसन् नद्य: सहस्रश:।।६।।

ईशिता च वशित्वञ्च विभूतिश्च ययुस्तत:।
साहाय्यञ्चक्रिरे तस्य प्राकाम्यस्य तदा युधि।।७।।

चत्वार: पर्वतास्ताभिश्चतुर्ष्वपि निपातिता:।
तैश्च ते चूर्णिता: सर्वे गता: स्वर्गं सुदुर्लभम् ।।८।।

अणिमा तु शिखां धृत्वा कर्दमस्य रणे बलात् ।
अपाटि सहसा भूमौ शतधा स व्यशीर्यत ।।९।।

अस्रवद् रुधिरं वक्त्राल्लुठन् प्राणान् जहौ तदा।
महिमा लघिमा चैव गरिमा वृक्षसञ्चयै: ।।१०।।

यक्ष्मासुरं तालजङ्घं दीर्घदन्तं न्यपातयन् ।
ततो घण्टासुरो रक्तकेशो दैत्योऽथ दुर्जय:।।११।।

आययु: सर्वसैन्यानि निश्वसन्तो महाबला:।
तैराहतं बलं दृष्ट्वा वशितासिद्धिबुद्धय:।।१२।।

मुष्टिघातैर्निजघ्नुस्तान् भालदेशे दृढं तदा।
तेऽपि भूमौ निपतिता: शतधा चूर्णितास्तदा ।।१३।।

**ब्रह्माजीले भन्नुभयो** – कालान्तक दैत्य प्राकाम्य नामक सिद्धिसँग लडिरहेको थियो । जुन बेला कालान्तकले प्राकाम्यमाथि विजय गर्न खोज्दथ्यो त्यस बेला वशित्वनामक शक्तिले सघाउँथिन्। वशित्वले आफ्नो हस्तकौशलबाट कालान्तक दैत्यको टाउकामा पर्वतको चुचुराले प्रहार गरिन् ।।१-२।। त्यस प्रहारबाट त्यो दैत्य भुइँमा लड्यो । दुई टुक्रा भएको त्यसको शरीर रगताम्य थियो ।।३।। दैत्य सैनिकहरूले हाहाकार गरे । त्यसपछि मुसल र भाला भिरेका कुनै एक योद्धा महिमासिद्धिलाई लिएर युद्ध गर्न अगाडि बढे । प्राकाम्यका साथमा शस्त्र-अस्त्र भिरेका अरू दैत्यहरूले युद्ध गरे । त्यस युद्धको अवसरमा दैत्यवीरहरूले असंख्य देवताहरूको वध गरिसकेका थिए । मारिएका देवताहरू हावाले ढलाइएका रूख भुइँमा लडेझैं लडेका थिए र रगतको खोला बगेको थियो । त्यस ठाउँमा प्राकाम्यको पराजयलाई महसुस गरेर तिनलाई सघाउन ईशिता, वशिता र विभूतिनामक शक्तिहरू अगाडि बढे। तिनले प्राकाम्यलाई सघाए । त्यस क्रममा ती शक्तिहरूले चारवटा विशाल पर्वत उखेलेर चारै दिशामा फ्याँकिका थिए। पर्वतहरूको प्रहारबाट टुक्रा-टुक्रा भएका दैत्यसेनाका वीरहरूले दुर्लभ स्वर्ग प्राप्त गरे । अणिमा शक्तिले कर्दमनामक दैत्यको टुपी समातिन् र त्यसको शरीरलाई दुई फ्याँक पारिन्। त्यसपछि प्रहार गर्दा त्यसको शरीर पनि टुक्रा-टुक्रा भएर फैलियो । मुखबाट रगतको धारा बगाउँदै त्यसले प्राणत्याग गर्‍यो । महिमा, लघिमा र गरिमानामक शक्तिहरूले यक्ष्मासुर, तालजङ्घ र दीर्घदन्तानामक दैत्यहरूमाथि रूखहरू उखेलेर प्रहार गरे । त्यसपछि घण्टासुर, रक्तकेश र दुर्जयनामक दैत्यहरू आफ्ना सैनिकहरू लिएर आए । तिनले देवसेनामा हानि पुर्‍याए । त्यो देखेर वशिता, सिद्धि र बुद्धिनामक शक्तिहरूले आई मुड्कीले प्रहार गरेर ती दैत्यहरूलाई मारे । तिनका शरीर भुइँमा खसी टुक्राटुक्रा भएका थिए ।।४-१३।। त्यसपछि ती सबै शक्तिहरूले विजय

ततो जगर्जुः सर्वास्ता जयं लब्ध्वा स्वशक्तितः।
विनायको विजयते सर्वास्ता एवमूचिरे ।।१४।।

अन्ये क्षुद्रतरा दैत्यास्तेऽपि ताभिर्विनाशिताः।
पुनः सर्वे दैत्यसिंहाः सिद्धिसेनां व्यनाशयन् ।।१५।।

कोलाहलो महानासीत् सेनयोरुभयोरपि ।
हन्तु निघ्नन्तु बध्नन्तु सावधाना भवन्त्विति ।।१६।।

प्रादुरासीत् ततश्चाग्निः शस्त्रसङ्घट्टसम्भवः।
भग्ने शस्त्रे मल्लयुद्धञ्चक्रुर्वीरा रुषान्विताः।।१७।।

पुनश्चानियतं युद्धं परस्परविनाशनम् ।
अभवत् तुमुलं सूर्यस्ततश्चास्ताचलं गतः।।१८।।

अन्धकारेण महता दिशो व्याप्ताः समन्ततः।
ततो दिव्यौषधीर्गृह्य निजघ्नुस्ते परस्परम् ।।१९।।

अहोरात्रत्रयं घोरं युद्धमासीन्निरन्तरम् ।
असृङ्नद्यो दश दिशो याता वीरवहास्तदा ।।२०।।

खेटकूर्माः खड्गझषाः शिरःकमलशोभिताः।
गजग्राहाः प्रेतकाष्ठाः केशशैवलराजिताः ।।२१।।

भीरुभीतिकरा वीरमहाहर्षविवर्धनाः।
ततो जयत्सु देवेषु सर्वदा बलशालिषु।।२२।।

देवान्तको ययौ चिन्तां तर्कयामास चेतसि।
येन सर्वे देवगणा जितास्ते स्वप्रभावतः।।२३।।

प्राप्त गरेको उपलक्ष्यमा घोर गर्जन गरे । सबैले भने - 'अब भगवान् श्रीगणेशको जय हुन्छ। यसमा कुनै सन्देह छैन।।१४।।' अरू साना-साना दैत्यहरू पनि जोरी खोज्दै लड्न आएका थिए, तिनलाई पनि ती शक्तिहरूले समाप्त पारे । त्यसको केही बेरपछि दैत्यपक्षका वीरहरूले सिद्धिको सेनामा आक्रमण गरी क्षति पुऱ्याए।।१५।। युद्धको अवसरमा दुबै पक्षका सैनिकहरूले घोर कोलाहल गरिरहेका थिए । हान, मार, बाँध र सावधान होऊजस्ता शब्द जहाँसुकै सुनिन्थे ।।१६।। शस्त्र-शस्त्रको संघर्ष हुँदा युद्धको मैदानमा आगो बल्यो । शस्त्रहरू समाप्त भएपछि रीस बाँकी रहेका योद्धाहरू मल्लयुद्ध गर्दै थिए ।।१७।। त्यो मल्लयुद्ध धेरै कालसम्म चल्यो । सूर्य उदाए, अस्ताए पनि तर दुबै पक्षका वीरहरूको मल्लयुद्ध चलिरहेको थियो । अन्धकारले दसै दिशा ढाक्यो । मल्लयुद्ध गरिसकेपछि थाकेका वीरहरूले आफ्नो शक्तिद्वारा दिव्य औषधि ग्रहण गरी स्वस्थ बनेर एक-आपसमा प्रहार गर्न थाले ।।१८-१९।। तीन अहोरात्रसम्म निरन्तर युद्ध चल्यो । दसै दिशामा रगतका नदी बग्न थाले । ती नदीहरूमा मरेका वीरहरूका लाश बगिरहेका थिए ।।२०।। नदीभित्र बगेका ढालहरू कछुवाको आकारका देखिन्थे । बगिरहेका तलवारहरू माछाको रूपमा देखिन्थे । वीरका टाउकाहरू कमलका फूलझैं लाग्दथे । युद्धको मैदानमा मरेर रगतको नदीमा बगिरहेका हात्तीका लाशहरू समुद्रका गोहीजस्ता देखिन्थे । त्यसैगरी युद्धमा मरेका वीरहरूका लाशहरू नदीमा हुने काठजस्ता पनि देखिन्थे । वीरहरूका केशका रौंहरू नदीमा पाइने सेवारजस्तै देखिन्थे । रगतको नदीले कमजोर आत्मबल भएका मानिसहरूलाई भयभीत गराइरहेको थियो, तर वीरहरू भने हर्षले अत्यन्त उत्साहित देखिन्थे । त्यस युद्धमा दानवहरू भन्दा शक्तिशाली देखिएका देवताहरूले विजयोत्सव मनाइरहेका थिए ।।२१-२२।। देवान्तक दैत्यले देवताहरूको विजयोत्सव देखेर चिन्तित भई मनमनै भन्यो - 'जसले सबै देवगणलाई कुनै समयमा आफ्नो वशमा पारेको थियो त्यो देवान्तक आज हारिरहेको छ । गणेशनामक बालकको कस्तो विचित्र शक्ति रहेछ ? यो शक्तिलाई असामान्य मोहिनी शक्ति

क्वेयं तत्र बालमाया सामान्या जनमोहिनी।
अष्टसिद्धीः सर्वसैन्यमिदानीं नाशयाम्यहम् ।।२४।।

धृत्वा विनायकं बालं गमिष्यामि स्वमालयम् ।
एवमुक्त्वा खड्गपाणिः स्वनेनापूरयन् दिशः।।२५।।

आययौ परसैन्यानि निघ्नन् खड्गेन सर्वशः।
भयेन मूर्च्छिता देवा निपेतुर्धरणीतले ।।२६।।

स्मृत्वा विनायकं देवं जहुः प्राणाँस्तु केचन।
असृङ्नदीवहाः केचित् केचित् स्वर्ग गताः सुराः।।२७।।

केचिद् दैत्यं विलोक्यैव जहुर्जीवितमात्मनः।
ततो भग्ना देवसेना पपाल च दिशो दश ।।२८।।

सोऽपि दैत्यः खड्गपाणिर्निघ्नन् पृष्ठे जघान ताम् ।
गरिमा तन्निरीक्ष्याथ पर्वतं वृक्षसङ्कुलम् ।।२९।।

तत्याज दैत्यदेहे स खड्गेन शतधाऽच्छिनत् ।
ततोऽष्टसिद्धयः क्षुब्धा ववृषुः पर्वतान् बहून् ।।३०।।

चिच्छेद त्वरया तान् स खड्गाघातेन लाघवात् ।
उड्डीय महिमा तस्य स्कन्धे स्थित्वा तमाददे ।।३१।।

खड्गं दैत्यकराच्छीघ्रमन्तर्द्धानं ययौ तदा ।
बलाच्चिक्षेप तं खड्गं तस्य दैत्यस्य मस्तके ।।३२।।

स एवं शतधा जातो न तु मूर्धा तदद्भुतम् ।
शरवृष्टिं तदा दैत्यो भग्नपृष्ठश्चकार ह ।।३३।।

मान्नुपर्दछ । आठ प्रकारका सिद्धि र तिनका सैनिकहरूले पनि गणेशको सेनालाई सघाइरहेका छन् । म अब ती सबैको नाश गर्नेछु ।।२३-२४।। बालक गणेशलाई हातमा समाती म अब आफ्नो दरबारमा जानेछु ।' यसरी मनमनै कुरा गरी हातमा तरबार लिएर गर्जनद्वारा दसै दिशालाई प्रतिध्वनित गर्दै त्यो दैत्य रणभूमिमा अगाडि बढ्यो। त्यसले तलवार नचाइरहेको थियो र देवसेनाका वीरहरूलाई काटिरहेको थियो। देवान्तकले आफ्नो पराक्रम देखाएपछि डराएर केही देवताहरू बेहोश भई भुइँमा लडे ।।२५-२६।। केही देवताहरू त भगवान् श्रीगणेशको ध्यान गरी प्राणत्याग गर्न विवश भए । केही रगतको नदीमा बगे भने केही स्वर्गमा पुगे । केही देवताहरूले दैत्यराज देवान्तकको विशाल शरीर देखेर डराई प्राणत्याग गरे। यसरी देवान्तकको पराक्रमबाट देवसेनाका सैनिकहरू छिन्नभिन्न भई दसै दिशातर्फ भागे ।।२७-२८।। त्यस युद्धमा देवताहरू भागिरहेका थिए र देवान्तकले हातमा तरबार लिएर तिनलाई पछ्याइरहेको थियो । सन्मुखमा युद्ध गर्न नपाए तापनि त्यसले पछाडिबाट पिठ्यूँमा प्रहार गरिरहेको थियो । देवान्तकको यस्तो पराक्रम देखेर अष्टसिद्धिमध्येकी एउटी गरिमानामक सिद्धिले रूखसमेत रहेको विशाल पर्वतलाई उखेलिन् र देवान्तक दैत्यको शरीरमा प्रहार गरिन् । त्यसलाई पनि देवान्तक दैत्यले तरबारद्वारा सय टुक्रा पारिदियो । गरिमाको उपाय निष्फल भएपछि सिद्धिहरू क्षुब्ध भए र तिनले अनेक थरि पर्वत उखेलेर दैत्यमाथि प्रहार गर्न लागे ।।२९-३०।। त्यस दैत्यले पनि आफ्नो युद्धकुशलता देखाएर तरबारकै प्रहारद्वारा ती सबै पर्वत र रूखलाई छिन्न-भिन्न तुल्यायो । त्यसपछि महिमानामक शक्ति उडेर त्यसको काँधमा गई बसिन् ।।३१।। ती शक्ति त्यसका हातको तरबार तानेर अन्तर्धान भइन् र लुकेर नै तिनले त्यसबाट खोसेका तरबारले त्यसकै टाउकामा प्रहार गरिन् । तर त्यो तरबार पनि सय टुक्रा भयो र त्यसको टाउकोमा कुनै असर परेन। यसरी जिस्काइएको दैत्यले भयङ्कर बाणवर्षा गर्‍यो। एक- एक दिशामा क्रमशः पाँच, सात र दशवटा बाण प्रहार गरी ती

एकैकस्यां दशदशपञ्चसप्तशरानसौ ।
क्षिप्त्वा व्याकुलयाञ्चक्रे ततस्ता भुवि पेतिरे।।३४।।

ततो देवा युयुधिरे पतितास्वष्टसिद्धिषु ।
मुहूर्तात् सावधानास्ता ययुर्देवं विनायकम्।।३५।।

वृत्तान्तं परिज्ञाय बुद्धिः प्रोचे विनायकम् ।
कथं विचारस्तस्य स्याद् यत्र बुद्धिर्न दृश्यते ।।३६।।

पराजिता: सिद्धयस्ते देह्यनुज्ञां व्रजाम्यहम् ।
योत्स्ये दैत्येन तेनाथ पौरुषञ्चास्य लक्षये।।३७।।

सबै सिद्धिहरूलाई त्यसले व्याकुल बनायो । ती सिद्धिहरू पनि मूर्च्छित भई भुइँमा लडे।।३२-३४।। अष्टसिद्धिहरूको शक्ति क्षीण भएको देखेर अरू देवताहरू आई युद्ध गर्न थाले। एक मुहूर्तपछि स्वस्थ भएका ती सिद्धिहरू श्रीगणेशका नजिकमा पुगे ।।३५।। ती सिद्धिहरूबाट सबै घटना थाहा पाएपछि भगवान् श्रीगणेशकी प्रियतमा बुद्धिले उहाँलाई भनिन् - 'जसको बुद्धि हुँदैन त्यसले विचार गर्न सक्दैन । आज तपाईंका सिद्धिहरू पराजित भएका छन्, किनकि त्यहाँ म (बुद्धि) शामेल थिइन। तसर्थ हे नाथ! मलाई युद्ध गर्ने आज्ञा दिनुहोस्, म त्यस दैत्यको पुरुषार्थ हेर्न लालायित छु ।।३६-३७।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे बालचरितेऽष्टसिद्धिपराजयो नाम चतुःषष्टितमोऽध्याय:

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'देवान्तकको सेनासँग युद्ध गर्ने अष्टसिद्धिहरूको पराजय' शीर्षकान्वित चौंसट्ठीऔं अध्याय पूर्ण भयो ।।६४।।

ॐ